# नेपालका सामुदायिक रेडियो

# इतिवृत्तान्त

घमराज लुइँटेल / मधु आचार्य



# नेपालका सामुदायिक रेडियो

# इतिवृत्तान्त

**लेखन**

घमराज लुइँटेल/मधु आचार्य

सामुदायिक रेडियो सहयोग केन्द्र

नेपाल वातावरण पत्रकार समूह

नेपालका सामुदायिक रेडियो

# इतिवृत्तान्त

*लेखन*
घमराज लुइँटेल/मघु आचार्य

*कम्प्युटर/डिजाइन*
बेबिना श्रेष्ठ

*पहिलो संस्करण*
२०६१

*छापिएको प्रति*
१०००

*मुद्रक*
द प्रेस अनलिमिटेड (प्रा) लि, सामाखुसी, फोन: ३५६३९५

*प्रकाशक*
कम्युनिकेसन असिस्टेन्स् फाउन्डेसन (CAF, Netherland) को सहयोगमा सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूह थापाथली, काठमाडौं

# विषय सूची

# हाम्रो भन्नु

सामुदायिक रेडियो नेपाली जनजीवनको अभिन्न अंग बनिसकेको भए पनि यससम्बन्धी अहिलेसम्म कुनै आधिकारिक दस्तावेज तयार हुन सकेको छैन । सामुदायिक रेडियोका विविध सैद्धान्तिक पक्ष समेटेर केही पुस्तकहरू सार्वजनिक नभएका होइनन् तर यिनले सामुदायिक रेडियोहरूको यथार्थ विवरण भने छोएका छैनन् । नेपालमा सामुदायिक रेडियोसम्बन्धी अध्ययन र अनुसन्धान गर्न चाहने व्यक्तिहरूका लागि सन्दर्भ सामग्रीहरूको अभाव छ । नेपाली सामुदायिक रेडियोहरूको अनुभव समेटिएको दस्तावेजको अभावमा एउटा सामुदायिक रेडियोले भोगेका समस्या, चुनौती र व्यवधान तथा हासिल गरेका अनुभव र उपलब्धिहरूबारे अर्को रेडियो स्टेसन अनभिज्ञ हुँदा प्रायः एकै खालका समस्याहरू पुनरावृत्ति भइरहेको व्यावहारिक अवस्था छ । अर्कोतिर देशबाहिरका सामुदायिक रेडियोप्रति चाख राख्ने विभिन्न व्यक्ति तथा सस्थाहरूले पनि सन्दर्भ सामग्रीहरूको अभावमा नेपालको सामुदायिक रेडियो अभियानबारे यथार्थ जानकारी पाउन गाह्रो परिहेको स्थिति छ । नयाँ सामुदायिक रेडियो खोल्न लागेका र खोल्ने सोच बनाएका समुदायका लागि पनि भइरहेका रेडियोहरूको अनुभवलाई आधार बनाएर आफ्नो भावी रणनीति तय गर्न सन्दर्भ सामग्रीको अभाव देखिन्छ । साथै सरकारलाई पनि सामुदायिक रेडियोहरूले संगालेको अनुभव, यिनले समुदायमा पुऱ्याएको योगदान, भोगेका कठिनाइ र चुनौतीहरूबारे तथ्यपरक विस्तृत जानकारी नभएका कारण सही नीति निर्माण गर्न द्विविधा परेको छ ।

यिनै अभावलाई एक हदसम्म पूरा गर्ने उद्देश्यले सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूहले लेखकहरूलाई सामुदायिक रेडियोहरूको परिचयसम्बन्धी सन्दर्भ सामग्री तयार गर्ने जिम्मेवारी सुम्पियो । यो जिम्मेवारीअनुरुप हामीले २०५४ साल जेठ ९ गतेदेखि सञ्चालन भइरहेको रेडियो सगरमाथालगायत हाल पूर्णरुपमा सञ्चालनमा रहेका ६ वटा सामुदायिक रेडियोहरूको विस्तृत परिचय यो पुस्तकमा समेटेका छौं । यसबाहेक प्रविधि परीक्षणमा रहेका दुईवटा र प्रसारणोन्मुख १२ वटा सामुदायिक रेडियोहरूको सामान्य जानकारी समेट्ने प्रयास गरेका छौं ।

हामीले यो पुस्तकमा प्रविधि परीक्षणमा रहेका दुईवटा र प्रसारणोन्मुख १२ वटा सामुदायिक रेडियोहरूबाहेक पूर्णप्रसारणमा रहेका ६ वटा सामुदायिक रेडियोहरूको ऐतिहासिक पृष्ठभूमि, अभिप्रेरणा, लक्ष, उद्देश्य, संस्थागत संचरचना, कार्यक्रम, जनशक्ति, श्रोता, सामुदायिक सहभागिता, सामाजिक परिवर्तन, निरन्तरता र चुनौतीका आधार बनाएर स्टेसनहरूको पूर्ण परिचय दिने जमर्को गरेका छौं । यो पुस्तकमा समेटिएका तथ्यहरू हामीले स्थलगत भ्रमण, सम्बन्धित स्टेसनहरूका आधिकारिक दस्तावेजहरूको अध्ययन र स्थापनाका विविध पक्षमा संलग्न पदाधिकारीहरू, चासो राख्ने व्यक्तिहरूसँग कुराकानी गरेर संकलन गरेका हौं ।

हाम्रो अध्ययनका आधारमा सरसर्ती हेर्दा, प्रायः सबै स्टेसनहरूले कार्यक्रम अथवा व्यवस्थापनमा समुदायलाई सहभागी गराउने सक्दो प्रयास गरेको देखिन्छ । अग्रणी रेडियो सगरमाथाबाट प्रभावित भएका सबै स्टेसनका कार्यक्रमका ढप र शैली प्रायः समान खालका छन् । तर सबै रेडियो स्टेसनले आफ्नो

समुदायको आवश्यकतालाई ध्यानमा राखी स्थानीय विषयवस्तु र लवजमा कार्यक्रम निर्माण गर्न प्रयास गरेका कारण भिन्नै स्वाद दिएका छन् । यही विविधताले गर्दा केही स्टेसनहरू समुदायमाझ आफ्नो विशिष्ट पहिचान बनाउन सफल छन् र केही यही बाटोको अनुसरण गर्दैछन् ।

स्टेसन सञ्चालन गर्दाका समस्या, चुनौती र अनुभव ठाउँ हेरी आ-आफ्नै खालका भए पनि निरन्तरता र स्थायित्वसम्बन्धी सबैले उस्तै खालको अनुभव संगालेका छन् । समग्रमा हेर्दा सामुदायिक रेडियोहरू प्रसारणमा आएपछि नेपाली समाजमा गाउँ तहसम्म नै सूचना प्रवाहमा क्रान्ति आएको छ ।

अन्तमा, यो पुस्तक तयार गर्ने जिम्मेवारी दिएकोमा नेपाल वातावरण पत्रकार समूह/सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक रघु मैनाली तथा समूहका कार्यकारी निर्देशक ओम खड्काप्रति हामी आभारी छौं । साथै तथ्य संकलनका क्रममा सहयोग पुऱ्याउने सम्पूर्ण रेडियो स्टेसनका सञ्चालक समिति, स्टेसन म्यानेजर, पूर्व पदाधिकारीहरू कार्यक्रम निर्माता र संचालक तथा शुभेच्छुकहरूलाई सहयोगका लागि हृदयदेखि नै धन्यवाद ज्ञापन गर्दछौं ।

यो पुस्तकमा काम गर्दाका क्रममा केही कमीकमजोरी भएका हुन सक्छन् । हेरेर सुझाव दिनहुन पनि अुनरोध गर्छौं । धन्यवाद ।

*लेखकहरू:*
*घमराज लुइँटेल मधु आचार्य*
*२०६१।३।८*

## १. ऐतिहासिक पृष्ठभूमि

नेपालमा २०४६ सालको ऐतिहासिक जनआन्दोलनको परिणामस्वरुप बहुदलीय प्रजातन्त्रको पुनर्स्थापना भयो । यो जनआन्दोलनको उपलब्धिका रूपमा २०४७ सालको प्रजातान्त्रिक संविधान जारी भयो । संविधानले सबै नागरिकलाई लेख्ने र बोल्ने स्वतन्त्रताको प्रत्याभूति दिलायो । संविधानको यो प्रावधानले पञ्चायतीकालमा खुम्चेर रहेका पत्रपत्रिकाको विकास क्रमश: हुन थाल्यो । तर प्रसारणमा भने सरकारद्वारा नियन्त्रित रेडियो नेपालले झन्डै आधा दशकदेखि आधिपत्य र एकाधिकार जमाइरहेको थियो । संविधानमा प्रजातन्त्र आएको भए पनि वास्तविक जनताका लागि प्रसारणमा प्रजातन्त्र आउन सकेको थिएन । पञ्चायती व्यवस्थामा जस्तै रेडियो नेपाललाई सत्ताको प्रशस्ति गाउनमै सीमित गरिएको थियो । नीति, निर्माता र शासकसम्म जनताका आवाज जस्ताको तस्तै पुऱ्याउने माध्यम थिएन । ढिलो खुलेको (२०४१) नेपाल टेलिभिजनको अवस्था पनि यस्तै थियो । विश्वमै पहिलोपल्ट संयुक्त राज्य अमेरिकामा KDKA को स्वतन्त्र प्रसारण सुरु भएको ७० वर्ष भइसकेको थियो ।

संसारभरिकै प्रवृत्तिलाई हेर्ने हो भने पनि तेस्रो विश्व अझ एसियामा प्रसारण माध्यमलाई राज्यले आफ्नै नियन्त्रणमा राख्ने गरेको पाइन्छ । दक्षिण एसियाको सबैभन्दा पुरानो र ठूलो प्रजातान्त्रिक देश भारतमै पनि प्रसारण माध्यमलाई सरकारले आफ्नो नियन्त्रणबाट बाहिर जान दिएको थिएन । अरु देशको पनि अवस्था यस्तै थियो । नेपाल पनि यसबाट अछुत थिएन । तर नेपाल अधिराज्यको संविधान विश्वकै केही उत्कृष्ट उदार प्रजातान्त्रिक संविधानमध्येको एक थियो ।

पञ्चायती शासनको अन्त्यतिर २०४५ सालमा जारी गरिएको सञ्चार नीति पञ्चायतलाई नै मलजल गर्ने र पञ्चायतप्रति वफादार पत्रकारिताको विकास गर्ने खालको थियो जुन प्रजातान्त्रिक व्यवस्थामा स्वीकार्य हुने कुरै थिएन । प्रजातान्त्रिक सरकारलाई नयाँ उदार सञ्चार नीति बनाउन दबाब परिरहेको थियो । यही पृष्ठभूमिमा निर्वाचित सरकारले तत्कालीन राष्ट्रिय सभाका सदस्य नरहरि आचार्यको संयोजकत्वमा राष्ट्रिय सञ्चार नीति मस्यौदा कार्यदल गठन गऱ्यो ।

संयोगवश, यो कार्यसमितिमा सञ्चार क्षेत्रका तर्फबाट नेपाल वातावरण पत्रकार समूहका तत्कालीन महासचिव राजेन्द्र दाहाल सदस्यमा मनोनीत हुनुभयो । नेपालमा एफएम प्रविधिको रेडियो भित्र्याउनका लागि भएका प्रयासको पहिलो कडी वा खुड्किला नै राजेन्द्र दाहालको मनोनयन हुन पुग्यो । २०४८ सालको अन्त्यतिर कार्यदल गठन भएको थियो । त्यो बेलाका कुरा सम्झँदै राजेन्द्र दाहाल भन्नुहुन्छ- “एफएम प्रसारण भविष्यको एउटा सबैभन्दा बढी किफायती, बढी लोकप्रिय र अझ नेपालको सन्दर्भमा अझ बढी उपयोगी हुन सक्छ त्यसमा जानुपर्छ भनेर हामी छलफल गर्थ्यौं ।” तर कार्यदलका धेरै मान्छेका लागि यो आश्चर्यको विषय बन्न पुगेछ । अनुदार प्रवृत्ति बोकेका र पञ्चायती व्यवस्थामा पनि ठाउँमै बसेका कर्मचारी वर्गलाई यो कुराले झस्काएको थियो । उनीहरू रेडियो निजी क्षेत्रमा दिने कुराको कल्पनासम्म गर्न सक्दैनथे । दाहाल भन्नुहुन्छ- “कतिपयलाई हाम्रा कुराले आश्चर्यमा पारेको थियो र भन्थे, के भनेको होला यो, रेडियो पनि निजी क्षेत्रलाई दिने, यो अलि गैरजिम्मेदार कुरा भयो, तर कुरा गर्दै जाँदा सबैभन्दा बढी कार्यदलका संयोजक नरहरि आचार्य सकारात्मक देखिनुभयो । उहाँका लागि यो विषय नौलो थियो तर उहाँले तुरुन्तै आत्मसात गर्न सक्नुभयो । यसले गर्दा राष्ट्रिय सञ्चार नीतिमा एफएम रेडियोसम्बन्धी व्यवस्था राख्न सकियो ।

दश वर्षसम्मका लागि उपयुक्त भनेर २०४८ सालदेखि काम थालिएको राट्रिय सञ्चार नीति मस्यौदा पूरा हुँदा २०४९ साल भेट्टायो । यो नीति २०४९ सालमै जारी भयो । राष्ट्रिय सञ्चार नीति २०४९ मा एफएम प्रणालीअन्तर्गत निजी क्षेत्रलाई रेडियो प्रसारण गर्न दिनेबारे एक वाक्य परेको थियो । त्यो वाक्य हो- "प्रसारण ऐनअन्तर्गत रही निजी क्षेत्रका संगठित संस्थालाई पनि निश्चित क्षेत्रमा फ्रिक्वेन्सी मोडुलेसन (एफएम) प्रसारण प्रणाली स्थापना गरी शिक्षाप्रद र मनोरन्जनात्मक कार्यक्रम प्रसारण गर्न दिइने ।"

### *१.१ संघर्षका चरणहरू*

नेपाल वातावरण पत्रकार समूहका तत्कालीन कार्यकारी निर्देशक ओम खड्काका अनुसार, समूह सञ्चार क्षेत्रमा रेडियो नेपालको विकल्प चाहिन्छ भन्ने ठान्दथ्यो र राष्ट्रिय सञ्चार नीति आइसकेपछि परीक्षणस्वरुप एफएम रेडियो प्रसारणका लागि सरकारसमक्ष निवेदन हाल्यो । "हामीले एफएम रेडियोबारे सुनेका त थियौं तर एफएम रेडियो कसरी सञ्चालन हुन्छ भन्नेबारे हामीलाई ज्ञान थिएन । नीतिमा भएको व्यवस्था कार्यान्वयन हुँदोरहेछ कि रहेनछ भनेर जाँच गर्न पनि हामीले रेडियो सञ्चालनका लागि निवेदन दियौं । तर ऐन छैन भनेर सरकारी पदाधिकारीले जवाफ दिएपछि फेरि ऐन बनाउने कार्यमा लविङ सुरु गर्‍यौं । ऐन आयो । फेरि निवेदन दियौं । फेरि नियमावली छैन भनेर सरकारले इजाजत दिएन । नियमावलीका लागि पनि लविङ गर्‍यौं । नियमावली पनि आयो । तैपनि विभिन्न बहानामा प्रसारण इजाजत पाउन सकिएन तर पनि रेडियो सञ्चालन गर्ने हाम्रो अठोट झन् दृढ हुँदै गयो । हामी लडी नै रह्यौं," ओम खड्का ती दिन सम्झँदै भन्नुहुन्छ ।

२०४९ सालमै राष्ट्रिय प्रसारण ऐन आयो । तर नियमावली बन्न करिब तीन वर्ष लाग्यो । स्वतन्त्र रेडियोका लागि संघर्ष जारी नै रह्यो । नेपाल वातावरण पत्रकार समूहका लागि रेडियोको प्रसारण इजाजत चुनौती, अभियान र प्रतिष्ठाको विषयसमेत बन्यो । समूहले सकेसम्मको दबाब सरकारलाई दियो । तत्कालीन महासचिव मुरारी सिवाकोटी भन्नुहुन्छ- "लाइसेन्सका लागि लड्ने संस्थाको शक्ति र विश्वसनीयता साथै नेपाल वातावरण पत्रकार समूहका सदस्यहरूको सञ्चार माध्यममा पहुँचका कारण समूहका कुरा प्रचारमा आए । यस्ता कुराले सरकारलाई ठूलो दबाब परेको थियो । अरु कुनै संस्थाले प्रसारण इजाजतका लागि लडेका भए हामीले पाएकोभन्दा पनि ढिलो पाउन सक्थे । वास्तवमा सरकारी पदाधिकारीहरूका लागि यो एउटा ठूलो हाउगुजी नै भएको थियो र चिनजान हुने हाम्रा साथीहरूले सामुदायिक रेडियो भनेको राक्षस नै भित्र्याउन खोजेको होइन, यसले रेडियो नेपालको एकाधिकार जाँदैन भनेर विश्वस्त पार्नुपरेको थियो ।"

राष्ट्रिय सञ्चार नीति २०४९ जारी भएपछि नेपाल वातावरण पत्रकार समूहले एकातिर परीक्षणका लागि एफएम प्रसारणको इजाजत माग गर्‍यो भने अर्कातिर जनशक्ति विकासका प्रयास पनि जारी राख्यो । नेपाल वातावरण पत्रकार समूहको आग्रहमा युनेस्कोको International Programme for Development of Communication (IPDC) ले नेपालमा एफएम रेडियो परियोजनाको सम्भावना र आवश्यकताबारे अध्ययन गर्‍यो । शिक्षा मन्त्रालय युनेस्कोको नेपालस्थित कार्यालय मानिन्छ र शिक्षा मन्त्री प्रतिनिधि । प्राविधिक हिसाबले यो परियोजना श्री ५ को सरकारको अनुरोधमा नेपाल वातावरण पत्रकार समूहका लागि युनेस्कोले तयार पारेको थियो । युनेस्कोले सरकारको सहमतिबेगर कार्य नगर्ने चलनअनुसार यो परियोजनाको अध्ययनपछि '६ महिनाभित्र

कुनै प्रतिक्रिया नजनाएमा स्वत: स्वीकृत भएको मानिनेछ' भन्दै युनेस्कोले सरकारसमक्ष बुझाएको प्रतिवेदनमा काठमाडौंमा रेडियो सगरमाथाजस्ता सामुदायिक एफएम रेडियोको सान्दर्भिकता र आवश्यकता भएको निचोडसहितको सुझाव दियो ।

समूहका तत्कालीन कार्यकारी निर्देशक ओम खड्काका अनुसार, ६ महिनासम्म सरकारले युनेस्कोलाई कुनै प्रतिक्रिया दिएन । फ्रान्सका लागि तत्कालीन शाही नेपाली राजदूत केशवराज झा युनेस्कोका समेत नेपाल प्रतिनिधि हुनुहुन्थ्यो । उहाँले रेडियो सगरमाथा परियोजना नेपालमा लागू गर्नुपर्ने पक्षमा वकालत गर्नुभएपछि युनेस्कोले सो परियोजना कार्यान्वयन गर्ने निर्णय गऱ्यो । यो कुरो २०५१ तिरको थियो ।

नेपाल वातावरण पत्रकार समूहले २०५० देखि नै जनशक्ति विकासका लागि रेडियो कार्यक्रम उत्पादनसम्बन्धी तालिम सञ्चालन गर्न थालको थियो । “हामी जनशक्ति तयार गर्ने र प्रविधिगत क्षमता बढाउने दुवै काममा लागेका थियौं,” ओम खड्का भन्नुहुन्छ ।

रेडियो सगरमाथा परियोजना स्वीकृत भएपछि नेपाल वातावरण पत्रकार समूहले परियोजना सञ्चालनका लागि ३ सदस्यीय कमिटी गठन गऱ्यो । यो कमिटीमा तत्कालीन महासचिव मुरारी सिवाकोटी, तत्कालीन कार्यकारी निर्देशक ओम खड्का र कोषाध्यक्ष रघु मैनाली हुनुहुन्थ्यो । प्राविधिक रुपमा उपेन्द्र अर्यालले सहयोग गर्न थाल्नुभएको थियो । पछिल्लो चरणमा मुरारी सिवाकोटी परियोजना निर्देशक र रघु मैनाली कार्यक्रम संयोजक रहनुभएको थियो ।

तर यही बीचमा रेडियो सगरमाथा परियोजनालाई लाइसेन्स दिनुको सट्टा रेडियो नेपालअन्तर्गत एफएम काठमाडौं बिनाइजाजत प्रसारण गराएर सरकारले एफएम प्रसारणमा समेत आफ्नो बर्चस्व रहेको देखाउने प्रयास गऱ्यो । त्यतिखेरका सञ्चारमन्त्री नेकपा एमालेका प्रदीप नेपाल थिए । उनले आधा दशकदेखि संघर्ष गर्दै आएका जनताका हातमा एफएम रेडियो प्रसारणको इजाजत दिनुको साटो आफ्नै नियन्त्रणमा रहेको रेडियो नेपालबाट २०५२ कात्तिक ३० गतेदेखि गैरकानुनी तवरले एफएम काठमाडौं प्रसारण गराउनु नै बुद्धिमानी ठाने ।

२०५२ सालमा तत्कालीन रेडियो सगरमाथा परियोजनाका उपकरणहरू युनेस्कोको तर्फबाट भन्सार छुटसहित नेपाल भित्रिए । चैतको मध्यतिर युनेस्कोको प्राविधिक टोलीसहित उपकरण जडान गर्न इन्जिनियर मार्टिन एलार्ड बेलायतबाट आउने भएपछि समूहले उपकरण जडान र परीक्षण प्रसारणका लागि चैत १२ गते सूचना तथा सञ्चार मन्त्रालयमा “१८ चैतदेखि उपकरण जडान गर्नुपर्ने भएकाले सोका लागि अस्थायी फ्रिक्वेन्सी पाउँ” भनी अनुरोधसहित निवेदन दियो तर मन्त्रालयले पहिलेजस्तै कुनै जवाफ पठाएन । यतिखेरसम्ममा दर्जनभन्दा बढी पटक मन्त्रालयसँग पत्राचार भइसकेको थियो । समूहले केही जवाफ नदिनुलाई मन्त्रालय सकारात्मक भएको अर्थ निकाल्दै परे कानुनी कारबाही सहनेसम्मको मनस्थिति बनाई चैत १८ देखि प्रविधि परीक्षण गर्ने निर्णय गऱ्यो र २०५२ चैत १८ देखि २१ सम्म कालधाराबाट धुन बजाएर प्रविधि परीक्षणसमेत गऱ्यो । यसका लागि मार्टिन एलार्डसँगै वरिष्ठ प्राविधिक यादव ठाकुर तथा इन्जिनियर रोशन विष्टको महत्त्वपूर्ण योगदान रह्यो ।

तत्कालीन रेडियो सगरमाथा परियोजनाका कार्यक्रम संयोजक रघु मैनालीले यो विषयमा “स्थानीय रेडियो सम्भावना र उपयोगिता” पुस्तकमा लेख्नुभएको छ–

“यो अवधिमा रेडियो नेपालले एफएम काठमाडौंको प्रसारण समय निजी क्षेत्रलाई बेच्यो । सञ्चार मन्त्रालय रेडियो नेपालका हाकिमहरू एफएममा निजी क्षेत्रको सहभागिता भनेको यही हो भन्दै हास्यास्पद प्रचार गर्न थाले ।

सञ्चार माध्यमको विकासमा प्रजातन्त्रलाई खतरा देख्ने शासकहरूलाई ठाडो चुनौती दिने दुस्साहसिक विकल्पमात्र हाम्रासामु थियो । रेडियो प्रसारण सुरु गर्दा कि त जेल यात्राको इतिहास कि त दक्षिण एसियाकै लागि नयाँ तथा प्रेरणादायी इतिहास । ऐन, नियम पल्टायौं, कानुन व्यवसायीहरूबाट सल्लाह लियौं । हामीले इजाजतबिना रेडियो प्रसारण सुरु गर्दा अदालतले दोषी ठहऱ्याएको खण्डमा एक वर्ष कैद वा १० हजार रुपैयाँ जरिवाना वा दुवै भोग्नुपर्ने रहेछ । हदैसम्मको सजाय सहन पनि हामी मन्जुर भयौं । "चार दिनसम्म कालधाराबाट" अवैधानिक तरंग काठमाडौंको आकाशमा फाल्यौं । मन्त्रालयले धम्क्यायो, पुर्जी काट्यो, हामीले जमेर जवाफ दियौं । रेडियो सगरमाथा अभियानको पाँच वर्ष लामो प्रयास, सरकारी निर्णयहीनता तथा कारबाहीको धम्की सबै कुरालाई सार्वजनिक गऱ्यौं । साथमा अदालतमा जानका लागि रिट निवेदनको तयारीतर्फ पनि लाग्यौं ।"

सूचना तथा सञ्चार मन्त्रालयले २० गतेको मितिमा २३ गते ३ बुँदे स्पष्टीकरण नेपाल वातावरण पत्रकार समूहको नाममा सोधेर पत्र पठायो । सो पत्र यस्तो थियो- "२०५२ चैत्र २० र २१ गते एफएमको १०२ मेगाहर्जमा रेडियो प्रसारण सुनिएको र सो प्रसारण त्यस संस्थाबाट भएको बुझिएको हुँदा देहायको विषयमा ३ दिनभित्र यथार्थ विवरण यस मन्त्रालयमा दिनुहुन आदेशानुसार अनुरोध छ । १) एफएम प्रणालीबाट प्रसारण इजाजत प्राप्त नगरी के कुन कारणबाट के कस्तो कार्यक्रम किन प्रसारण गर्नुभएको हो ? २) रेडियो प्रसारण गर्ने इजाजत कहाँबाट कसरी प्राप्त गर्नुभएको हो ? ३) रेडियो प्रसारण गर्ने ट्रान्समिटरलगायत अन्य सामानहरू कहाँबाट के के ल्याउनुभएको छ र सो को इजाजत कहाँबाट प्राप्त भएको हो ?"

त्यतिखेर सूचनाको स्वतन्त्र प्रवाहका लागि संघर्षरत अधिवक्ता सतीशकृष्ण खरेलका अनुसार, यो स्पष्टीकरणको उत्तरमा समूहले आफ्नो कुनै पनि पत्रको उत्तर नदिएर मौन मन्त्रालयसँग अस्थायी फ्रिक्वेन्सी माग गरिएकोमा कुनै प्रतिक्रिया नजनाएपछि बाध्य भएर परीक्षण गर्नुपरेको र हामीले प्रसारण गरेको तरंगमा कुनै पनि सन्देश नभएका कारण यो प्रसारण नै होइन, त्यसैले यसलाई गैरकानुनी भन्न मिल्दैन भन्ने व्यहोराको प्रत्युत्तर पत्र लेखेपछि मन्त्रालय फेरि पनि चुपचाप बस्यो । एक वर्ष त्यत्तिकै बित्यो । यो मौनतामा सरकारको नकारात्मक भावनासमेत कायमै थियो ।

नेपाल वातवरण पत्रकार समूहका तत्कालीन अध्यक्ष आदित्यमान श्रेष्ठ त्यो बेलाको क्षण सम्झँदै भन्नुहुन्छ, "कांग्रेसले कम्युनिष्टको रेडियो हो, लाइसेन्स दिन हुँदैन भन्ने, कम्युष्टिले कांग्रेसको रेडियो भन्ने, हामी दुवैतिरबाट पेलानमा परेका थियौं , तत्कालीन सञ्चार सचिव भोजराज पोखरेलले गर्नुसम्म गाली गरे र तिमीहरूका सबै सामान लगेर नदीमा बगाइदिन्छु भनेर धम्क्याए ।"

### *१.२ अन्तिम चरणको संघर्ष:*

यसैबीचमा २०५४ असारदेखि स्थानीय निकायको चुनाव हुने तिथि सरकारले घोषणा गरिसकेको थियो । सरकारमा स्थिरता थिएन । तत्कालीन नेपाली कांग्रेसको बहुमत प्राप्त सरकारका प्रधानमन्त्री गिरिजाप्रसाद कोइरालाले बहुमत हुँदाहुँदै आफ्नै पार्टीका सांसदहरूको सामना गर्न नसकी २०५१ सालमा संसद् नै विघटन गरेदेखि सरकारमा अस्थिरता सुरु भएको थियो । २०५१ कात्तिकमा भएको मध्यावधि चुनावमा कुनै पनि दलले बहुमत प्राप्त गर्न नसकेपछि ठूलो दलका हैसियतले नेकपा एमालेले अल्पमतको सरकार बनाएको थियो । एमालेको ९ महिने

शासनकालमा त्यतिबेला सञ्चारमन्त्रीको कुर्सीमा आसिन प्रदीप नेपालले २०५२ सालमा लाइसेन्सका लागि लडिरहेको रेडियो सगरमाथालाई नभएर आफ्नो नियन्त्रणमा रहेको रेडियो नेपाललाई बिनाइजाजत नै एफएम रेडियो प्रसारण गर्न दिए । बिरुवा रोप्ने एउटा फल खाने अर्कै भनेजस्तै भयो । २०५२ को भदौमा एमालेको सरकार गिर्ने निश्चित भएपछि तत्कालीन प्रधानमन्त्री मनमोहन अधिकारीले संसद् विघटन गरे पनि सर्वोच्च अदालतले त्यो निर्णय उल्टायो र नेपाली कांग्रेस र एमालेबीच राप्रपाको सहयोगमा सरकार बनाउने र भत्काउने होड चल्न थाल्यो । सांसद किनबेच र थुनछेकका काम भए । त्यो बीचमा जति पनि सञ्चार मन्त्री आए, ती सबैलाई नेपाल वातावरण पत्रकार समूहले एफएम रेडियोको महत्त्व र आवश्यकताबारे विश्वासमा लिने प्रयास गऱ्यो । समूहका सदस्यहरूले आफ्नो प्रभाव र विश्वासमा रहेका नेता तथा मन्त्रीहरूलाई सकेसम्म लविङ गरे । तर कुरा बुझ्दा नबुझ्दै अर्कै सरकार र मन्त्री आइसक्थे । ६-६ महिनामा सरकार बन्ने र गिर्ने अस्थिर राजनीतिक कसरतका बीच मन्त्रालयका कर्मचारी नै आफूले चाहेको सजिलै गर्न र गराउन सक्ने शक्तिशाली अवस्थामा रहेका देखिन्थे ।

फेरि २०५३ सालको अन्त्यतिर नेकपा (एमाले) र राप्रपा (चन्द) को सरकार बन्यो । यो सरकारमा झलनाथ खनाल सूचना तथा सञ्चार मन्त्री थिए । नेपाल वातावरण पत्रकार समूहले राष्ट्रिय र अन्तर्राष्ट्रिय सबै प्रकारका दबाब सरकारसमक्ष सिर्जना गरिरहेको थियो । यसै क्रममा समूहले पत्रकार सम्मेलनको आयोजना गरेर सरकारले लाइसेन्स दिए पनि नदिए पनि जेठ ९ गते बुद्ध पूर्णिमाको दिनदेखि रेडियो सगरमाथाको प्रसारण सुरु गर्ने घोषणा गऱ्यो ।

यो घोषणापछि त्यतिखेरको सरकारलाई झनै ठूलो दबाब र अप्ठ्यारो पऱ्यो । हेमबहादुर विष्ट, रघु मैनाली, ओम खड्का र मुरारी सिवाकोटी नेपाल वातावरण पत्रकार समूहबाट स्वतन्त्र रेडियो प्राप्तिको अभियानमा लागिपरेका नाम हुन् भने सबै सदस्य र शुभचिन्तकले यो अभियानमा सक्दो सहयोग गरिरहेका थिए । सञ्चारमाध्यम यो अभियानको ठूलो सहयोगी बन्यो । दैनिकदेखि साप्ताहिक पत्रपत्रिकाले समाचार र सम्पादकीय नै लेखेर रेडियो सगरमाथाले लाइसेन्स पाउनुपर्ने वकालत गरिरहेका थिए । यस्तै युनेस्को, अमेरिकी राजदूतावासलगायतका कूटनीतिक क्षेत्रले पनि सरकारलाई दबाब दिइरहेका थिए । लाइसेन्स लिने क्रममा वरिष्ठ पत्रकार भारतदत्त कोइराला, कनकमणि दीक्षित र गोकुल पोखरेलले समेत आ-आफ्नो तर्फबाट सक्दो पहल गर्नुभयो । नेपाल प्रेस इन्स्टिच्युट, हिमाल एसोसिएसन र वर्ल्डभ्यू नेपालको संस्थागत भूमिका उत्साहप्रद थियो ।

### *१.३ घन्कियो दक्षिण एसियामै पहिलो स्वतन्त्र रेडियोको तरंग*

कर्मचारीतन्त्रको नकारात्मक भूमिका हुँदाहुँदै पनि नेपाल टेलिभिजनका तत्कालीन अध्यक्ष हेमबहादुर विष्ट त्यतिखेरका सूचना तथा सञ्चारमन्त्री झलनाथ खनाललाई विश्वासमा लिन सफल हुनुभयो । उहाँको कुरा मन्त्री खनालले खानुभयो । हेमबहादुर विष्टले यस सन्दर्भमा रेडियो सगरमाथासँग कुरा गर्दै भन्नुभएको छ– "हामीले के भनेका थियौं भने एकपटक निजी क्षेत्रमा यो सरकारले वा मन्त्रीले नीतिगत निर्णय गरेर लाइसेन्स दिनुभयो भने तपाईंले इतिहासमा नाम राख्नुहुन्छ र नेपालमा नयाँ युगको सुरुवात हुन्छ भनेका थियौं । उहाँले आँट गर्नुभयो र लाइसेन्स प्रदान गर्नुभयो र अहिले सबैले देखेकै छ कि नेपाल फेरि फर्केर पहिलेको युगमा जाने किसिमको अवस्थामा छैन ।"

नेपालमा एफएम प्रविधिको फलामे ढोका खोल्ने मन्त्री झलनाथ खनाल त्यो बेलाको क्षण सम्झँदै भन्नुहुन्छ- “जतिबेला सञ्चारमन्त्री बनेको थिएँ, त्यो बेलामा म के चाहन्थें भने नेपाल जस्तो मुलुकको विकास प्रक्रियालाई तीव्रता प्रदान गर्नका लागि हाम्रो सूचना र सञ्चार प्रणालीलाई तीव्र बनाउन आधुनिक सञ्चार प्रक्रियालाई आधुनिकतम बनाउनु जरुरी छ भन्ने मलाई लागिरहेको थियो र त्यसका लागि सामुदायिक रेडियो वा एफएम रेडियो स्थापित गऱ्यो भने मात्रै आमजनता र त्यसमाथि पनि यो विविधतायुक्त सामाजिक संरचना भएको र पहाडी मुलुकको निम्ति यो उपयुक्त हुन्छ भन्ने मलाई लागिरहेको थियो । त्यही सिलसिलामा मैले मन्त्रालयमा गएपछि धेरै निवेदनहरू दर्ता भएर बसेको तर सरकारले चाहिँ कुनै पनि निर्णय गर्न नसकिरहेको, त्यस प्रकारको स्वीकृति दिएको खण्डमा विभिन्न किसिमका फ्रिक्वेन्सी चल्न थाल्छन् र ती फ्रिक्वेन्सीहरूको एकआपसको फ्रिक्सनबाट अनेक प्रकारका दुर्घटनाहरू हुन्छन् भन्ने मानसिक र मनोवैज्ञानिक त्रास बोकेर मन्त्रालय बसिरहेको र त्यो प्रविधिको ढोका खोलेर नेपाली जनतालाई यसको उपभोग गरेर फाइदा लिने कुरामा वञ्चित गरेको मैले पाएँ र त्यसैकारणले हामीले यो क्षेत्रमा अध्ययन गऱ्यौं र अध्ययनपछि सबैभन्दा पहिलोपटक वातावरण पत्रकार समूहले दिएको निवेदनबाट कार्यान्वयनको प्रक्रिया सुरु गर्ने निर्णय गरियो ।”

अन्ततः २०५४ साल जेठ ५ गते सरकारले रेडियो सगरमाथाको लाइसेन्स नेपाल वातावरण पत्रकार समूहलाई हस्तान्तरण गऱ्यो र त्यसको चारै दिनमा जेठ ९ गते रेडियो सगरमाथाको विधिवत् परीक्षण प्रसारण सुरु भयो- “एफएम ब्यान्डको १०२ थोप्लो ४ मेगाहर्जमा यो रेडियो सगरमाथा हो ।” दक्षिण एसियामै पहिलो स्वतन्त्र प्रसारण सेवाको आवाज थियो रेडियो सगरमाथा । यो प्रसारणमा गोपाल योन्जनले तयार पारेको सगरमाथाको संकेत धुन र गोपाल योन्जनकै सांगीतिक कृति बजेका थिए ।

“दिनको त्यस्तै दुई बजेको थियो, प्रसारण सुरु भएको २० मिनेटभित्रै अचानक प्राविधिक गडबढी आयो, प्रसारण बन्द भयो । काम हामीले नयाँ थालेका थियौं । हाम्रासामु चुनौती अनगिन्ति थिए । पार गरेका चुनौती पनि कम थिएनन् । हामी यो घटनाले केही हड्बडायौं, तर अत्तालिएनौं, निरास पनि भएनौं । वर्षौं लामो धैर्य र साहसपछि दक्षिण एसियामै पहिलोपटक सरकारभन्दा बाहिर रहेर रेडियो तरंग फाल्ने इतिहासको सूचीमा एक नम्बरमै हामी दर्ता भयौं । आनन्द यसैमा थियो । पहिलो दिन २० मिनेटमात्रै रेडियो बजे पनि हामीले लड्डु ल्यायौं, खायौं, रमायौं र बन्द भएको प्रसारण चालू गर्न मनोबल थप्यौं”, रघु मैनालीको अनुभव हो यो (स्थानीय रेडियो सम्भावना र उपयोगिता २०५९, पृष्ठः २६) ।

जन्मँदै लादिएका १५ वटा शर्तसहित सरकारले रेडियो सगरमाथालाई प्रसारण इजाजत दिएको थियो । ‘अनगिन्ति शर्तहरु (हेर्नुस् अनुसूची) हेर्दा लाग्थ्यो, उनीहरू (मन्त्रालयका उच्चपदस्थ कर्मचारीहरू) शुद्ध कर्मचारीमात्र होइनन्, अधिनायकवादी अवशेषबाट छुटकारा लिन नसकेका अघिल्लो व्यवस्थाका अविच्छिन्न र इमानदार प्रतिनिधिसमेत हुन् । हामीले तत्कालै निर्णय लिनु थियो, ऐन नियमलाई मिचेर राखिएका शर्तसहितको इजाजतपत्र लिने कि नलिने ? जे जस्तो भए पनि इजाजतले हाम्रो अभियानलाई अझ वैधानिक बनाउने निचोडसहित इजाजत लियौं’ तत्कालीन कार्यक्रम निर्देशक रघु मैनालीको कथन छ (स्थानीय रेडियो सम्भावना र उपयोगिता २०५९, पृष्ठः ३०) ।

यसरी नेपालमात्रै नभई दक्षिण एसियामै स्वतन्त्र प्रसारण सेवा रेडियो सगरमाथाको प्रसारण सुरु भयो । नेपालमा निजी क्षेत्रमा रेडियो प्रसारणका लागि फलामे ढोकाको ताल्चा खुल्यो । सूचना क्रान्तिका हिसाबले दक्षिण

एसियामै एउटा नयाँ युगको सुरुवात भयो । रेडियो सगरमाथाले सुरुमा बिहान ७:०० देखि ९:०० सम्म दुई घन्टा प्रसारण गऱ्यो । यसले प्राविधिक र कार्यक्रमसम्बन्धी जनशक्ति पहिलेदेखि नै तयारी अवस्थामा राखेको र पहिले नै प्रविधि परीक्षण गरिसकेका कारण इजाजत पाएको चौथो दिनमै प्रसारण थाल्न सक्यो । यो पनि नेपालको प्रसारण इतिहासमा गज्जवको घटना मान्नुपर्छ किनकि व्यावहारिक र कानुनी दुवै तरिकाले हेर्दा इजाजत पाएपछि मात्रै प्रसारण उपकरण झिकाउने वैधानिकता प्राप्त हुने भएकाले इजाजत पाएको कैयौं महिनापछि मात्रै रेडियोहरूले प्रसारण थाल्न सम्भव हुन्छ ।

## २) स्टेसनको अभिप्रेरणा, लक्ष्य र उद्देश्य

### २.१ *अभिप्रेरणा*

रेडियो सगरमाथा किन सुरु गर्नुपऱ्यो त ? यो प्रश्न उठ्नु स्वाभाविकै हो । रेडियो सगरमाथा खोलेर बेस्सरी पैसा कमाइने सपना यो रेडियो खोल्नेहरूले देखेका थिएनन् । न त रेडियो खोलेर समाजमा धाक, रवाफ देखाउन र आफ्ना व्यापारिक क्रियाकलाप सुरक्षित पार्नु यसका सञ्चालकहरूको उद्देश्य थियो । आखिर रेडियो सगरमाथा किन खुल्यो त ? यो प्रश्नको उत्तर खोज्न ओम खड्काका यी शब्द सहयोगी बन्न सक्छन्- “देशमा केबल सरकार नियन्त्रित, निर्देशित र सञ्चालित रेडियो नेपालमात्रै थियो जसमा नेपाली जनताका आवाज प्रसार हुँदैनथे । केबल शासकका कुरा मात्रै जनतालाई सुनाइन्थ्यो । हामी रेडियो नेपालजस्तै एउटा अर्को रेडियो थप्ने पक्षमा थिएनौं हामी त एउटा वैकल्पिक रेडियो सञ्चालन गर्न चाहन्थ्यौं, जसले जनताका आवाजको प्रतिनिधित्व गर्न सकोस् । सामुदायिक रेडियोको अभ्यास हुन सकोस् र धेरै स्वतन्त्र रेडियोहरू ठूलो संख्यामा देशका विभिन्न भागमा खुल्न सकून् ।” रेडियो सगरमाथाको स्थापना आफैंमा एउटा नौलो प्रयोग थियो । सुनेको थियो तर प्रयोग देखेको थिएन । “हामी आमसञ्चार माध्यममा नै काम गर्ने भएकाले हाम्रो गन्तव्य प्रष्ट थियो । अवधारणा, दृष्टिकोण र उद्देश्य प्रष्ट थियो तर यसलाई व्यवहारमा कसरी ढाल्ने भन्ने कुरामा मात्रै हामीले चुनौती महसुस गरेका थियौं,” रघु मैनाली भन्नुहुन्छ ।

नेपालजस्तो भौगोलिक बनोट भएको देशमा सामुदायिक/स्थानीय रेडियोबाट मात्रै सामाजिक विकास र परिवर्तन गर्न, आवाजविहीनहरूका आवाजको प्रतिनिधित्व गर्न, समुदायका अनुभव, समस्या र विचार एकअर्कामा साटासाट गर्न तथा आफ्नो मौलिक भाषा, संस्कृति, कला, संगीत, साहित्य र प्रतिभाको संरक्षण र विकास स्थानीय रेडियोबाट मात्रै सम्भव छ भन्ने कुरामा नेपाल वातावरण पत्रकार समूह प्रष्ट थियो । साथै विभिन्न क्षेत्रमा रहेका समुदायलाई रेडियो स्थापना गर्न सघाउने, उनीहरूलाई प्रविधिसँग परिचित गराउने र नमुना सार्वजनिक रेडियोको रुपमा रेडियो सगरमाथालाई विकास गर्ने अभिप्रेरणाबाट नेपाल वातावरण पत्रकार समूहले वैकल्पिक रेडियोको रुपमा रेडियो सगरमाथाको सञ्चालन गर्ने अठोट गरेको थियो ।

### २.२ *लक्ष्य र उद्देश्य*

रेडियो सगरमाथा दक्षिण एसियाकै पहिलो स्वतन्त्र प्रसारण सेवा भएकाले यो नेपालका लागि मात्र नभई दक्षिण एसियाकै नमुना र उदाहरणीय रेडियो बनेको छ । अहिले पनि काठमाडौंमा विभिन्न रेडियो स्टेसनहरूको

भीडमा रेडियो सगरमाथाको आफ्नै छुट्टै पहिचान रहेको सामाजिक मूल्यांकन छ । यसरी रेडियो सगरमाथाले आफूलाई नाफारहित रेडियो बनाउँदै सामाजिक र सार्वजनिक विषयमा केन्द्रित राखेर छुट्टै पहिचान बनाउन सक्नुमा यसको लक्ष्य र यसले अवलम्बन गरेका उद्देश्यहरूको राजमार्गले नै काम गरेको हो ।

**रेडियो सगरमाथाका लक्ष्य र उद्देश्य यस्ता छन्ः**

***लक्ष्यः*** आफूलाई देशकै नेतृत्वदायी सवल र स्वावलम्बी सार्वजनिक रेडियो स्टेसनका रुपमा विकसित गर्दै प्रजातान्त्रिक मूल्य, मान्यताको प्रबर्द्धनमा योगदान गर्नु, आवाजविहीनहरूको आवाज बन्दै सामाजिक न्यायका लागि नमुना सार्वजनिक रेडियोको अभ्यास गर्नु र सामुदायिक रेडियो अभियानको नेतृत्वदायी भूमिका निर्वाह गर्नु रेडियो सगरमाथाको लक्ष्य हो ।

***उद्देश्यः*** **यो लक्ष्य परिपूर्तिका लागि रेडियो सगरमाथाले निम्न उद्देश्यहरू आत्मसात गरेको छः**

- नेपाल अधिराज्यको संविधान २०४७ ले निर्दिष्ट गरेको दायराभित्र रही जनताको सूचनाको हक र विचार तथा अभिव्यक्तिसम्बन्धी मौलिक हकको व्यापक उपभोग गर्ने सार्वजनिक थलोको रुपमा अभ्यास गर्दै छिटो, प्रभावकारी र सशक्त सूचना प्रवाह गर्नुका साथै सामाजिक बहस र संवादको परम्परा बसाई यसलाई निरन्तरता दिनु ।
- विषेशगरी सुविधाबाट वञ्चित महिला, केटाकेटी गरिब र अल्पसंख्यक समुदायहरूको सूचनाको आवश्यकतालाई ध्यानमा राख्दै सार्वजनिक रुचिका कार्यक्रम तयार गर्नु ।
- शान्ति, वातावरण, दिगो विकास, मानवअधिकार, शिक्षा, सार्वजनिक स्वास्थ्य, लैंगिक समता, बालअधिकार र संरक्षण, छुवाछूतविरुद्धको अभियान, सुशासन र भ्रष्टाचार, उपभोक्ता हक, गरिबी र रोजगारी, अपांग, श्रम तथा चेलिबेटी बेचबिखन र महिलामाथि हुने घरेलु हिंसा, दाइजोको कुप्रथा, अन्धविश्वास जस्ता विकृतिलगायतका जल्दाबल्दा राष्ट्रिय र सामाजिक विषयहरूमा सामाजिक न्यायका लागि जनमत सिर्जना गर्नु ।
- स्वस्थ राष्ट्रियताका लागि जनमत सिर्जना गर्दै स्वपनप्रति गर्व गर्न नेपाली नागरिकलाई प्रोत्साहित गर्नु ।
- राज्यको नागरिकप्रति र नागरिकको राज्यप्रतिको उत्तरदायित्व बोध गराउनु ।
- स्वस्थ राजनीतिक विकास र जनउत्तरदायी विधिको शासनका लागि सक्दो जनमत तयार गर्नु तथा जनअधिकारका लागि राजनीतिक चेतनाको विकास गर्नु ।
- स्थानीय एवं राष्ट्रिय प्रतिभाहरूको पहिचान गर्दै तिनको हौसला वृद्धि गर्न सहयोग गर्नु र नेपाली तथा राष्ट्रिय संगीतको विकासका लागि पहल गर्दै नागरिकहरूलाई स्वस्थ मनोरन्जन प्रदान गर्नु ।
- मौलिक संस्कृति, भाषा, साहित्य, कला, संगीत, नेपाली उद्योग, व्यवसायको विकास तथा विस्तार गर्न भूमिका खेल्नु ।
- सामुदायिक तथा सार्वजानिक चासोका कार्यक्रम तयार गर्न रेडियोकर्मीलाई तालिम दिनु र उनीहरूको क्षमता वृद्धिका लागि अवसर प्रदान गर्नु ।
- रेडियो सगरमाथालाई तालिम सञ्चालन, कार्यक्रम निर्माण र व्यवस्थापन सबै पक्षमा सक्षम तुल्याएर सार्वजनिक प्रसारणको मानक स्तर निर्धारण गरी नेपाली सञ्चारमाध्यमको विकासका लागि महत्त्वपूर्ण भूमिका खेल्न सक्ने बनाउनु ।

- जनताको सूचनासम्मको पहुँचमा वृद्धि गरी अझ स्वतन्त्र र जिम्मेवार प्रेसको पक्षमा आवाज उठाउँदै बहुलवाद र प्रजातान्त्रीकरणको प्रक्रियालाई सहयोग पुऱ्याउनु ।
- दक्षिण एसियाकै पहिलो सार्वजनिक प्रसारण सेवा भएकाले भविष्यमा खुल्ने सामुदायिक, सार्वजनिक तथा निजी रेडियो प्रसारकहरूलाई सीप र प्राविधिक तथा व्यावसायिक क्षमता अभिवृद्धिका लागि सहयोग पुऱ्याउनु ।
- रेडियो प्रसारणसम्बन्धी स्रोत केन्द्रको रुपमा आफूलाई विकसित गर्दै लैजानु ।

# ३. संस्थागत संरचना, कार्यक्रम र जनशक्ति

## ३.१ *संस्थागत संरचना*

नेपाल वातावरण पत्रकार समूहको साधारणसभा रेडियो सगरमाथाको सर्वोच्च निकाय हो । समूहको कार्यसमितिले यसको नीति निर्धारण गर्ने र सञ्चालक समिति चयन गर्ने गर्छ । कार्यसमितिले दिएको दायराभित्र रहेर सञ्चालन समितिले नीतिगत रुपमा रेडियोको सञ्चालन गर्दछ । रेडियोको कार्यकारी प्रमुख स्टेसन म्यानेजर हुने गर्छ भने उसको सामान्य सुपरीवेक्षणमा विभिन्न विभागहरूले दैनिक कार्य गर्छन् । स्टेसन म्यानेजरको नियुक्ति नेपाल वातावरण पत्रकार समूहको कार्यसमितिले गर्छ भने स्थायी प्रकृतिका कर्मचारी स्टेसन म्यानेजरको सिफारिसमा कार्य सञ्चालन समितिले गर्छ । अस्थायी प्रकृतिका कर्मचारी स्टेसन म्यानेजरले सोझै नियुक्त गर्न सक्छ ।

२०५२ सालको माघमा नेपाल वातावरण पत्रकार समूहले रेडियो सगरमाथा परियोजना सञ्चालन गर्न ओम खड्का, मुरारी सिवाकोटी र रघु मैनाली रहेको ३ सदस्यीय समिति गठन गरेको थियो । यो तीन सदस्यीय समितिले तयार पारेको रेडियो सगरमाथा सञ्चालन नियमावली २०५४ लाई नेपाल वातावरण पत्रकार समूहले वैधानिक रुपमा जारी गऱ्यो । जुन नियमावलीमा बोर्डमा अन्य तीनवटा संस्था नेपाल प्रेस इन्स्टिच्युट, हिमाल एसोसिएसन र वर्ल्डभ्यू नेपालको समेत संस्थागत प्रतिनिधित्व रहने व्यवस्था थियो । २०५७ सालदेखि चारवटै संस्थाको समझदारीअनुसार नेपाल वातावरण पत्रकार समूह एक्लैले रेडियो सञ्चालनको अभिभारा लियो ।

## ३.२ *कार्यक्रम*

स्थापनाकालदेखि नै रेडियो सगरमाथाले आफ्नो नीति र उद्देश्य पूरा गर्ने ढंगले कार्यक्रमहरू डिजाइन गरी प्रसार गर्दै आएको छ । यसले सूचना, मनोरन्जन र शिक्षा गरी मूलत: तीन भागमा आफ्ना कार्यक्रमहरूलाई विभाजन गरेको छ । आफ्नो प्रसारण समयको ३० प्रतिशत सूचना, ३० प्रतिशत शिक्षा र बाँकी ४० प्रतिशत स्वस्थ मनोरन्जनलाई छुट्याएको छ । कार्यक्रमहरू प्रात:कालदेखि क्रमैसँग रातिसम्मका लागि समय र श्रोताको मनस्थितिअनुसार व्यवस्थित गरिएका छन् ।

बिहान सबेरै ५:०० बजे पूर्वीय बिहानी रागबाट प्रसारण सुरु हुन्छ र आध्यात्मिक हुँदै ५:४५ सूचना र समसामयिक विषयतिर प्रसारणले प्रवेश गर्छ । ५:४५ देखि आधा घण्टाका लागि बीबीसी विश्व सेवाको कार्यक्रम वर्ल्ड टुडे प्रसार हुन्छ । ६:१५ देखि बिहानै प्रकाशित हुने पत्रपत्रिकाले छापेका खबरको कार्यक्रम पत्रपत्रिकाको

सँगालो प्रसार हुन्छ र त्यसपछि दिनभरिका लागि आवश्यक सूचनासँगै समाचार सुन्न सकिन्छ । रेडियो नेपालको समाचार हुँदै समसामयिक विषयमा आधारित विचार स्तम्भ रेडियो कुराकानी, रेडियो पत्रिका एकैछिन्, अन्तरक्रियात्मक कार्यक्रम डबली, रेडियो पत्रिकाहरू र समाचार हुँदै ९:०० बजेसम्म समसामयिक र सूचनामूलक, शिक्षामूलक कार्यक्रमहरू प्रसारित हुन्छन् । त्यसपछि मनोरन्जनात्मक कार्यक्रम बज्ने गर्छन् ।

९:०० बजेदेखि सांगीतिक/जानकारीमूलक कार्यक्रमको पालो आउँछ । फेरि बेलुका ६:०० बजेदेखि राति ९:१५ सम्म सूचनामूलक, समसामयिक र शिक्षामूलक कार्यक्रमहरू प्रसारित हुन्छन् । राति ९:१५ देखि साहित्य, संगीत र जानकारीमूलक कार्यक्रम संगीत सरोबरको पालो आउँछ । अन्त्यमा बीबीसी नेपाली सेवाको १५ मिनेट लामो समसामयिक कार्यक्रमसँगै ११:०० बजे राति रेडियो सगरमाथाको प्रसारण पूरा हुन्छ ।

रेडियो सगरमाथाले पहिलोपल्टको कार्यक्रम नै वास्तविक आवाजहरूको प्याकेज रेडियो पत्रिका हाम्रो खाल्डो तयार गरी प्रसार गरेको थियो । यसले आफ्ना कार्यक्रमहरूमा स्वरुपका हिसाबले विविधता ल्याउन खोजेको छ । त्यसैले कार्यक्रमहरूमा रेडियो पत्रिकादेखि अन्तर्वार्ता, अन्तरक्रिया, साङ्गीतिक, समाचार, रिपोर्ट, फिचर, श्रोता सहभागिता- पत्र, फोन इनजस्ता स्वरुपहरूलाई प्रयोगमा ल्याएको छ ।

विषयका हिसाबले रेडियो सगरमाथाले सामाजिक र समसामयिक विषयका आधारमा कार्यक्रमहरू निर्माण गरी प्रसार गर्ने गरेको छ । समाचार, समसामयिक, सुशासन, भ्रष्टाचार, लैंगिक समता, जनस्वास्थ्य, वातावरण, शिक्षा, बालबालिका, दिगो विकास, आध्यात्मिक, सांगीतिक, भाषा, साहित्य, संस्कृति, ज्येष्ठ नागरिक, शान्ति र द्वन्द्व समाधान, फोहोरमैला, सामुदायिक वनलगायतका क्षेत्रसम्बन्धी कार्यक्रमहरू प्रसार गर्दैआएको छ । हप्तामा करिब ६० वटा कार्यक्रम रेडियो सगरमाथाले जनसमक्ष पुऱ्याउँदै आएको छ । यसले नेपाली लोकगीत र आधुनिक गीतका साथै पुराना गीत र स्रष्टाहरूलाई समाजमा प्रस्तुत गर्ने गरेको छ। काठमाडौंमा नेपाली गीत र संगीत सुन्ने आमसंस्कृति बसाउने र टेलिभिजनका थुप्रै च्यानलहरुको होडबाजीका बीच बेलुका पनि रेडियो सुन्ने चाख जगाउने काम रेडियो सगरमाथाले नै गरेको हो ।

रेडियो सगरमाथाका कार्यक्रमहरू लोकप्रिय रहेका कुरा यसले प्राप्त गर्ने फोन, पत्र र इमेलबाट पुष्टि हुन्छ । दैनिक १०० भन्दा बढी फोन कार्यक्रमलाई लिएर आउने गर्छन् भने करिब ५० वटा इमेल र झन्डै १०० जस्तो चिठीपत्र आउने गर्छन् । यसले आफ्ना कार्यक्रमहरूमा तत्कालै फोन कल आह्वान गर्दा दर्जनौं व्यक्तिहरू फोनमार्फत संलग्न हुने गरेका छन् ।

रेडियो सगरमाथाले आफ्ना कार्यक्रमहरूको गुणस्तर वृद्धिका लागि सक्दो पहल गर्दै आएको छ । यसले विभिन्न स्थानीय भाषाहरूलाई पनि प्रसारणमा स्थान दिने गरेको छ । नेपाल भाषाको कार्यक्रम मुनासः, तामाङ भाषाको कार्यक्रम तामाङकाई, मैथिली भाषाको कार्यक्रम मिथिला यात्रा यसका उदाहरण हुन् ।

एकैछिन कार्यक्रम विभिन्न सामाजिक विषय समेटेर दैनिक रेडियो पत्रिकाका रुपमा प्रसार हुन्छ भने आजका कुरा समसामयिक विषय समेटेर दैनिक प्रसार हुन्छ । कार्यक्रम सहअस्तित्वले लैंगिक समतालाई समेटेको छ भने आचार-विचारले भ्रष्टाचार र सुशासनलाई आफ्नो क्षेत्र बनाएको छ । संगीत सरोबर साहित्य र पुराना गीत संगीतसँगै स्रष्टालाई दायरा बनाएर खोजमूलक सामग्रीका साथ प्रसार हुन्छ । उहिलेका कुरा सुनाउने कार्यक्रमको नाम हो- उहिले बाजेका पालामा । यो कार्यक्रमले ७० वर्षभन्दा माथिका ज्येष्ठ नागरिकहरूका

अनुभव र विचारलाई ७६ वर्ष नाघेका पत्रकार भैरव रिसालको प्रस्तुतिमार्फत उजागर गर्ने गरेको छ । साथै यो कार्यक्रमले नलेखिएको सामाजिक, सांस्कृतिक, आर्थिकलगायत व्यक्तिगत र वंशगत इतिहासलाई समेट्ने गरेको छ ।

रेडियो कुराकानीअन्तर्गत विभिन्न विधामा ख्याति कमाएका व्यक्तित्वहरू जस्तै पाका पत्रकार भैरव रिसाल, सर्वोच्च अदालतका पूर्व न्यायाधीश लक्ष्मण अर्याल, पूर्व प्रमुख निर्वाचन आयुक्त विष्णुप्रताप शाह, वरिष्ठ प्राध्यापक डाक्टर डीपी भण्डारी, त्रिविका शिक्षक बालकृष्ण माबोहाङलगायतका व्यक्तिहरूका विचारोत्तेजक प्रस्तुति प्रसारित हुन्छन् । लुकामारी कार्यक्रमले बाल मनोविज्ञान र तिनको विकाससँग मेल खाने सामग्रीहरू समेट्छ । यस्तै अपांगले अपांगका लागि सञ्चालन गरेको कार्यक्रम “समानताका स्वरहरू” ले अपांग जगत्का अनुभव र समस्याहरू उजागर गर्ने गरेको छ ।

भर्खरैमात्र रेडियो सगरमाथाले आफ्नो प्रसारणको सातौं वर्ष पूरा भएको अवसर पारेर जेठ ९, २०६१ देखि रेडियो सगरमाथामा साथीका कुरा प्रसार गर्न थालेको छ । संविधान, कानुन र सामाजिक मर्यादाको अधिनमा रही सगरमाथाका साथीहरूले आफ्ना कुरा भन्न पाउँछन् ।

रेडियो सगरमाथाले अहिले दैनिक आफ्ना १० वटा समाचार बुलेटिन प्रसार गर्ने गरेको छ । हरेक पौने बजे समाचार प्रसार गर्ने लक्ष्यअनुरुप समाचार प्रसारण समयमा एकरुपतासमेत ल्याएको छ ।

रेडियो सगरमाथाले कार्यक्रममा अन्तर्राष्ट्रिय, राष्ट्रिय र स्थानीय रेडियोहरूसँग सहयोग आदान-प्रदान गर्ने गरेको छ । २०५६ कात्तिकदेखि यसले बीबीसी वर्ल्ड सर्भिससँग मिलेर बीबीसी नेपाली सेवा, वर्ल्ड टुडे प्रसार गर्दै आएको छ । यसले विभिन्न क्षेत्रमा सामुदायिक रेडियो स्थापना गर्न र सञ्चालन गर्न सहयोगसमेत गर्ने गरेको छ । कार्यक्रमहरू उपलब्ध गराएर काठमाडौं बाहिरका करिब ८ वटा रेडियो स्टेसनहरूलाई सहयोग पुऱ्याइरहेको छ ।

यसले यी रेडियोहरूसँगको सञ्जालसमेत विकास गरेको छ । यसरी सञ्जालमा रहेका रेडियोहरूमा रेडियो स्वर्गद्वारी, रेडियो लुम्बिनी, रेडियो मदनपोखरा, हिमचुली एफएम, मनकामना एफएम, सिनर्जी एफएम, कोशी एफएम र कञ्चनजंघा एफएम छन् । यीमध्ये रेडियो स्वर्गद्वारी, रेडियो लुम्बिनी, रेडियो मदनपोखरा र हिमचुली एफएम सामुदायिक रेडियो हुन् ।

रेडियो सगरमाथाका कार्यक्रमहरू अहिले अन्य रेडियोहरूका लागि मानक स्तर नाप्ने आधार बनेका छन् । तर सानो आकारको र विकसित गर्दै लैजानुपर्ने जनशक्तिका भरमा काम गर्दै आएको रेडियो सगरमाथाले जुन ठाउँमा पुग्नुपर्ने जनअपेक्षा छ, त्यो ठाउँमा पुग्न अझै ठूलै मेहनत गर्नुपर्ने देखिन्छ । यसले बेला-बेलामा नचाहँदा नचाहँदै पनि भाषिक स्तर र एकरुपता कायम गर्न कठिनाइ परिरहेको छ । यिनै समस्याहरू हटाउन अहिले रेडियो सगरमाथा कार्यक्रम प्रसारण निर्देशिका बनाउन तल्लीन छ ।

### ३.३ *जनशक्ति*

रेडियो सगरमाथामा अहिले करिब ६० जनाको जनशक्ति कार्यरत छ । यो जनशक्तिमध्ये करिब चार दर्जनजति सञ्चारकर्मी छन् र यीमध्ये पनि २ दर्जनजति नियमित तलबमा कार्यरत छन् । रेडियो सगरमाथामा काम

गर्ने स्वयंसेवकहरूको संख्या पनि ठूलै छ । झन्डै ३० जना जति स्वयंसेवकले अहिले दैनिक र साप्ताहिक गरी करिब डेढ दर्जन कार्यक्रमहरू सञ्चालन गरिरहेका छन् । समयका हिसाबले हेर्दा २५-३० प्रतिशत कार्यक्रम स्वयंसेवकबाट सञ्चालित छन् ।

व्यावसायिक कला र सीपका हिसाबले हेर्ने हो भने रेडियो सगरमाथाको कार्यक्रमसँग जोडिएको जनशक्ति उच्च, मध्यम र निम्न मध्यमस्तरको गरी तीन खालको रहेको छ । अध्ययनका हिसाबले अधिकांश स्नातक र केही स्नातकोत्तर छन् । तालिमका आधारमा कुरा गर्नुपर्दा रेडियो सगरमाथाको जनशक्तिले स्वदेशी र विदेशी गरी दुवै खालका तालिमहरू लिने सौभाग्य पाएको छ । केहीले विदेशमा गएर तालिम लिने अवसर पाएका छन् भने अधिकांशले स्टेसनमै विदेशी उच्च व्यावसायिक ज्ञान भएका व्यक्तिहरूले दिएका तालिम लिएका छन् । विभिन्न समयमा डचेवेले, इन्टरनेसनल इन्स्टिच्युट अफ जर्नलिज्म, बर्लिन (आईआईजेबी) र बीबीसीबाट काठमाडौं आएका विशेषज्ञले कार्यक्रम उत्पादन र प्रसारणसम्बन्धी तालिम दिने गरेका छन् । यसबाहेक सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूहबाट पनि यहाँको जनशक्तिले तालिम पाउने गरेको छ । रेडियो सगरमाथाले आन्तरिक रुपमै पनि तालिमको आयोजना गर्ने गरेको छ ।

यो जनशक्ति उच्च व्यावसायिक दृष्टिले हेर्दा तीनथरी देखिए पनि अन्य रेडियोहरूको तुलनामा सशक्त छ । तर धेरैले आफ्नो निजी अध्ययनलाई बढाएर सीपगत, भाषिक र विषयगत क्षमता वृद्धि गर्नु आवश्यक छ ।

उमेरका हिसाबले हेर्दा रेडियो सगरमाथामा युवा जनशक्ति कार्यरत छ । त्यसैले खट्नुपर्ने ठाउँमा यो जनशक्ति दिनरात नभनी काम गर्न तत्पर हुन्छ । सम्पूर्ण जनशक्तिको करिब ३५ प्रतिशतजति महिला छन् । जातीय हिसाबमा हेर्दा रेडियो सगरमाथाको जनशक्तिमा नेवार, बाहुन, क्षेत्री, तामाङ, कायस्थ, दलित र जनजातीय प्रतिनिधित्व धेरथोर मात्रामा रहेको छ ।

रेडियो सगरमाथासँग उपलब्ध जनशक्तिमा पाका पत्रकार भैरव रिसालदेखि सर्वोच्च अदालतका पूर्व न्यायाधीश लक्ष्मण अर्याल, वरिष्ठ प्राध्यापक डा. डीपी भण्डारी र पूर्व प्रमुख निर्वाचन आयुक्त विष्णुप्रताप शाहलगायतका आफ्ना क्षेत्रका विशेषज्ञहरूसमेत रहेका छन् । तर यो उच्चस्तरको विशेषज्ञ-जनशक्ति स्वयंसेवकका रूपमा रहेको छ ।

यो रेडियोमा तालिमे प्रशिक्षार्थीहरू आउने र केही सिकेपछि अन्य स्टेसन र सञ्चारमाध्यममा जाने प्रचलन समेत रहेको छ । यस अर्थमा सुरुदेखि नै रेडियो सगरमाथा रेडियो कार्यक्रम उत्पादनसम्बन्धी सिकाउने एउटा राम्रो विद्यालयसमेत बन्दै आएको छ । अहिले काठमाडौंका विभिन्न रेडियो तथा टेलिभिजन र उत्पादन गृहहरूमा रेडियो सगरमाथामा काम सिकेका सञ्चारकर्मीहरू कार्यरत छन् । अहिले यो रेडियोमा कार्यरत जनशक्तिमध्ये करिब ९५ प्रतिशतको पत्रकारिता यहींबाट नै सुरु भएको हो । उनीहरू पहिले प्रशिक्षार्थीका रूपमा प्रवेश गरी गर्दै सिक्दै अहिले विस्तारै व्यावसायिकताको नजिकतिर लम्किरहेका छन् । केहीले भने पत्रकारिताको सैद्धान्तिक ज्ञानसमेत हासिल गरेका छन् ।

समग्रमा भन्दा, व्यावसायिकताको उच्च अपेक्षाका अगाडि विभिन्न खालका कमी र अभाव हुँदाहुँदै पनि रेडियो सगरमाथाको यही जनशक्तिका कारण आज यो रेडियो भीडहरूका माझमा व्यावसायिक निष्ठा र लक्ष्य बोकेर हिंडेको एउटा छुट्टै पहिचानयुक्त रेडियो बन्न पुगेको छ । रेडियो सगरमाथाको जनशक्तिमा कामप्रतिको

लगाव र पेशाप्रतिको निष्ठामा कुनै प्रश्नचिह्न खडा गर्ने ठाउँ भने छैन । यो जनशक्ति रातभारि खट्न पनि तयार छ, दिनभरि खट्न पनि तयार छ । सुविधा र स्रोतको अभावबीच पनि आफ्नो व्यावसायिक निष्ठा बोक्नसक्ने यो जनशक्ति नै यथार्थमा रेडियो सगरमाथाको असली सम्पत्ति हो ।

## ४. श्रोता

रेडियो सगरमाथाका केन्द्रित श्रोता भनेका काठमाडौं, ललितपुर र भक्तपुर यी तीन जिल्लाभित्र समेटिएको काठमाडौं उपत्यकाका बासिन्दा हुन् । यसबाहेक वरपरका जिल्लाहरू मकवानपुर, धादिङ, रसुवा, गोर्खा, सिन्धुपाल्चोक, काभ्रेपलान्चोक, नुवाकोट, सर्लाही र सोलुखुम्बुका आंशिक भागहरूमा समेत रेडियो सगरमाथाका श्रोताहरू छन् र उनीहरू फोन र पत्राचारमार्फत आफ्नो उपस्थिति देखाउँछन् ।

करिब २३ लाख मान्छेको पहुँचसम्म रेडियो सगरमाथाको तरंग पुग्छ तर काठमाडौं उपत्यका र बाहिर गरी दैनिक करिब १२ लाख व्यक्तिहरू यसका श्रोता रहेको अनुमान छ । २०५७ सालमा रेडियो सगरमाथाले आफ्नो परिचयमा काठमाडौं उपत्यकाको आवाज भनी तयार गरी प्रसार गरेको थियो । यो परिचय ४ वर्षसम्म बज्यो । यो बीचमा सबैभन्दा बढी काठमाडौं उपत्यका बाहिरका श्रोताको प्रश्नको सामना रेडियो सगरमाथाले गर्नुपरेको थियो । उनीहरूको प्रश्न थियो, “हामी पनि तपाईका श्रोता हौं तर किन काठमाडौं उपत्यकाको आवाज भनेर हामीलाई छुट्याउनुहुन्छ ?” रेडियो सगरमाथाले यही अनुभवका आधारमा अहिले आफ्नो परिचय बोलीलाई परिमार्जन गरी २०६१ को पहिलो बिहानीदेखि “के सहर के गाउँ जोसुकै हौं जहाँ रहौं, सबैको बोली अट्ने ठाउँ” बनाएको छ । यो परिचयलाई केलाउने हो भने प्रष्ट छ, रेडियो सगरमाथाका श्रोता मूलत: सहरवासी र गाउँवासी गरी दुई भागमा विभाजित छन् । काठमाडौं र ललितपुरको चक्रपथभित्र र भक्तपुरको शहरी भागमा रहेका व्यक्तिहरू शिक्षा र सुविधाका हिसाबले सुसज्जित छन् । यिनीहरू टेलिभिजनका थरीथरी च्यानल, कम्प्युटर, फोन, फ्याक्स, इन्टरनेट, इमेल आदि सुविधा लिएर बसेका छन् । शहरी वर्ग सरकारी र विभिन्न गैरसरकारी कार्यालयमा उच्चस्तरसम्मका पदहरूमा कार्यरत छ । यसको पहुँचमा काठमाडौंका उच्च धनाढ्यदेखि विदेशमा रहेका नेपाली र विदेशीहरूसम्म पर्छन् । सूचना पाउनका लागि यो वर्गलाई एकपछि अर्को विकल्प छन् । संसारकै घटनाक्रम सकेसम्म प्रत्यक्ष अवलोकन गर्न यो वर्ग बानी परेको छ । सूचना र मनोरन्जन थाहा पाउनेमात्रै नभएर यो वर्ग कुन सञ्चारमाध्यमले कुन रुपमा कति र कस्तो ढंगले सूचना प्रसार गरिरहेको छ भनेर मूल्यांकन र समीक्षासमेत गर्न सक्ने हैसियत राख्दछ । शहरी वर्गमा भाषिक, सांस्कृतिक, जातीय र पारिवारिक हिसाबले समेत एकरूपता छैन । अवसरका कारण देशका सबै जिल्लाका व्यक्तिहरूको आकर्षणको केन्द्रविन्दु बनेको छ, काठमाडौं उपत्यका । काठमाडौं उपत्यकाको शहरी भाग नेपालीहरूबाहेक विदेशीहरूको पनि बसाइ र घुमाइको केन्द्र हो । यसर्थ भिन्न परिचय, आवश्यकता र जीवनशैली बोकेको यो शहरी वर्गको सूचना र मनोरन्जनको आवश्यकता पूरा गर्नु पर्ने रेडियो सगरमाथाको एउटा दायित्व हो ।

अर्कोतिर ग्रामीण क्षेत्रमा बस्ने वर्ग यसको प्रसारणको दायरामा पर्छ । यो वर्ग शिक्षा र अन्य सुविधा अघिल्लो वर्गको तुलनामा कम उपभोग गर्न पाउँछ वा पाउँदै पाउँदैन । यो वर्गमा सूचना र मनोरन्जनका विकल्पहरू ज्यादै कम छन् । सामान्यतया दिनभरि खेती किसानी वा आफ्नै सामान्य इलमधन्दामा यो वर्ग व्यस्त हुन्छ । यसलाई

सूचनासँगै त्यसको प्रष्ट अर्थ बुझाउन उपयुक्त व्याख्या वा विश्लेषणसमेत आवश्यक पर्छ । विपन्नतामा बाँचेको कम अवसर प्राप्त यो वर्गलाई सूचनासँगै शिक्षित गर्दै लैजानुपर्ने रेडियोको दायित्वबाट रेडियो सगरमाथा भाग्न सक्दैन ।

एकातिर सबै अवसर, साधन र स्रोत लिएर बसेको शिक्षित बुजु्रक प्रबुद्ध वर्ग, अर्कातिर शिक्षा, साधनस्रोत, अवसर र विकल्प ज्यादै कम लिएर बाँचेको ग्रामीण वर्ग । यी दुवै वर्गका श्रोताको सूचना र मनोरन्जनको भोक र आवश्यकता पूरा गर्नु रेडियो सगरमाथाको चुनौती, अवसर र दायित्व हो ।

उमेरका हिसाबले बालक, किशोर, युवा, वयस्क र वृद्ध, लिंगका हिसाबले महिला, पुरुष, पेशाका हिसाबले सरकारी कर्मचारी, शिक्षक, प्राध्यापक, विद्यार्थी, मजदुर, पत्रकार, राजनीतिकर्मी, कलाकर्मी, गृहिणी सबै रेडियो सगरमाथाका श्रोता हुन् । प्रहरी र सेना तथा विद्रोहीसम्म रेडियो सगरमाथाका श्रोता छन् ।

जातीय आधारमा छुट्याउने हो भने प्राय: सबै जातको उपस्थिति काठमाडौं उपत्यकामा रहेको छ । तैपनि मुख्य रुपमा नेवार, तामाङ, क्षेत्री, बाहुन, दलित, तथा अन्य जनजातिको बसोबास रहेको छ ।

रेडियो सगरमाथाले यी सबैको आवश्यकता पूरा गर्ने उद्देश्यले आफ्ना कार्यक्रमहरूलाई केन्द्रित गरेको छ ।

## ५. सामुदायिक सहभागिता

रेडियो सगरमाथा नेपाल वातावरण पत्रकार समूहद्वारा सञ्चालित रेडियो हो । समूहमा १०३ जना जति पत्रकारहरू सदस्य रहेका छन् । यिनै सदस्यहरूले छानेको कार्यसमितिले रेडियो सगरमाथा सञ्चालन गर्दछ ।

नेपाल वातावरण पत्रकार समूहका १०० भन्दा बढी सदस्य पत्रकार र विशेषज्ञ सदस्यहरू आफैंमा विभिन्न समुदायका प्रतिनिधि हुन् भन्ने नठान्ने हो भने रेडियो सगरमाथाको व्यवस्थापनमा समुदायको उपस्थिति पाउन सकिँदैन । तर रेडियो सगरमाथाका कार्यक्रमहरूमा भने समुदायको उल्लेख्य संलग्नता रहेको छ । नेवार भाषासँग सम्बद्ध एउटा दैनिक कार्यक्रम मुनास: विगत ६ वर्षदेखि नेवार समुदायका स्वयंसेवकहरूको समूहले सञ्चालन गरिरहेको छ । यो कार्यक्रम सुरुमा १ घण्टाको थियो । अहिले पनि दैनिक ४५ मिनेट प्रसार हुनेगर्छ ।

रेडियो सगरमाथाले सुरुदेखि नै हाम्रो गीत हाम्रो आवाज नामको तामाङ भाषी साप्ताहिक कार्यक्रम प्रसार गरेको थियो । यो कार्यक्रम तामाङ समुदायका व्यक्तिहरूले ३ वर्षसम्म स्वयंसेवकका रुपमा सञ्चालन गरेका थिए । यस्तै मैथिली भाषाको कार्यक्रम मिथिला यात्रा स्वयंसेवकबाटै विगत ३ वर्षदेखि सञ्चालित छ । अपांगले अपांगका लागि सञ्चालन गरेको कार्यक्रम समानताका स्वरहरू पनि विगत ३ वर्षदेखि सञ्चालित छ । यो कार्यक्रम आँखा नदेख्ने एक छात्रा निर्मला ज्ञवालीको संलग्नतामा सञ्चालन भइरहेको छ । रेडियो सगरमाथाको स्थापनाकालदेखि नै समुदायका व्यक्तिहरूले कार्यक्रममा स्वयंसेवकका रुपमा काम गर्दै आएका छन् । अहिले पनि यसका २५-३० प्रतिशत कार्यक्रम स्वयंसेवकहरूबाट नै सञ्चालित छन् ।

कार्यक्रम उत्पादन तथा प्रसारणमा स्थानीय गैरसरकारी संस्था तथा उत्पादन गृहहरूको समेत संलग्नता रहेको छ ।

यसबाहेक कार्यक्रमहरूमार्फत सरदर दैनिक एक सयभन्दा बढी व्यक्तिहरूले रेडियोबाट आफ्ना कुरा भन्न पाएका छन् । यीमध्ये जनआवाज, कार्यक्रम एकैछिन, रेडियो सगरमाथाका साथी र अन्य रेडियो पत्रिका स्वरूप

अँगालेका कार्यक्रमहरू र फोनइनमार्फत सर्वसाधारण जनताले सोझै आफ्ना कुरा भन्ने गरेका छन् भने अन्तर्वार्ता र फिचरकै माध्यमबाट विशेषज्ञ, नीति निर्माता र सरकारी उच्चपदस्थ कर्मचारीहरूले आफ्ना कुरा राख्न पाएका छन् । यस्तै पत्राचार र फोनमार्फत प्रसारणबाट आफ्ना कुरा व्यक्त गर्नेहरूको संख्या दैनिक ५० भन्दा बढी रहेको छ । यसरी रेडियो सगरमाथाले सकेसम्म सबै वर्ग र क्षेत्रका व्यक्तिहरूलाई आफ्ना कार्यक्रममा समेटेको छ र सामुदायिक सहभागिता बढाएको छ ।

### *५.१ इँटा कार्यक्रम र रेडियो सगरमाथाका साथी*

रेडियो सगरमाथाले आफ्नो भवन बनाउने उद्देश्यले २०५९ सालको चैतमा इँटा कार्यक्रम सञ्चालन गऱ्यो । यो कार्यक्रमको अवधारणाअन्तर्गत समुदायका हरेक व्यक्तिले आफूले सकेको सहयोग गर्न सक्ने प्रावधान राखिएको थियो । रेडियोले ५०० रुपैयाँभन्दा बढी सहयोग गर्ने समुदायका सदस्यको नाम आफ्नो नयाँ बन्ने घरको भित्तामा लेखेर राख्ने बचन दिएको थियो । यो कार्यक्रम करिब ४ महिनाजति चल्यो । इँटा कार्यक्रममा संलग्न हुनेहरूको संख्या उत्साहप्रद थियो । रेडियो सगरमाथालाई सहयोग गर्ने सर्वसाधारणहरूको संख्या यो बीचमा १००० भन्दा बढी थियो । यी व्यक्तिरूबाट करिब १० लाखभन्दा बढी सहयोग दिने बचन प्राप्त भयो । यस्तै प्राविधिक सेवा र सामग्रीहरूको सहयोग उपलब्ध गराउनेहरू पनि निस्केका थिए । दूध बेचेर घर लैजानुपर्ने पैसा ल्याएर इँटा कार्यक्रममा संलग्न हुनेदेखि बिहेमा टीकोटालोबाट प्राप्त रकमसमेत इँटा कार्यक्रममा लगाउने व्यक्तिहरू देखिए । क्यान्सरले ग्रस्त एक चिकित्सकले आफ्नो औषधिका लागि परिवारले छुट्याएको पैसासमेत इँटा कार्यक्रममा लगाए । यस्तै राष्ट्रिय श्रम प्रतिष्ठानका तर्फबाट यसका कार्यकारी निर्देशक डा. शिव शर्माद्वारा सबैभन्दा ठूलो रकम १ लाख रुपैयाँ प्राप्त भयो भने अक्सफाम नेपालबाट ६० हजार रुपैयाँ । यस्तै नेपाल राष्ट्र बैंकका अर्थ विशेषज्ञ केशव आचार्य र राष्ट्र बैंककै पूर्व कर्मचारी नेपालगन्ज निवासी कृष्णश्याम शर्मा २५-२५ हजार रुपैयाँ सहयोग गरेर इँटा कार्यक्रममा संलग्न भए । यसरी सहयोग गर्नेहरूमा २ दर्जनभन्दा बढी विदेशी नागरिकहरूको पनि संलग्नता थियो ।

करिब १००० जना विभिन्न क्षेत्र र वर्गका व्यक्तिहरूबाट करिब १० लाख रुपैयाँको बचन प्राप्त भए पनि रेडियो सगरमाथामा जनशक्तिको अभावमा सो रकम उठाउन नसकिएको र त्यसको आधाजसो करिब ५ लाख रुपैयाँमात्र उठ्न सकेको छ ।

अहिले रेडियो सगरमाथाले इँटा कार्यक्रमलाई परिमार्जन गरी दोस्रो चरण रेडियो सगरमाथाका साथी कार्यक्रम अघि सारेको छ । यो कार्यक्रमअन्तर्गत इँटा कार्यक्रममा संलग्न सबै स्वत: रेडियो सगरमाथाका साथी बन्छन् ।

रेडियो सगरमाथाको साथी बन्न विभिन्न खाने सदस्यता र शुल्कको व्यवस्था स्टेसनले गरेको छ ।

रेडियो सगरमाथाले प्रसारणमा जनसहभागिता बढी होस् र समुदायका बढीभन्दा बढी सदस्यले आफ्ना कुरा समाजमा सुनाउन पाउन् भन्ने उद्देश्यले आफ्ना साथीका कुरा हरेक एक दिन बिराएर बेलुका ७ बजेको समाचारपछि प्रसारण गर्ने गरेको छ । यो कार्यक्रम रेडियो सगरमाथाले स्वीस विकास सहयोग नियोगको सहयोगमा सञ्चालन गरिरहेको छ ।

| सदस्यताको प्रकार | नवीकरणको प्रकार | शुल्क |
|---|---|---|
| १. व्यक्तिगत | | |
| क. साधारण | वर्षेपिच्छे गर्नुपर्ने | १ हजार वा बढी |
| ख. मानार्थ | नवीकरण गर्नु नपर्ने | ५ हजार वा बढी |
| ग. आजीवन | नवीकरण गर्नु नपर्ने | २५ हजार वा बढी |
| २. संस्थागत | | |
| क. साधारण | वर्षेपिच्छे गर्नुपर्ने | ५ हजार वा बढी |
| ख. मानार्थ | नवीकरण गर्नु नपर्ने | ५० हजार वा बढी |
| ग. आजीवन | नवीकरण गर्नु नपर्ने | ५० हजार वा बढी |

## ६. सामाजिक परिवर्तन

रेडियो सगरमाथाले २०५४ साल जेठ ९ गते प्रसारण सुरु गरेदेखि एक खालको नौलो स्वादको रेडियो तरंग काठमाडौं उपत्यकावासीले पाए । रेडियो सगरमाथाको बोल्ने शैली नितान्त मौलिक (रेडियो नेपाल र यसअन्तर्गतको एफएम १०० भन्दा भिन्न) थियो । रेडियो सगरमाथाले छनौट गर्ने गीतहरूको मिठास आफ्नै खालको थियो । हिन्दी र अंग्रेजी गीतको बिगबिगी भएको काठमाडौं उपत्यकामा यसले हिन्दी गीत नबजाउने अघोषित नीति लियो । २०५४ भदौ १३ गतेदेखि दैनिक रेडियो पत्रिका हाम्रो खाल्डो सुरु भयो । यो रेडियो पत्रिकाले उपत्यका र वरपरका बासिन्दाहरूलाई एक खालको नौलो स्वाद चखायो । यसले रिपोर्ट, प्रोफाइल, जनआवाज र प्रतिध्वनि जस्ता स्तम्भमार्फत जनताका वास्तविक आवाजहरू प्रसार गऱ्यो । रेडियोका आवाजहरूको रङमा विविधता र विश्वसनीयता प्रष्ट झल्कियो । यसको प्रस्तुतिमा मौलिकता र विषयहरू जनजीवनलाई सोझै छुने खालका भएका कारण हाम्रो खाल्डो छिट्टै लोकप्रिय भयो । यसमा जनसहभागिता व्यापक बढ्न थाल्यो । थापाथलीको रामभण्डारअगाडि परेको खाल्डोबारे रिपोर्ट प्रसार हुनासाथ खाल्डो पुरियो । हाम्रो खाल्डोले वास्तविक पर्वका आवाज र बाजाहरूसमेत रेकर्ड गरी प्रसार गऱ्यो । यसबाट मौलिक जात्रा र पर्वप्रतिको जनलगाव बढ्यो भने सञ्चालक र सम्बन्धित समुदायमा अझ जाँगर थपियो ।

क्रमैसँग रेडियो सगरमाथाको लोकप्रियता बढ्दै गयो । प्रसिद्ध गायक पुष्प नेपालीले आफूसँग भएका आफ्ना गीतहरू कालधारास्थित रेडियो सगरमाथाको स्टुडियोमा ल्याएर बुझाउनुभयो । उहाँले भन्नुभयो, “रेडियो सगरमाथा भनेको जनता हो, रेडियो नेपाल भनेको प्रहरी हो, बरु प्रहरीले चोर्छ जनताले आफ्नै सम्पत्ति चोर्दैन भन्ने मान्यताअनुरूप मेरा गीतहरू तपाईहरूलाई दिँदैछु ।” यसपछि धेरै गायक संगीतकारले आफ्ना रचना रेडियो सगरमाथालाई ल्याएर दिने लहर चल्यो । यो क्रम अझै जारी छ । लोक संगीतका प्रसिद्ध अन्वेषक शुवि शाहले गीत रेकर्ड गराउने पहिलो नेपाली गायक सेतुरामका दुर्लभ डिस्कहरू रेडियो सगरमाथालाई उपहारस्वरूप प्रदान गर्नुभयो र रेडियो सगरमाथाले ती डिस्कहरू प्रसार गर्न थालेपछि सेतुरामबारे नेपाली जनमानसलाई जानकारी हुन थाल्यो ।

रेडियो सगरमाथाले सुरु गरेको विचार स्तम्भ "अब मेरो पालो" ले बोलीमा विविधता ल्यायो भने "मेरो कथा" ले लुकेर बसेका प्रतिभा र उदाहरणीय व्यक्तित्वहरूको जीवनगाथा सार्वजनिक गर्न सघायो। गन्जु लामाजस्ता दोस्रो विश्वयुद्धका नायकको जीवनी र युद्धको वर्णन रेडियोले मेरो कथा कार्यक्रमअन्तर्गत प्रसार गऱ्यो । यो क्रममा कैयौं दुर्लभ आवाजहरू रेडियो सगरमाथाले प्रसार गऱ्यो ।

छुट्टै पहिचानयुक्त डिजाइनका कारण कार्यक्रमहरू लोकप्रियमात्रै हैन, प्रभावकारी पनि बने। सरकारले समाचार प्रसारणका लागि अनुमति दिएको थिएन। तर हालचाल सुरु भयो। यो समाचार बुलेटिन नितान्त सामुदायिक खालको थियो। यसमा प्रयोग हुने भाषा र यसले समेट्ने विषयवस्तुका कारण समुदायमा यो लोकप्रिय भयो। समुदायबाट फोन गरेर घटना टिपाइन्थे र प्रसारण भएपछि धन्यवादका फोन आउँथे ।

रेडियो सगरमाथाका कार्यक्रमहरू डबली र आजका कुराले समसामयिक विषयमा कार्यक्रम सञ्चालन गरी जनतालाई शिक्षित गर्न र नीति निर्माण तहमा सुधार गर्न ठूलो सहयोग पुरयाएका छन्। कार्यक्रम आचारविचारले भ्रष्टाचारविरुद्ध जनमत तयार पार्न ठूलो मद्दत पुऱ्याएको छ। २०५५ सालमा यो कार्यक्रम सुरु हुँदा भ्रष्टाचारको गफ गर्नु सोखपूर्वक समय काट्ने मेलो हो भनेजस्तो गरी सर्वसाधारणले लिन्थे भने नीति-निर्माता चाहिँ आफू दूधले धोइएको जस्तो गरी अनावश्यक कुरो किन उठाएको होला भनेर प्रश्न गर्थे। कानुनको कमजोरीका कारण अख्तियार दुरुपयोग अनुसन्धान आयोगले पुनरावेदन अदालतमा हालेका प्राय: सबै मुद्दामा भ्रष्टाचारीकै जित हुन्थ्यो। तर आज यसबारे जनताको चेतनास्तर बढेको छ। भ्रष्टाचारविरोधी कानुन सशक्त बनेको छ र अख्तियार दुरुपयोग अनुसन्धान आयोगले यसबीचमा सयौं मुद्दाहरू दायर गरेको छ। यस्ता मुद्दा हेर्ने छुट्टै निकायका रूपमा विशेष अदालत खडा भएको छ र यसले कैयौं भ्रष्टाचारीलाई सजाय दिलाइसकेको छ। कार्यक्रम आचारविचार काठमाडौं उपत्यकाबाहिर पनि प्रसार भइरहेको छ ।

रेडियो सगरमाथाले प्रसार गरेका कार्यक्रमका कारण आज नेपाली गीत संगीतको विकासमा समेत महत्त्वपूर्ण योगदान मिलेको छ। डिस्को र हिन्दी गजल बज्ने काठमाडौंका रेस्टुरेन्टहरू आज नेपाली दोहोरी गीत बजाउँछन्। दोहोरी सुन्न र गाउन अनि नाच्न रेस्टुरेन्ट जानेहरूको संख्या कम छैन। कैयौं कलाकार, गीतकारका नाम रेडियो नेपालबाट वर्षौंदेखि गलत बजिरहेकामा रेडियो सगरमाथाका अजम्मरी गीत र संगीत सरोबरले सच्याई वास्तविक सर्जकलाई न्याय दिलाएका छन् ।

रेडियो सगरमाथाले अल्पसंख्यक आदिवासीका समस्या उजागर गर्ने ठाउँ प्रदान गरेको छ। जसअन्तर्गत जनजातिको प्रतिनिधित्व गर्दै बालकृष्ण मावोहाङले साप्ताहिक रूपमा आदिवासीसँग सम्बन्धित आवाज उठाउँदै आउनुभएको छ। यस्तै अपांग जगतलाई हेयको दृष्टिले हेर्ने हाम्रो समाजको दृष्टिकोण परिवर्तन गर्न कार्यक्रम समानताका स्वरहरूले सहयोग पुऱ्याएको छ। कार्यक्रम रेडियो कुराकानीले जनतालाई हरेक विषयप्रति निष्पक्ष ढंगले विश्लेषण गर्न सहयोग पुऱ्याएको छ ।

पाका पत्रकार भैरव रिसालले कार्यक्रम "उहिले बाजेका पालामा मार्फत" टेस्टीमनी" अर्थात् कथ्य इतिहासको उत्खनन गर्नुभएको छ। यो कार्यक्रमले कहिल्यै सार्वजनिक नभएका आर्थिक, सामाजिक र सांस्कृतिक इतिहासका पानाहरू पल्टाइरहेको छ। यसले इतिहासका अन्वेषक र अनुसन्धाताहरूका लागि ठूलो र खँदिलो सामग्री जम्मा गरिसकेको छ। यसको एक भाग पानस साउथ एसियाको सहयोगमा पुस्तकाकार रूपमा प्रकाशित पनि भइसकेको छ ।

कार्यक्रम शान्ति अभियान वर्तमान द्वन्द्व कम गर्न जनचेतना वृद्धि गर्ने उद्देश्यले सञ्चालित छ । यो कार्यक्रम काठमाडौंभन्दा बाहिरसमेत प्रसार हुन्छ । द्वन्द्वरत माओवादी विद्रोही र सुरक्षा फौजलाई मानवीय कानुन र मानव अधिकारसम्बन्धी शिक्षा दिन र जनतालाई द्वन्द्वका बेला हुने क्षति र मानवअधिकारको हननबारे सचेत रहन यो कार्यक्रम सहयोगी बनेको छ ।

यस्तै, महिला हकका कुरा गर्ने लोग्नेमान्छेलाई जोइटिंग्रेको उपाधि भिराउने परम्परागत मान्यता बोकेको हाम्रो समाजमा लैंगिक समताका लागि चेतना जगाउन सहअस्तित्व कार्यक्रम निकै उपयोगी भएको छ । यो कार्यक्रम काठमाडौं उपत्यकाबाहिर समेत प्रसार हुन्छ ।

बिहानै प्रसार हुने पत्रपत्रिकाको सँगालोले पत्रिका किनेर पढ्न नसक्ने र पढ्न फूर्सद नहुने दुवैथरीलाई एकाबिहानै समाचार सुनाएर ठूलो गुन लगाएको छ र बानीमै परिवर्तन ल्याएको छ । कार्यक्रम एकैछिनले जनताका वास्तविक आवाज र अनुभव प्रसार गर्ने गरेको छ भने चिटिक्कले फोहोरमैला र वातावरणका क्षेत्रमा जागरण अभियान सञ्चालन गरिरहेको छ । यस्तै कार्यक्रम संगीत सरोबरले पुराना नेपाली सांगीतिक सर्जक र सिर्जनाको उत्खनन गरिरहेको छ । लोकभाकाले नेपाली लोकगीतको सम्बर्द्धनमा योगदान पुऱ्याइरहेको छ ।

समग्रमा भन्नुपर्दा, रेडियो सगरमाथाले भड्किन लागेको नेपाली समाजमा आफ्नोपनप्रति गौरव गर्न बल पुऱ्याएको छ । नागरिकलाई तिनका अधिकार र कर्तव्यप्रति सजग रहन सिकाएको छ । बहुलवादी समाजमा खुल्ला बहसको अभ्यासलाई मूर्तरूप दिएको छ । नीतिनिर्माताहरूलाई जनप्रतिक्रिया उपलब्ध गराउनुका साथै तिनलाई जनतासमक्ष उभ्याएको छ । नीति निर्माताहरूलाई आफू सच्चिन र आफ्ना नीति, कानुन र निर्णय सच्याउन सहयोग पुऱ्याएको छ । नागरिकलाई दुरुस्त सूचना पाउन सहयोग गरेको छ । प्रतिभालाई समाजमा स्थापित गरी तिनको हौसला बढाएको छ । सुशासन र पारदर्शिताका लागि सञ्चालित अभियानलाई सघाएको छ । सामाजिक अभियानमा लाग्नेहरूको मनोबल बढाएको छ र सामाजिक अन्तर्क्रियाका माध्यमबाट एकापसमा अनुभव र समस्या आदान-प्रदान गरी अगाडि बढ्न मद्दत पुऱ्याएको छ । लैंगिक समता, मानवअधिकार र शान्तिका लागि जनमत तयार गर्न सघाएको छ । मुख्य कुरो, जनतामा आफ्ना कुरा निर्धक्क भन्न सक्ने शक्ति भरेको छ ।

रेडियो सगरमाथाको अर्को महत्त्वपूर्ण पक्ष भनेको सकभर शुद्ध भाषामा कार्यक्रम सञ्चालन गर्नु । यसले सकेसम्म मौलिक र शुद्ध नेपाली भाषामा कार्यक्रमहरू सञ्चालन गरेका कारण नेपाली भाषा बनाउने हो भने रेडियो सगरमाथा सुन्नुपर्छ भन्ने विश्वास आमजनमासमा पर्न थालेको छ । सञ्चारिका समूहकी अध्यक्ष वन्दना राणाको भनाइलाई नै सापटीस्वरूप यहाँ राखौं । उहाँ भन्ने गर्नुहुन्छ, 'म सूचनाका साथै नेपाली भाषा सिक्नसमेत रेडियो सगरमाथा सुन्ने गर्छु ।'

## ७. स्टेसनको निरन्तरता

रेडियो सगरमाथा सामुदायिक भावनाबाट सञ्चालित रेडियो स्टेसन हो । यसको पुँजी भनेकै सामूहिक भावना र व्यावसायिक निष्ठा हो । नेपाल वातावरण पत्रकार समूहसँग रेडियो खोल्न पुग्ने पैसा थिएन तर केही गर्न सकिन्छ कि भन्ने आँट थियो । यही आँट र विश्वासका साथ समूहले सञ्चार नीतिदेखि नै लविङको काम थाल्यो । साथसाथै यसले जनशक्ति विकासका लागि पनि तालिम सञ्चालन गऱ्यो । युनेस्को आइपुग्यो नेपाल वातावरण

पत्रकार समूहको होस्टेमा हैंसे गर्न । युनेस्कोले रेडियो खोल्न प्राविधिक सहयोग दियो । युनेस्कोको ६० हजार डलर बराबरको सहयोगमा रेडियो सगरमाथा परियोजना सुरु भयो । सानो मिक्स्चर, मार्टिन एलार्डको ५०० वाटको घरेलु ट्रान्समिटर, ६ वटा मरान्च फिल्ड रेकर्डर, केही माइक्रोफोन । सगरमाथा परियोजनाका प्राविधिक सम्पत्ति यिनै थिए । यसको नेतृत्वमा बस्नेहरूमा यिनै थोरै उपकरणबाट पनि केही गर्न सकिन्छ भन्ने आँट थियो ।

जेठ ९, २०५४ मा रेडियो सगरमाथाको प्रसारण सुरु भएपछि यसका सञ्चालकहरूमा चुनौती थपिँदै गयो । पहिले त परीक्षण प्रसारण दैनिक २ घण्टामात्र गरिँदै थियो । २०५४ चैत १२ देखि यसले नियमित प्रसारण सुरु गऱ्यो । समय थपिँदै थियो । सुरुमा १ जना उत्पादक र २ जना सहायक उत्पादक र एक जना प्राविधिकबाट प्रसारण थालिएको थियो । तर ६ घण्टा प्रसारण हुने बित्तिकै थप जनशक्ति चाहियो । यसरी प्रसारण समय थपिनेबित्तिकै जनशक्ति र खर्च दुवै बढ्न थाल्यो ।

काठमाडौंमा व्यापारिक रेडियो पनि थपिने क्रम बढ्दै थियो । तिनले २४ घण्टे प्रसारणको अभ्यास गरेका थिए । प्राविधिक हिसाबले कालधारास्थित प्रसारण केन्द्र अनुपयुक्त भएपछि रेडियो सगरमाथाले ठाउँ सर्नुपर्ने भयो । भइरहेको स्टुडियो त्यत्तिकै छोड्नुपऱ्यो भने अर्को ठाउँमा फेरि खर्च लाग्नु स्वाभाविकै थियो । अर्कोतिर प्रशासन, लेखा सबैतिर जनशक्ति बढिरहेको थियो ।

सुरुमा विज्ञापनसमेत प्रसारण नगर्ने नीति लिएको रेडियो सगरमाथाले केही समयभित्रैमा निरन्तरताका हिसाबले आफ्नो पूर्व नीतिमा परिवर्तन गर्नुपऱ्यो । अन्ततः तत्कालीन स्टेसन म्यानेजर रघु मैनालीको पहल र सूचना तथा सञ्चारमन्त्री राधाकृष्ण मैनालीको सदासयतामा रेडियो सगरमाथाले २०५५ सालको माझमाझीदेखि विज्ञापन प्रसार गर्ने अधिकार प्राप्त गऱ्यो र २४ सै घण्टा प्रसारणमा जान सक्ने इजाजत प्राप्त गऱ्यो । यसबाट रेडियो सगरमाथाको आँट बढ्यो । अर्कोतिर डेनिस सहयोग संस्था डानिडाले रेडियोको विकासका लागि सहयोग गऱ्यो । वेष्ट मिनिस्टर फाउन्डेसन, इको हिमालगायतका संस्थाले रेडियोको निरन्तरताका लागि आर्थिक वा प्राविधिक सहयोग गरे ।

रेडियो सगरमाथाले आफ्नो निरन्तरताका लागि अहिले मासिक झन्डै पाँच लाख रुपैयाँ जुटाउनुपर्छ । यसका लागि स्टेसनले विज्ञापन, कार्यक्रम उत्पादनमा सहयोग र कार्यक्रममा प्रायोजन गरी तीन ढंगले आम्दानी गर्ने गरेको छ । अहिले रेडियो सगरमाथा आत्मनिर्भरताको बाटोमा अगाडि बढिरहेको छ । रेडियो सगरमाथालाई यो दिशामा अघि बढ्न सामुदायिक रेडियो सहयोग केन्द्र (नेवापस), अक्सफाम नेपाल, स्वीस विकास सहयोग नियोग, इको हिमाल, एक्सन एड नेपाल, ट्रान्सपरेन्सी इन्टरनेसनल नेपालगायतका अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले सहयोग गरिरहेका छन् । यस्तै सामुदायिक वन उपभोक्ता महासंघ, शिक्षा पत्रकार समूहलगायतका गैरसरकारी संस्थाहरूसँग पनि मिलेर रेडियो सगरमाथाले काम गरिरहेको छ ।

## ८. चुनौती र व्यवधान

रेडियो सगरमाथाले गर्भकालदेखि नै चुनौती र व्यवधान व्यहोर्न सिकेको हो । झन्डै आधा दशकको संघर्षपछि मात्रै स्थापना भएको शिशु रेडियो सगरमाथा जन्मँदै हातखुट्टा बाँधिएर जन्मेको थियो । झन्डै डेढ दर्जन सरकारी शर्तले यसका हातखुट्टा बाँधिएका थिए । तर जसरी तसरी बामे सर्न थालको रेडियो सगरमाथाले दिगोपन, प्राविधिक, कार्यक्रम उत्पादन र व्यावसायिक तथा व्यवस्थापकीय क्षेत्रमा चुनौती र व्यवधान झेल्दै

अगाडि बढ्नुपर्‍यो । साँच्चै भन्ने हो भने रेडियो सगरमाथाले पाइला पाइलामा चुनौती व्यहोर्दै आउनुपरेको छ । व्यवधान खप्दै आउनुपरेको छ । रेडियो सगरमाथाका स्टेसन म्यानेजर मोहन विष्टका अनुसार, रेडियो सगरमाथाको अहिलेको ठूलो चुनौती भनेको दिगोपन र कार्यक्रमको गुणस्तर वृद्धि नै हो । यसका चुनौती र व्यवधानलाई यसरी प्रस्ट्याउन सकिन्छ

### *८.१ प्राविधिक चुनौती र व्यवधान*

२०५४ साल जेठ ९ गते रेडियो सगरमाथाको प्रसारण सुरुमात्रै के भएको थियो, २० मिनेटमै प्रसारण बन्द भयो । पहिलो दिन नै यसले प्राविधिक समस्या भोग्नुपर्‍यो । प्राविधिकहरूले त्यसलाई ठीकठाक पारे । तर कालधाराको प्रसारण केन्द्रबाट ध्वनि तरंग राम्रो नसुनिएको प्रतिक्रिया आउन थाल्यो । रेडियोको प्रसारण केन्द्र राख्न सम्भावित ठाउँको खोजी हुन थाल्यो । पाटनढोकास्थित हिमाल एसोसिएसनको घरबाट केही समयलाई प्रसारण गर्ने निधो भयो । कार्यक्रम उत्पादन कालधाराबाट गर्ने, प्रसारण पाटनढोकाबाट । यो निर्णयअनुसार २०५४ असोज २१ गते रातभरि काम गरेर २२ गतेदेखि हिमालको भवनबाट प्रसारण सुरु भयो । त्यहाँबाट भन्दा पानस साउथ एसियाको भवनबाट राम्रो सुनिने भन्दै कात्तिक ५ गते पानसको भवन, पाटनढोकामा प्रसारण उपकरण सारिए । यो भवन हिमालको भन्दा अग्लो थियो । यसबीचमा बखुण्डोलको एउटा घर भाडामा लिने काम भइसकेको थियो । डानिडाको सहयोगमा कात्तिक २८ देखि बखुण्डोलस्थित भाडाको घरमा स्टुडियो बनाउने काम सुरु भयो र मंसिर २५, २०५४ मा कालधाराबाट कार्यालयसमेत सारियो ।

आठ ट्र्याकको मिक्स्चर, केही माइक्रोफोन, ६ वटा फिल्ड रेकर्डर, ४ वटा हेडफोन र एउटा ट्रान्समिटरबाट काम थालिएको थियो । माघ ८, ०५४ मा ट्रान्समिटर पड्केपछि करिब एक महिनाका लागि प्रसारण रोकियो । १०० वाट क्षमताको चिनियाँ ट्रान्समिटर भित्रिएपछि फागुन १३ देखि फेरि प्रसारण सुरु भयो । टेलिफोन हाइब्रिड नभएका कारण २०५५ सम्म फोनबाट सोझै अन्तर्क्रिया गर्न रेडियो सगरमाथा समर्थ थिएन । प्राविधिकहरूका अनुसार, अझै पनि उपकरणहरू राम्ररी म्याच हुन नसकेका कारण प्रसारणको गुणस्तर जति राम्रो हुनुपर्ने हो, त्यति हुन सकेको छैन ।

रेडियो सगरमाथासँग प्राविधिक व्यवधान र चुनौती सधैं नै रहँदै आएको छ । पर्याप्त उपकरणको अभाव पहिले पनि थियो, अहिले पनि छँदैछ । विभिन्न समस्याका बीच रेडियो सगरमाथाले २०५६ देखि डिजिटल प्रविधिमा कार्यक्रम उत्पादन गर्न थाल्यो । बीबीसीको सहयोगमा २०५७ को अन्त्यतिर ५०० वाटको ट्रान्समिटर भित्रियो । रेडियो सगरमाथा २०५८ देखि ५०० वाटमा प्रसार हुन थाल्यो । पर्याप्त उपकरणसहित प्रसारणलाई डिजिटल प्रविधिमा पुर्‍याउनु रेडियो सगरमाथाको चुनौती हो । यसका साथै काठमाडौं उपत्यकाबाहिरका स्टेसनहरूको सञ्जाललाई सशक्त बनाउन स्याटेलाइट प्रविधिमा जानसक्नु यसको अर्को चुनौती हो ।

### *८.२ कार्यक्रममा चुनौती र व्यवधान*

रेडियो सगरमाथाका कार्यक्रममा सबैभन्दा ठूलो व्यवधान सरकारले उत्पन्न गरेको छ । सूचना तथा सञ्चार मन्त्रालयले विभिन्न बहानामा रेडियो सगरमाथाका कार्यक्रमहरूमा हस्तक्षेप गर्ने गरेको छ । मन्त्रालयले आफ्नो प्रतिनिधि कार्यक्रम निर्धारण बोर्डमा पठाएर जहिले पनि हस्तक्षेपको ठाउँ खुला राखेको छ । अर्कोतिर

बेलाबेलामा रेडियो सगरमाथाका कार्यक्रमसम्बन्धी टेप मगाएर पनि हस्तक्षेप गर्ने प्रयास गरेको छ । सुरुमा रेडियो सगरमाथालाई लाइसेन्स प्रदान गर्दा राजनीतिसम्बन्धी समाचार र विश्लेषण प्रसार गर्न नपाइने गरी सरकारले प्रतिबन्ध लगाएको थियो । जसबाट राजनीतिक रूपमा भएका घटनाको यथार्थ विवरण र विश्लेषण सुन्न श्रोताहरू वञ्चित थिए । तर रेडियो सगरमाथाले विस्तारै यो बार भत्काउन थाल्यो ।

२०५८ साल पुस १८ गते तत्कालीन सूचना तथा सञ्चारमन्त्री जयप्रकाश गुप्ताले एफएम प्रविधिबाट प्रसारित रेडियोहरूलाई आफैंले समाचार संकलन गरी प्रसारण गर्न रोक लगाए भने रेडियो नेपाल र राष्ट्रिय समाचार समितिलगायतका सरकारी सञ्चारमाध्यमबाट मात्रै समाचारसम्बन्धी सामग्री खोज्नुपर्ने निर्देशन पनि जारी गरे । गुप्ताले कार्यक्रमहरूलाई प्रत्यक्ष हस्तक्षेप गर्न सक्ने अधिकारसहितको एउटा ९ सदस्यीय सरकारी समितिसमेत बनाए । यसका साथै के प्रसार गर्न हुने र के नहुने भन्ने निर्देशिका पनि जारी गरे । तत्कालीन मन्त्री गुप्ताले रेडियोभित्र कार्यक्रम निर्धारण गर्न एउटा ३ सदस्यीय कार्यक्रम निर्धारण बोर्ड गठन गर्नुपर्ने, यो बोर्डमा स्टेसन प्रमुखको संयोजकत्वमा उसले तोकेको १ जना र मन्त्रालयको प्रतिनिधि (अनिवार्य) रहनुपर्ने, मन्त्रालयको प्रतिनिधिको उपस्थितिबिना बैठक बस्न नपाउने, मन्त्रालयको प्रतिनिधिले सहमति नजनाएका कार्यक्रम प्रसार गर्न नपाइने, प्रसारण हुने कार्यक्रमहरूको विवरण सात दिनअगाडि नै मन्त्रालयमा बुझाउनुपर्ने र मन्त्रालयले आपत्ति जनाएका कार्यक्रम प्रसारण गर्न नपाइने कडा निर्देशिका जारी गरे । यसले स्वतन्त्र रेडियोको हातखुट्टा र दिमाग नै बाँधिदियो । यो निर्णयको विरोधस्वरूप रेडियो सगरमाथाले केही दिन समाचार नै प्रसार गरेन । तर यो निर्देशिकाविरुद्ध अधिवक्ता माधव बस्नेत र सुदीप पौडेलद्वारा सर्वोच्च अदालतमा रिट हालेपछि अदालतले यो निर्देशिका संविधान र कानुनको वर्खिलाप भएको भनी सुरुदेखि सबै बदर गरिदियो । साथै सर्वोच्च अदालतले प्रसारण पत्रकारितामा रेडियोको भूमिका व्यापक र गहन भएको मूल्यांकन गर्दै यसको पूर्णस्वतन्त्रताको ग्यारेन्टी गरिदियो ।

यसपछि केही समयसम्म मन्त्रालय निकै हच्कियो । तर पूर्वाग्रहका कारण सूचना तथा सञ्चार मन्त्रालयले २ वर्षसम्म रेडियो सगरमाथाको लाइसेन्स नवीकरणसमेत नगरी बस्यो । जनप्रतिनिधिप्रति उत्तरदायी सरकारको अभावमा फेरि मन्त्रालयले सर्वोच्च अदालतको फैसलाको भावनाविपरीत आफ्नो प्रतिनिधि कार्यक्रम प्रसारण निर्धारण बोर्डमा पठाउन थालेको छ र हस्तक्षेपको सुरुवात गरेको छ । यसबाट भोलि मन्त्रालयका शाखा अधिकृतको निगाहमा रेडियो प्रसारण रहनुपर्ने चुनौती प्रष्ट देखिएको छ ।

रेडियो सगरमाथाको प्रसारण शैली र निर्देशिका लिखित रूपमा नभएका कारण परिवार जति ठूलो हुँदै गयो, उति नै एकरुपताको भने समस्या रहँदै आएको छ । कति कार्यक्रम उत्पादकहरू नेपाल वातावरण पत्रकार समूहको आदर्श, रेडियो सगरमाथाको ऐतिहासिक पक्ष र महत्त्व, यसले अँगालेको नीति, लक्ष्य र उद्देश्यबारे अनभिज्ञ हुनुले पनि कार्यक्रमहरूको गुणस्तर जुन स्तरमा वृद्धि हुनुपर्थ्यो त्यो हुन सकेको छैन । व्यवस्थापनमा आउने बेलाबेलाको परिवर्तनले समेत कार्यक्रमहरू धेरथोर प्रभावित हुने गरेका छन् । रेडियो सगरमाथाको परिवार दिनदिनै बढ्दै गएको, कार्यक्रमको संख्या ६० जति पुगिसकेको, निर्माता र सञ्चालकहरू भिन्न भिन्न पृष्ठभूमिबाट आएका र धेरैलाई स्टेसनको विगत तथा भविष्यको योजनाबारे समेत ज्ञान नभएको जस्ता कुराले रेडियोको प्रस्तुति, शैली र लवजमा समेत भिन्नता देखिन थालेको छ । यो भिन्नतालाई हटाउन रेडियोले स्पष्ट लिखित दस्तावेज तयार पार्नुपर्ने खाँचो महसुस भएको छ ।

यसबाहेक, अहिले भइरहेको गुणस्तर खस्किन नदिनु र तालिमका अवसरहरूलाई उपयोग गर्दै समाजको आवश्यकता पूरा गर्न निष्पक्ष, सन्तुलित र उद्देश्यपरक गुणस्तरयुक्त कार्यक्रमहरू उत्पादन र प्रसार गरी कार्यक्रम प्रसारणको मानक कायम गर्न सक्नु अहिलेको चुनौती हो । कार्यक्रमका विषयवस्तुमा सबैखालको सन्तुलन मिलाइरहन सक्नु पनि स्टेसनका लागि चुनौती हो । भूमण्डलीकरण र यसले पार्न सक्ने नकारात्मक प्रभावबाट जोगिँदै स्वतन्त्र सम्पादकीय छवि कायम राख्न सक्नु तथा आफ्नो सञ्जाल विस्तार गर्दै सञ्जालमा रहेका रेडियोहरूका लागि समेत कार्यक्रम बनाउँदा एकैपटकमा काठमाडौं बाहिरका श्रोता र काठमाडौं उपत्यकाका श्रोताका लागि समान रुचि र आवश्यकता पूरा गर्ने गरी कार्यक्रम निर्माण गर्न सक्नु अर्को चुनौती हो ।

### *८.३ दिगोपनसम्बन्धी चुनौती*

रेडियो सगरमाथाका अगाडि खडा भएको सबैभन्दा ठूलो चुनौती दिगोपनको रहेको छ । कार्यक्रमको निरन्तरताका विपरीत बारम्बार धर्मराउँदै रेडियो सगरमाथा आठ वर्षमा प्रवेश गरेको छ । यसको दिगोपनका लागि सुरुदेखि नै प्रयास भएको भए पनि व्यवस्थापनमा आएको बारम्बारको अस्थिरताले पटक-पटक धक्का पुऱ्याएको छ । यति हुँदाहुँदै पनि दिगोपनका लागि  रेडियो सगरमाथाले आफूजस्तै उद्देश्य भएका सामाजिक संस्थाहरूको पहिचान गरी मिलेर काम गर्दै आएको छ । विभिन्न राष्ट्रिय र अन्तर्राष्ट्रिय सामाजिक संस्थाहरूले रेडियो सगरमाथासँग सहकार्य गर्दै आएका छन् जसका कारण यसको दिगोपनमा टेवा पुग्दै आएको छ । स्टेसन म्यानेजर मोहन विष्ट भन्नुहुन्छ, "बजार व्यवस्थापनका हिसाबले काठमाडौं उपत्यका जस्तो सानो ठाउँमा धेरै रेडियो र अन्य सञ्चारमाध्यमका कारण ठूलो प्रतिस्पर्धा छ । अहिले हामी उद्देश्य मिल्ने संस्थाहरूसँग संस्थागत रूपमै मिलेर काम गर्ने क्रममा नयाँ-नयाँ सम्भावनाहरूको खोजी गरिरहेका छौं । प्रवर्द्धन विभागको स्थापना गरेर कार्यक्रमहरूको प्रवर्द्धन गर्ने क्रममा छौं । यसले दिगोपनका लागि भरथेग गर्छ । साथसाथै रेडियो सगरमाथाका कार्यक्रमहरूसम्बन्धी उपयुक्त दस्तावेज बनाउने कार्य पनि भइरहेको छ । सामुदायिक सहभागिताका लागि हामीले रेडियो सगरमाथाका साथी कार्यक्रम सुरु गरेका छौं । यसबाट दिगोपनको राम्रो राजमार्ग बन्ने हाम्रो विश्वास छ ।"

रेडियो सगरमाथा प्रसारण हुन थालेको ८ वर्ष लाग्दा पनि यसको आफ्नो भवन अहिलेसम्म बन्न सकेको छैन । हाल मातृसंस्था नेपाल वातावरण पत्रकार समूहले जग्गा किनिसकेको छ । तर घर बनाउन सहयोग र स्रोत जुटाउन सक्नु आफैंमा चुनौती हो । रेडियो सगरमाथाका अगाडि कार्यक्रमहरूको लोकप्रियतालाई सामाजिक बजार प्रवर्द्धन र जनसहभागिताका आधारमा खर्च जुटाएर रेडियोको विकासका लागि आवश्यक पर्ने स्रोत जुटाउन सक्नु नै दिगोपनका लागि मुख्य चुनौती हो ।

–o–

रेडियो सगरमाथालाई सूचना तथा सञ्चार मन्त्रालयले ऐन र नियममा भएका बाहेक निम्न थप शर्तहरूसहित प्रसारण इजाजत दिएको थियो–

क) व्यापारिक कार्यक्रम सञ्चालन नगर्ने

ख) इजाजत नवीकरणका लागि पेश गर्दा रेडियो प्रसारणको खर्च र कार्यक्रम सञ्चालनका लागि प्राप्त रकम र स्रोतको विवरणसहितको लेखा परीक्षण विवरण पेश गर्नुपर्ने

ग) प्रसारण कार्यक्रम सञ्चालन बोर्डमा सूचना तथा सञ्चार मन्त्रालयको प्रतिनिधि समावेश गर्नुपर्ने ।

घ) मूलत: वातावरण कार्यक्रम प्रवर्द्धन गर्ने किसिमको कार्यक्रम सञ्चालन गर्ने

ङ) कृषि, शिक्षा, स्वास्थ्य, परिवार नियोजन, जनसंख्या, पर्यटन, वन, वातावरण, विज्ञान, तथा प्रविधि, उद्योग, वाणिज्य र सामुदायिक विकाससम्बन्धी कार्यक्रम प्रसारण गर्न पाइने तर राजनीतिक विश्लेषणसम्बन्धी र राजनीतिसम्बन्धी समाचार प्रसारण गर्न नपाइने ।

च) सुरुमा दैनिक दुई घण्टासम्म प्रसारण गर्ने, सन्तोषजनक ढंगबाट ६ महिनासम्म प्रसारण गरेपछि समय थप गर्ने स्वीकृतिका लागि अनुरोध भएमा आवश्यकता हेरी थप गर्न सकिने ।

छ) प्रत्येक हप्ता प्रसारण गरिने र प्रसारित कार्यक्रमको प्रतिवेदन सूचना तथा सञ्चार मन्त्रालयमा पेश गर्नुपर्ने ।

ज) प्रसारित कार्यक्रमको रेकर्ड साधारणतया सात दिनसम्म सुरक्षित राख्नुपर्ने । माग भएको बखतमा मन्त्रालयमा उपलब्ध गराउनुपर्ने ।

झ) प्रसारण हुनेमध्ये राष्ट्रभाषामा प्रसारण हुने अवधि कम्तीमा ५० प्रतिशत हुनुपर्ने ।

ञ) गीतसंगीतको कार्यक्रम राष्ट्र र राष्ट्रिय भाषामा मात्र गर्ने र त्यस्तो सांगीतिक कार्यक्रम कुल प्रसारण समयको २५ प्रतिशत समयमात्र हुनुपर्ने ।

ट) प्रसारण गर्ने समयभित्र पर्ने रेडियो नेपालको राष्ट्रिय कार्यक्रमबाट प्रसारित नेपाली भाषाको कार्यक्रम प्रसारण गर्नुपर्ने ।

ठ) तोकिएको फ्रिक्वेन्सी र प्रसारण क्षमताबाहेक अन्य फ्रिक्वेन्सी र प्रसारण क्षमतामा प्रयोग गर्न नमिल्ने गरी उपकरणमा आवश्यक व्यवस्था गर्ने ।

ड) प्रसारण सुरु गर्नुअघि Technical Parameter, जस्तै Frequency, Transmeter output tyf Channel को सम्बन्धमा रेडियो ऐन, २०१४ र रेडियो सञ्चार (लाइसेन्स) नियमावली २०४९ बमोजिम इजाजत लिनुपर्ने ।

ढ) सूचना तथा सञ्चार मन्त्रालयबाट खटाएको व्यक्तिले कुनै बखत पनि प्रसारण केन्द्र र उपकरण जडान गरेको स्थान निरीक्षण गर्न सक्ने ।

ण) मन्त्रालयले समय समयमा दिएका निर्देशन र शर्तहरूको पालना गर्नुपर्ने ।

## रेडियो सगरमाथाको संस्थागत संरचना यस्तो छ

नेवापस कार्यसमिति



कार्य सञ्चालन समिति



स्टेसन म्यानेजर

प्राविधिक विभाग
*(प्राविधिक निर्देशक)*

इन्जिनियर

वरिष्ठ प्राविधिक

प्राविधिक

सहायक प्राविधिक

प्रशासन/लेखा विभाग
*(प्रशासन/लेखा निर्देशक)*

प्रशासन/लेखा अधिकृत

प्रशासन/लेखा सहायक

रिसेप्सनिष्ट

कार्यालय सहायक

चालक

मानवीय संसाधन विभाग

मानवीय संसाधन
अधिकृत/ तालिमकर्ता

मानवीय संसाधन सहायक

कार्यक्रम/समाचार विभाग
*(कार्यक्रम/समाचार निर्देशक)*

प्रमुख कार्यक्रम निर्माता/
समाचार सम्पादक/संयोजक

वरिष्ठ निर्माता/संवाददाता

कार्यक्रम निर्माता/संवाददाता

सह-निर्माता/संवाददाता

कनिष्ठ निर्माता/संवाददाता

उद्घोषक

लाइब्रेरियन

बजार व्यवस्थापन विभाग
*(बजार व्यवस्थापन निर्देशक)*

बजार अधिकृत

बजार कार्यकारी

# रेडियो सगरमाथा एफएम १०२ थोप्लो ४ मेगाहर्ज

## *कार्यक्रम प्रसारण तालिका*

| *बिहान* | *आइतबार* | *सोमबार* | *मंगलबार* | *बुधबार* | *विहीबार* | *शुक्रबार* | *शनिबार* |
|---|---|---|---|---|---|---|---|
| ५:००-५:३० | प्रसारण शुरु/ संगीत प्रभाती | | | | | | |
| ५:३०-५:४५ | भिक्षु कौडण्यको प्रवचन | स्वामी आनन्द अरुण | प्राकृतिक उपचार | भजन | | | |
| ५:४५-६:१५ | BBC: The World Today | | | | | | |
| ६:१५-७:०० | हाम्रो खाल्डो/पत्रपत्रिकाको सँगालो/बधाई/अन्तर्वार्ता/जानकारी | | | | | | |
| ७:२०-७:३० | रेडियो कुराकानी डा.डीपी भण्डारी | रेडियो कुराकानी विष्णुप्रताप शाह | कुरोकन्थो भैरव रिसाल | कुरोकन्थो भैरव रिसाल | रेडियो कुराकानी लक्ष्मण अर्याल | रेडियो कुराकानी बालकृष्ण माबुहाङ | चिटिक्क (७:१५-७:४०) |
| ७:३०-७:४५ | एक्कैछिन् | | | | | | |
| ७:५०–८:२० | वातावरण डबली | भाषा-साहित्य र संचार डबली | सुशासन डबली | शिक्षा-संस्कृति डबली सामुदायिक वन | विजनेस यात्रा (९।३।०६०) | स्वास्थ्य डबली | शिक्षाको अभियान (५९।७।१६) |
| ८:२०-८:४५ | क्यानभास | मिथिला यात्रा | तामाङ काई | आवाज | खेलपत्रिका रंगशाला | समानताका स्वरहरू | शिक्षाको नालीबेली ०६०।९।२४ |
| ९:१५-१०:०० | मिर्मिरे भाका | | | | | | विज्ञान प्रविधि (९:००-९:१५) |
| १०:००-११:०० | नयाँ पुस्ता | | | | | | |

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| ११:-११:४५ | मुनासः | | | | | | |
| १२-१३:००<br>१३–१४:००<br>१४-१४:४५ | गीतैगीत | | | | | | बसिबियाँलो<br>चलचित्र नगरी<br>नवरंग |
| १५:-१६:०० | लोकभाका | | | | | | |
| १६-१६:४५ | गीत विविध | | | | | | |
| १७-१७:४५ | भन्ज्याङ चौतारी | | | | | | कहीं नभएको जात्रा |
| १८-१८:४५ | लुकामारी | | | | | | हाम्रो शनिबार |
| १९:२०-२०.० | सरमाथाका साथी भन्नुहुन्छ / गीत | | | | | | |
| १९:३०-२०.० | सगरमाथा अनलाइन | उहिले बाजेको पालामा | भूकम्पीय सुरक्षा | चिटिक्क | सञ्जीवनी | रेडियो सहभागिता दिगो विकास | आचार-बिचार |
| २०-२०:४५ | आजका कुरा | | | | | | |
| २०:४५-२१:१५ | बीबीसी नेपाली सेवा | | | | | | |
| २१:१५-२२:३०<br>२२:३०-२२:४५ | संगीत सरोवर<br>आँखीझ्याल | | | | | | मरो कथा |
| २२:४५–२३:०० | बीबीसी नेपाली सेवा | | | | | | |

समाचार बुलेटिन हालचाः ६:४५, ७:४५, ८:४५, ११:४५, १४:४५, १६:४५, १७:४५, १८:४५, २१:४५, रेडियो नेपालको समचारः ७:००-७:२०, १९:००-१९:२०

# १. ऐतिहासिक पृष्ठभूमि

निश्चित क्षेत्रफलभित्र जनताका लागि सेवा, सुविधा पुऱ्याउने दायित्वका साथ नेपालमा महानगरपालिका, उपमहानगरपालिका र नगरपालिका स्थापना भएका छन् । यही सिलसिलामा राजधानी सहरलाई अन्तर्राष्ट्रिय स्तरका सेवा सुविधाहरू उपलब्ध गराउने उद्देश्यले काठमाडौंलाई २०५२ साल मंसिरमा महानगरपालिका घोषणा गरिएको हो । महानगरपालिका, नगरपालिका र गाउँ विकास समीतिले जनताका लागि पुऱ्याउनुपर्ने सेवा, सुविधाहरूका बारेमा स्थानीय स्वायत्त शासन ऐन, २०५५ र नियमावली २०५६ ले विस्तृत व्याख्या गरेको छ । यही ऐन र नियमावलीको अधिनमा रही आफ्ना स्रोत र साधनहरूको प्रयोगद्वारा महानगरवासीलाई सेवा सुविधा प्रदान गर्दै आएको छ काठमाडौं महानगरपालिकाले ।

काठमाडौं महानगरपालिका देशको राजधानीमात्र नभएर ऐतिहासिक र प्राचीन साँस्कृतिक नगर पनि हो । देशकै सबैभन्दा उच्च वृद्धिदर भएको सुविधासम्पन्न र सबैभन्दा ठूलो सहर हो, काठमाडौं । यहाँको एक तिहाइ जनसंख्या रैथाने नेवारहरूको हो । त्यसैगरी राजधानी सहर काठमाडौं देशका पचहत्तरै जिल्लाबाट बसाइँ सराईं र काम विशेषले आउने विभिन्न जातजातिको सम्मिश्रण स्थल पनि हो । यस्तो स्थलको विकास निर्माण, सरसफाइ र प्रशासनलाई छिटो-छरितो र जनउत्तरदायी बनाउनका लागि काठमाडौं महानगरपालिकामा विभिन्न १५ वटा विभागहरूको स्थापना गरिएको छ ।

२०५४ सालको स्थानीय निकायको चुनावमा केशव स्थापित काठमाडौं महानगरपालिकाको मेयर पदमा निर्वाचित हुनुभयो । नयाँ मेयर आएपछि सहरको स्वरुप कस्तो हुनुपर्छ, नागरिकले पाउने सुविधा सेवाको परिमाण र गुणस्तर कस्तो हुनुपर्छ, सेवा पाउन नागरिकले पुऱ्याउनुपर्ने प्रक्रिया र सहरी विकासका प्राथमिकता के हुन् भन्ने अध्ययन हुन थाल्यो । त्यतिबेला महानगरपालिकाले नगरवासीलाई प्रदान गर्ने सेवा सुविधा परिमाणात्मक एवं गुणात्मक दुवै हिसाबले पर्याप्त थिएन । महानगर भएपछि पाउने सेवा सुविधाका लागि नागरिक नगरपालिका कर र शुल्क तिर्न पनि तयार थिएनन् । सहरी व्यवस्थापनमा जनतालाई सहयोगी बनाएर दिगो, सहभागिमूलक एवं उत्तरदायी विकासका लागि नागरिकहरू आफैंले निर्वाचित गरी पठाएका जनप्रतिनिधि र प्रशासकहरूले के र कसरी काम गर्दैछन् भन्ने थाहा दिन महानगरपालिकामा सूचना तथा सञ्चार विभाग थप्ने निर्णय भयो । यही निर्णयपछि काठमाडौंवासी र काठमाडौं महानगरपालिकाबीच सूचना तथा सहभागिताको ओहोर-दोहोर बढाउन एउटा सेतु बनाइयो मेट्रो एफएम ।

ढल सुधार, फोहोर व्यवस्थापनदेखि लिएर महानगरका दैनिक हरेक समस्या समाधान गर्नुपर्ने चुनौती महानगरका सामु थियो । जनता र उनीहरूले नै चुनेर पठाएका स्थानीय निकायका पदाधिकारीहरूबीच सम्पर्क नियमित राख्नु पनि त छँदै थियो, जसले नगरका हरेक पदाधिकारी र कर्मचारीहरूमा सुशासन, पारदर्शीता र जिम्मेवारीबोध गराउन सहयोग गर्न सक्थ्यो ।

रेडियोलाई जनमुखी बनाउन मेयर केशव स्थापितका थुप्रै योजनाहरू थिए । “हामीले रेडियोबाट आज कति राजस्व उठ्यो, ढल सुधारमा कति खर्च भयो, सडक पेटी निर्माण कहाँ भइरहेको छ र मठमन्दिरको संरक्षणमा के प्रयास भइरहेका छन् भन्ने बताउन सक्छौं । त्यसपछि जनताले पनि उनीहरूले तिरेको कर कहाँ गइरहेको छ भन्ने थाहा पाउँछन् ।”

खानेपानी, आवास, यातायात, सरसफाइ, फोहोर संकलन, विद्युत् वितरण, वातावरण संरक्षणजस्ता सहरी विकासका हरेक पक्षमा महानगरवासीहरूको सहभागिता जुटाउन सकिएन भने विकासका प्रयास असफल हुन्छन् भन्ने यसअघिका अनुभवले छर्लङ थियो । स्थानीय निकायलाई पारदर्शी बनाउने, महानगरवासीप्रतिको उत्तरदायित्व पूरा गर्ने र सहरका हरेक गतिविधिमा उनीहरूको सहभागिता बढाउने उद्देश्य राखेर नै मेट्रो एफएमको आवश्यकता बोध गरिएको थियो । मेट्रो स्टेसन स्थानीय निकायलाई सशक्त र प्रभावकारी बनाउने सञ्चारको एउटा राम्रो अवधारणा थियो । तर यसको आवश्यकतालाई न त नगरवासीले बुझेका थिए न त नगर प्रतिनिधिका रुपमा चुनिएरका वडाअध्यक्ष र नगरपरिषद्का सदस्यहरूको नै चाहना थियो । यो त केबल एक जना मेयरको निर्णयमा खुलेको स्टेसन हो ।

"महानगरले रेडियो सञ्चालन गर्ने भन्ने निर्णय समर्थन गर्ने एक जना पनि नगरपरिषद् सदस्य थिएनन् । मेरो आफ्नै पक्षका सदस्यहरू पनि रेडियोको मामलामा विपक्षमा थिए । भर्खर चुनिएर आएका प्रतिनिधिहरू यस्तो गलगाँड बोक्नु हुँदैन भनिरहेका थिए । उनीहरूको तर्क थियो महानगरपालिकाका सबै कुरा सर्वसाधारणमा पुग्यो भने त गोप्यता नै के बाँकी रह्यो त ? म नै एकदम कठोर भएर जसरी पनि स्टेसन स्थापना गर्नुपर्छ नभए बोर्ड बैठक नै सञ्चालन गर्दिन भनेपछि मात्रै सहमतिमा पुगिएको हो ।" मेयर केशव स्थापित स्थापना कालका कुरा मेट्रोको हरेक वार्षिकोत्सवका बेला सम्झनु हुन्छ ।

मेट्रो एफएमका लागि महानगरपालिकाले २०५४ सालमा सञ्चार मन्त्रालयमा प्रस्ताव पेश गरेको थियो । मन्त्रालयले मेट्रो एफएमलाई २०५४ सालको फागुन २५ गते नै प्रसारण अनुमति दिएको हो । "म त प्राविधिक मान्छे परिन । हामीलाई मन्त्रालयले एफएम १०६.७ फ्रिक्वेन्सी दियो । एफएमको फ्रिक्वेन्सी ८७ बाट सुरु हुने भन्ने चाहिँ थाहा थियो । हामीलाई सबैभन्दा माथिको फ्रिक्वेन्सी दियो भनेर म त दंग परें ।अनुमतिपत्र हात पर्‍यो भन्दै महानगरपालिका फर्केपछि सबैले गाली गर्न थालेपछि पो थाहा भयो हामीलाई सबभन्दा पछाडिको फ्रिक्वेन्सी दिइएछ भनेर । रेडियोको डायलभित्र यो फ्रिक्वेन्सी त विरलै घुमाइँदो रहेछ ।" मेयर केशव स्थापित मेट्रो एफएमका स्थापना ताकाका कुरा यसरी सम्झनुहुन्छ । मन्त्रालयले मेट्रो एफएम प्रसारणका लागि अनुमति दिएपछि स्टेसन स्थापनाका लागि काठमाडौं महानगरका विभिन्न ठाउँको अध्ययन सुरु भयो । एन्टेना र ट्रान्समिटर राख्नका लागि प्राविधिक रुपले उपयुक्त र नगरवासीलाई पायक पर्ने ठाउँको खोजी हुन थाल्यो । सय वाटको ट्रान्समिटरबाट काठमाडौंको सेरोफेरो र काठमाडौं महानगरपालिकाका पैंतीसै वडामा रेडियोको तरंग राम्रोसँग पुर्‍याउन अग्लो ठाउँ चाहिन्थ्यो । उपयुक्त स्थानको खोजी हुँदै जाँदा सुरुमा काठमाडौंको ह्युमत टोल र टेकु मेट्रोका लागि सम्भावित ठाउँमा परेका थिए । तर अन्त्यमा काठमाडौंको पुरानो र मध्य सहर असन बजारमा स्टेसनको ट्रान्समिटर राख्ने निर्णय गरियो । असन चोकको सबैभन्दा अग्लो घर मेट्रो एफएमका लागि उपयुक्त ठहर्‍याएपछि करारमा भाडामा लिइएको थियो । २०५५ सालको आधाआधीबाट मेट्रो एफएमको परीक्षण प्रसारण सुरु भयो । प्राविधिक हिसाबले सबै उपयुक्त छ भन्ने इन्जिनियरहरूको सल्लाहमा असनको घर रोजिएको थियो । तर परीक्षण प्रसारणका बेला पो थाहा भयो काठमाडौं महानगरपालिकाभित्रका धेरै ठाउँमा मेट्रो एफएम सुनिँदैन भन्ने । ललितपुर, भक्तपुर, ठिमी र कीर्तिपुरका धेरै ठाउँमा त मेट्रो राम्रोसँग सुनिने कुरै आएन । यो प्राविधिक समस्या महानगरपालिकाका लागि अन्तिम गाँसमा ढुंगा परेझैं भयो ।

परीक्षण प्रसारणको ९ महिनाको अवधिमा मेट्रोको प्रसारण क्षमता बढेन बरु बुझ्दै जाँदा काठमाडौं महानगरपालिकाकै धेरै ठाउँमा मेट्रो सुन्न नसकिएका गुनासाहरू आउन थाले । मन्त्रालयबाट अनुमति लिएर प्रसारण क्षमता थप्ने र स्टेसनलाई अग्लो ठाउँमा सार्ने विकल्पहरू त थिए । तर लाखौं रुपैयाँ खर्च गरेर जोडिएको अत्याधुनिक सामान जडित स्टुडियो र स्टेसनलाई तत्काल सार्न सक्ने अवस्था थिएन ।

अन्ततः २०५६ साल असोज १ गतेदेखि काठमाडौंको असनबाटै मेट्रो एफएमले १०६.७ मा आफ्नो औपचारिक प्रसारण आरम्भ गऱ्यो । प्रारम्भमा मेट्रो एफएमले बिहान-बेलुका गरी दैनिक ७ घन्टा कार्यक्रम प्रसारण गर्ने गरेको थियो । तर धेरै ठाउँबाट मेट्रोको प्रसारण राम्रो भएन भन्ने गुनासाहरू आउन थालेपछि २०५८ सालमा स्टेसनलाई काठमाडौंकै कालिकास्थानमा सार्ने निर्णय गरिएको थियो । विगत ३ वर्षदेखि कालिकास्थानबाट यो स्टेसनले दैनिक १२ घन्टा हुँदै साढे १६ घन्टा प्रसारण गर्दै आइरहेको छ ।

नयाँ आर्थिक वर्ष २०६१ साल साउनदेखि मेट्रो एफएमको मुहारै परिवर्तन हुँदैछ । मेट्रोले नयाँ फ्रिक्वेन्सी एफएम ९४.६ मा प्रसारण गर्नका लागि सञ्चार मन्त्रालयबाट अनुमति पाइसकेको छ । ट्रान्समिटरको प्रसारण क्षमता १ सय वाटबाट थपेर ५०० सय वाट पुऱ्याइँदै छ । मेट्रो एफएम अहिले भइरहेका कार्यक्रमहरूलाई नगरवासीका लागि उपयोगी बनाउँदै यसलाई वास्तवमै सामुदायिक रेडियोको रुप दिने कोसिस गर्दैछ ।

## २. अभिप्रेरणा, लक्ष्य र उद्देश्य

### *२.१ अभिप्रेरणा*

२०५५ सालसम्ममा काठमाडौं उपत्यकामा आधा दर्जनजति रेडियो स्टेसन र भू-उपग्रहमार्फत आउने दर्जनौं टेलिभिजन च्यानलले सूचनाको आवश्यकता पूरा गरिरहेका थिए । यी विद्युतीय सञ्चारमाध्यमबाहेक एक दर्जनभन्दा बढी राष्ट्रिय दैनिकहरू, साप्ताहिक पत्रपत्रिका, इमेल, इन्टरनेट आदिबाट राजधानीमा सूचनाको बाढी नै आएको थियो । सामुदायिक रेडियोको आवश्यकता पनि दक्षिण एसियामै पहिलो पहिलोपटक खुलेको सार्वजनिक प्रसारण संस्था रेडियो सगरमाथाले २०५४ साल जेठमा पूरा गरिसकेको थियो । रेडियो सगरमाथाले काठमाडौंमात्रै नभएर सम्पूर्ण उपत्यकाको आवाज समेटिरहेको थियो । उपत्यकाभित्र हुने हरेक सांस्कृतिक चाडपर्व र जात्राहरू, उपत्यकाका जल्दाबल्दा विषयवस्तुहरू रेडियो सगरमाथाले विभिन्न कार्यक्रममार्फत समेट्ने गरेको थियो । तर रेडियो सगरमाथालाई काठमाडौं महानगरपालिका र यसभित्रका बासिन्दाप्रति मात्रै उत्तरदायी हुनुपर्ने बाध्यता थिएन । तर रेडियो सगरमाथाले उठाउने हरेक सार्वजनिक सवालका मुद्दाहरू, यसले उपत्यकावासीमा ल्याएको परिवर्तन नै मेट्रो खोल्नका लागि अभिप्रेरणा थियो ।

“राजधानी सहरमा बसोबास गर्ने हरेक नगरवासीको आवाज हामीसम्म ल्याउने र हाम्रा नीति-निर्णयहरू नगरवासीहरूसम्म पुऱ्याउन सहयोगी हुन्छ भनेर नै हामीले मेट्रो रेडियो अवधारणालाई अगाडि ल्याएका हौं ।” मेयर केशव स्थापित स्टेसनको स्थापनाको प्रसङ्ग सम्झनुहुन्छ । स्टेसन खोल्ने नीतिगत निर्णय गर्दा मेट्रो के उद्देश्यका लागि स्थापना गर्न लागिएको हो भन्ने कुरा महानगरपालिका केही पदाधिकारीहरूलाई मात्रै थाहा थियो । महानगरपालिका जस्तो स्थानीय प्रशासनको प्राथमिकतामा पर्ने काम भनेको विकास निर्माण हो, सञ्चारमाध्यम होइन भन्ने कुराहरू त्यतिखेर उठेका थिए ।

ग्राहकले देख्ने गरी बनाइएको खुला भान्सा भएको रेस्टुरेन्टसँग मेयर केशव स्थापित महानगरको रेडियोलाई दाँज्ने गर्नुहुन्छ । "शासनका आठ सूत्रमध्ये सबैभन्दा महत्त्वपूर्ण कुरा भनेको पारदर्शीता रहेछ । कुनै पनि संस्था पारदर्शी भयो भने सबै कुरा व्यवस्थित हुन्छ भन्ने थाहा भएपछि पारदर्शी बनाउने माध्यम के हो भन्ने खोजी गर्दा रेडियो नै ठीक हुन्छ जस्तो लाग्यो । महानगरपालिकामा के भइरहेको छ र कसरी भइरहेको छ भन्ने कुरा रेडियोबाटै नगरवासीसमक्ष पुऱ्याउने हाम्रो अवधारणा हो ।" वास्तवमा सञ्चारका विभिन्न माध्यममध्ये रेडियोलाई काठमाडौं महानगरपालिकाले आफ्नो मुखपत्रका रुपमा रोजेको हो ।

महानगरपालिकाको कार्यकारी प्रमुख भइसक्नुभएका सूर्य सिलवालका विचारमा रेडियोका माध्यमबाट नागरिकले एकतिर नगरमा भइरहेको क्रियाकलापबारे जानकारी प्राप्त गर्न सक्छन् भने अर्कोतिर उनीहरूका माग, समस्या र सुझावहरू प्रदान गर्ने अवसर प्राप्त गर्छन् । "आफूले चुनेर पठाएका जनप्रतिनिधि र आफ्नो नगरको प्रशासनले उनीहरूका निम्ति के गर्दैछ, किन गर्दैछ र कसरी गर्दैछ भन्ने नागरिकहरू बुझ्न चाहन्छन् । यो उनीहरूको अधिकार पनि हो । यही अधिकार प्राप्तिका लागि पाइन्छ भने मेट्रो एफएम किन नखोल्ने भन्ने कुरा उठेको हो ।" सूर्य सिलवाल मेट्रो खुल्नुका आधारहरू यसरी खोज्नुहुन्छ ।

### २.२ *लक्ष्य*

महानगरपालिकाका विभिन्न १५ वटा विभागमध्ये सूचना तथा सञ्चार विभागअन्तर्गत सञ्चालन भइरहेको मेट्रो एफएमका लागि अहिलेसम्म छुट्टै नीति निर्देशन तयार गरिएको छैन । यस अर्थमा मेट्रो एफएमको मिसन, लक्ष्य र उद्देश्य अभिलेखका रुपमा कहीं कतै सार्वजनिक छैन । तर महानगरपालिकासँग सम्बन्धित विभिन्न व्यक्तिहरू, मेट्रो एफएमका पदाधिकारीसँगको कुराकानी र मेट्रो एफएम स्मारिका २०६० केलाउँदा मेट्रो एफएमले निम्न लक्ष्य लिएर अगाडि बढेको देखिन्छ ।

क) पारदर्शी, सुशासन उन्मुख र जनउत्तरदायीपूर्ण तरिकाले महानगरवासीका लागि सूचना र मनोरञ्जन पुऱ्याउनु ।
ख) प्राचीन सम्पदा, पुरातात्विक महत्त्वका मठमन्दिर र विश्व सम्पदा सूचीमा परेका सम्पदाहरूको संरक्षण र त्यसका लागि सामाजिक चेतना जगाउनु ।
ग) नगरका हरेक विकास निर्माणमा जनसहभागिता जुटाउनु र सामाजिक आर्थिक क्षेत्रमा जनताको पहुँच पुऱ्याउनु ।
घ) उपत्यकाका विभिन्न जातजाति र उनीहरूका भाषा तथा संस्कृतिको संरक्षण गर्नु ।

### २.३ *उद्देश्य*

माथि उल्लेख गरिएका लक्ष्यहरू पूरा गर्न मेट्रो एफएमले लिएका उद्देश्यहरू:

क) महानगरको सरसफाइ तथा फोहोरमैला व्यवस्थापनमा स्थानीय स्तरमा जनचेतना अभिवृद्धि गराउने ।
ख) फोहोरमैलाको उत्पादन घटाउने, सडक अतिक्रमण र अनियमित निर्माण कार्य रोक्ने
ग) महानगरपालिकाले तय गरेका नीति निर्णयहरू र महानगरका जिम्मेवार अधिकारीहरू तथा विभागीय प्रमुखहरूको प्रतिक्रिया प्रसारण गर्ने ।

घ) शिक्षा, वातावरण, संस्कृति र स्थानीय भाषाको संरक्षण गर्ने ।

ङ) बालबालिकाका हकअधिकारका कुरा गर्ने ।

च) महानगरपालिकाको कार्यप्रणाली, सेवा र सुविधाबारे सर्वसाधारणलाई जानकारी दिने ।

छ) महानगरपालिकाका समस्या र आवश्यकताको प्रत्यक्ष सुनुवाइ गर्ने/गराउने ।

ज) नगरवासीहरूलाई प्रदान गर्ने सेवा र सुविधाहरू र कार्य प्रगतिहरूका बारेमा नगरवासीहरूलाई सुसूचित गराउने ।

झ) महानगरको सामाजिक, आर्थिक र साँस्कृतिक गतिविधिहरू, समारोह, चाडपर्व र अन्य परम्पराको प्रचारप्रसार गर्ने ।

ञ) महानगरवासीहरूलाई स्वस्थ मनोरञ्जन प्रदान गर्ने ।

## ३. संस्थागत संरचना, कार्यक्रम र जनशक्ति

### ३.१ संस्थागत संरचना

मेट्रो एफएम स्थानीय निकायको स्वामित्वमा रहेको रेडियो स्टेसन हो । यसको पूर्णस्वामित्व काठमाडौं महानगरपालिकासँग छ । महानगरका विभिन्न १५ वटा विभागमध्ये सूचना तथा सञ्चार विभागअन्तर्गत मेट्रो सञ्चालन भइरहेको छ । यो विभाग रेडियो/टेलिभिजनबाहेक जीआईएस, एमआईएस र अभिलेख गरी ४ शाखामा विभाजित छ । महानगरपालिकाको संस्थागत संरचना तलको चित्रमा हेर्न हो भने मेट्रो एफएम अरु निकायजस्तै एउटा सामान्य प्रशासनिक निकायका रूपमा स्थापना भएको देखिन्छ ।

महानगरपालिकाको समग्र संरचनालाई हेर्ने हो भने महानगर परिषद्, महानगरपालिका बोर्ड, नगरका मेयर, कार्यकारी प्रमुख, विभागीय प्रमुख र त्यसपछि मात्रै महानगरपालिको संरचनामा रेडियो स्टेसनको स्थान गनिन्छ ।

हालसालै मेट्रो एफएमको संरचनामा नयाँ सञ्चालक समीति थपिएको छ । मेयरको सिफारिसमा महानगरपालिका बोर्डका सदस्यको अध्यक्षतामा सञ्चालक समिति गठन गरिएको छ । यो सञ्चालक समीतिमा महानगरपालिकाका कार्यकारी प्रमुख, सूचना तथा सञ्चार विभागका प्रमुख, सामुदायिक रेडियोका एक जना विज्ञ र स्टेसन म्यानेजर सदस्य-सचिव रहने गरी सञ्चालन समीति गठन गरिएको छ । स्टेसन व्यवस्थापनमा स्टेसन म्यानेजर प्रमुख रहने गरी बिहान र बेलुकाका सिफ्ट प्रमुख र विज्ञापन/बजार व्यवस्थापन तथा प्रशासन गरी ३ विभागमा बाँडिएको छ ।

### ३.२ *कार्यक्रम*

मेट्रो एफएम बिहान साढे पाँच बजेदेखि राति १० बजेसम्म लगातार साढे १६ घन्टा प्रसारणमा छ । स्टेसनले प्रसारण गर्ने कार्यक्रमलाई विभाजन गरेर हेर्ने हो भने प्रमुख रुपमा सांगीतिक कार्यक्रम प्रसारण गर्ने गरेको छ । सम्पूर्ण कर्यक्रमको ४० प्रतिशत कार्यक्रम गीतसंगीतमा आधारित छन् । त्यसैगरी २५ प्रतिशत

कार्यक्रम शिक्षामूलक छन् । मेट्रो एफएमबाट ५ वटा १५ मिनेटका समाचार बुलेटिन दैनिक प्रसारण भइरहेका छन् । यसमध्ये दिउँसो पौने ३ बजेको समाचार बुलेटिन नेपाल भाषामा हो भने बिहानको पत्रपत्रिकाका समाचार कम्युनिकेसन कर्नरद्वारा उत्पादित कायाकैरन हो । यसरी स्टेसनले कार्यक्रमको जम्माजम्मी १० प्रतिशत समय समाचार प्रसारणका लागि छुट्याएको छ । बाँकी सांगीतिक कार्यक्रमहरू सूचना र सामान्य ज्ञानमा आधारित छन् । "मेट्रो एफएमका ९५ प्रतिशत कार्यक्रमहरू प्रत्यक्ष हुन् । हामीले प्रसारण पूर्व मेहनत गरेर कार्यक्रम उत्पादन गर्ने सकिरहेका छैनौं ।" हालसालै नियुक्त हुनुभएका स्टेसन म्यानेजर मनरुप नेप्च्यून शाही नेप्च्युन भन्नुहुन्छ ।

मेट्रो एफएमबाट प्रसारण हुने कार्यक्रमहरूका बारेमा संस्कृतिविद् तेजेश्वरबाबु ग्वंग: को विचार छ " मेट्रोले राजनीति, भाषा, साहित्यको परिवेश समेटेको छ, सांस्कृतिक जागरण ल्याएको छ, दार्शनिक विवेचना गर्न सिकाएको छ । यो रेडियो काठमाडौं महानगरपालिकाको स-स्वर मुखरन हो ।"

मेट्रो एफएमले लिएका लक्ष्यहरूलाई हेर्ने हो भने उपत्यकाका विभिन्न जातजाति, उनीहरूको भाषा तथा संस्कृतिको संरक्षण गर्ने भनिएको छ । विगत ५ वर्षदेखि प्रसारणरत मेट्रो एफएमको सबैभन्दा बलियो पक्ष नै भाषा हो । मेट्रो एफएमले नेपाल भाषा, तामाङ, मैथली गरी ३ वटा भाषामा कार्यक्रम प्रसारण गरिरहेको छ । मेट्रो एफएमबाट हाल प्रसारण भइरहेका कार्यक्रममध्ये करिब २५ प्रतिशत कार्यक्रम नेपाल भाषामा प्रसारण हुने गरेका छन् । बिहान, दिउँसो र बेलुका प्राइम टाइममा नेपाल भाषाका कार्यक्रम प्रसारण गर्ने गरिएको छ । बिहान बेलुका ८ बजेदेखि ९ बजेसम्म र दिउँसो २ बजेदेखि ४ बजेसम्म नेपाल मण्डल, सांस्कृतिक मण्डललगायतका नेपाल भाषामा कार्यक्रमहरू प्रसारण हुने गरेको छ । यी कार्यक्रम मेट्रो एफएमका श्रोताहरूले सबैभन्दा धेरै मन पराउने कार्यक्रमभित्र पर्छन् ।

बिहान ८ बजे प्रसारण हुने नेपाल भाषाको कार्यक्रम "नेपाल मण्डल" मा समसामयिक राष्ट्रिय-अन्तर्राष्ट्रिय गतिविधिहरू समेटिने गरिएको छ । कार्यक्रममा १० मिनेट समाचार र बाँकी २० मिनेट समसामयिक विषयमा दुईजना व्यक्तित्वसँग प्रत्यक्ष कुराकानी गर्ने गरिएको छ ।

दिउँसो ३ बजेदेखि पौने एक घन्टा प्रसारण हुने "सांस्कृतिक मण्डल" महानगरको संस्कृति, परम्परा, सम्पदा र कलाको संरक्षणका लागि सञ्चालित कार्यक्रम हो । संस्कृति र सम्पदा, विभिन्न जात्रा-पर्वका बारेमा जानकारी दिने यो कार्यक्रम नयाँ पुस्ताका लागि आफ्नो परम्परा, संस्कृतिका बारेमा थाहा पाउने उपयोगी कार्यक्रम हो ।

स्टेसनले स्थापनाकाल देखि नै तामाङ भाषामा दैनिक आधा घन्टाको कार्यक्रम प्रसारण गर्दै आएको छ । काठमाडौं उपत्यका वरिपरि बसोबास गर्ने तामाङ बस्ती र विभिन्न अवसरको खोजीमा महानगर छिरेका तामाङ समुदायका व्यक्तिहरूलाई लक्षित गरेर यो कार्यक्रम तयार गर्ने गरिएको छ । तामाङ भाषाका गीत, संस्कृति र चाडपर्व र आफ्नो समुदायका गतिविधिहरूलाई सूचना र ज्ञानका हिसाबले सशक्त बनाउने काम यो कार्यक्रमले गर्दै आएको कार्यक्रम सञ्चालक इन्दिरा तामाङले बताउनुभयो ।

पारदर्शी र जनउत्तरदायीपूर्ण तरिकाले महानगरवासीलाई सूचना र मनोरञ्जन प्रदान गर्नु र नगरका हरेक विकास निर्माणमा जनसहभागिता जुटाउनु यो स्टेसनको अर्को मूल लक्ष्य हो । यो लक्ष्य प्राप्तिका लागि मेट्रोले विभिन्न कार्यक्रम प्रसारण गर्दै आएको छ । बिहान प्रसारण हुने "मेट्रो हटलाइन" मा महानगरवासीले प्रश्न राख्न

पाउँछन् । यी प्रश्नहरूको जवाफ महानगरपालिकाका पदाधिकारीहरूबाट खोजिन्छ । १५ मिनेटको यो कार्यक्रममा विकास निर्माण, फोहोर व्यवस्थापन, ढलसुधार, सरसफाइ, ऐतिहासिक धरोहरहरूको संरक्षण जस्ता विषयको जवाफ नगरवासीले यो कार्यक्रममार्फत पाउँछन् । आधा घन्टाको अर्को साप्ताहिक कार्यक्रम "मेट्रो डबली" मामहानगरका हरेक विभाग, यो विभागका कार्यक्षेत्र र नगरवासीले लिन सक्ने सुविधाका बारेमा जानकारी दिने गरिएको छ । यो कार्यक्रममा महानगरपालिकाका पैंतीसै वडा कार्यालयका वडा अध्यक्षहरूले आफ्नो वडामा भइरहेका विकास निर्माणका काम, प्रगति र वडावासीका प्रश्नहरूको जवाफ दिने गरेका छन् ।

मेयरसँग सर्वसाधारणले प्रत्यक्ष कुरा राख्न पाउन्, उनीहरूका गुनासा प्रत्यक्ष सुन्न पाइयोस् भनेर काठमाडौं महानगरपालिकाका मेयर केशव स्थापित आफैंले "मेयरस् आवर" भनेर एक घन्टाको साप्ताहिक कार्यक्रम सुरु गर्नुभएको थियो । कार्यक्रमका बारेमा केशव स्थापितको अनुभव यस्तो छ "मैले आठ दशवटा कार्यक्रम पनि चलाएँ । धेरैले यस्तो भएन उस्तो भएन भनेर गाली पनि गरे । नगरवासीलाई चित्त नबुझेको कुरा मलाई प्रत्यक्ष भन्न त पाउनुपर्‍यो नि । सुरुमा मैले आफ्ना कुरा भन्ने र अरुका गुनासा सुन्ने गरेको थिएँ । तर मैले सोचेजति यो कार्यक्रम प्रभावकारी भएन र चलेन पनि । मेयरलाई प्रश्न सोध्ने मान्छेहरू सीमित हुँदा रहेछन् । पछि गएर यो कार्यक्रम त रमितेहरूको शोख पूरा गर्ने ठाउँ भयो । मेरो अड्कलमा मलाई हरेक कार्यक्रममा फोन गरैं भनेर टोलमा दङ्ग परेर बस्ने सय जना जतिको जमात थियो होला ।"

स्टेसनले बेलाबेलामा साँस्कृतिक चाडपर्व, जात्रा र महानगरपालिकाका विशेष अवसरहरूमा प्रत्यक्ष प्रसारण गर्ने गरेको छ। समग्रमा भन्नु पर्दा मेट्रोले महानगरपालिकाका निर्णय, आयोजना, सूचना, समस्या, विकास निर्माणजस्ता विषयगत सन्दर्भमा समय-सीमा निर्धारण गरेर कार्यक्रम प्रसारण गरिआएको छ ।

### ३.३ *जनशक्ति*

महानगरपालिकाले रेडियो सञ्चालन गर्ने निधो गरेर मन्त्रालयमा आवेदन दिएको एक वर्षमा स्टेसनको अनुमति पाएको हो । यो अवधिमा महानगरपालिकाले रेडियो सञ्चालन गर्न अनुमति पाउँछ भन्ने कुरा पत्याउने धेरैलाई आधार नै थिएन । त्यसैले स्टेसन सञ्चालनका लागि अनुमतिपत्र हात नपरुन्जेलसम्म जनशक्तिको चासो नै थिएन । जब महानगरपालिकाले मेट्रो एफएमको अनुमति पायो, त्यतिबेला दक्ष जनशक्ति नै थिएन । सुरुदेखि नै स्टेसन म्यानेजरको पद महानगरपालिकाका अधिकृतलाई जिम्मा लगाउने गरियो। कार्यक्रम सञ्चालनका लागि महानगरपालिकाका केही कर्मचारीलाई जिम्मा दिइयो। मेट्रोको लगाम रेडियो सुनेका तर प्रविधि नबुझेका महानगरपालिकाका कर्मचारीहरूको हातमा थियो ।

मेट्रो एफएम सुरु भएको पाँचौं वर्षमा अहिले यो स्टेसनमा ४० जना पूर्णकालीन महानगरपालिकाका कर्मचारी छन् भने करारमा साप्ताहिक कार्यक्रम सञ्चालन गर्ने ६० जना छन् । जनशक्तिका हिसाबले दैनिक साढे १६ घन्टा सबै प्रत्यक्ष कार्यक्रम सञ्चालन गर्नका लागि करिब १०० जना लागिपरेका छन्। कर्मचारी चयन सीधैं महानगरपालिकाले गर्ने गरेको छ । साप्ताहिक कार्यक्रम सञ्चालन गर्नेहरूको हकमा भने करारमा लिने गरिएको छ । अन्य सामुदायिक रेडियो जस्तो मेट्रोमा एक जना पनि स्वयंसेवक कार्यरत छैनन् ।

मेट्रो एफएमको लक्ष्य उद्देश्यअनुसार स्टेसन सञ्चालन गर्न र गुणस्तरीय कार्यक्रम निर्माण गर्नका लागि

अहिलेसम्म २ वटा वृहत तालिमहरू सञ्चालन गरिएका छन् । नियमित कार्यक्रम प्रसारणमा गएको एक वर्षपछि कार्यक्रम निर्माणका बारेमा आधारभूत तालिम सञ्चालन गरिएको थियो । त्यसैगरी स्टेसन असनबजारबाट कालिकास्थान सरेपछि रेडियो टेलिभिजनका लागि जनशक्ति उत्पादन गर्ने संस्था आभासले जनशक्ति विकास गर्ने, स्टेसन ब्रान्डिङ र कार्यक्रम उत्पादनमा सहयोग पुऱ्याएको थियो । अहिले कर्मचारीहरूका लागि व्यक्तिगत रुपमै पनि तालिमका अवसर खोजी गर्न थालिएको छ ।

## ४. श्रोता

काठमाडौंको परिचय महानगरमा मात्रै सीमित छैन । यो देशको राजधानी हो । यो, देशको एउटै मात्र महानगर पनि हो । शिक्षा, रोजगार, व्यापार व्यवसाय, हरेक किसिमका अवसरको खोजी गर्दै विभिन्न ठाउँबाट व्यक्तिहरू जम्मा हुने थलो नै यही हो । मेट्रो एफएम काठमाडौं महानगरपालिकाद्वारा सञ्चालित रेडियो स्टेसन हो । त्यसैले मेट्रो एफएमको प्राथमिक श्रोता भनेका नगरभित्रका ३५ वडामा बसोबास गर्ने व्यक्तिहरू नै हुन् । तर काठमाडौंमा स्थायी बसोबास गर्ने जनसंख्याबाहेक दैनिक हजारौं मान्छे काठमाडौं प्रवेश गर्छन् र हजारौंकै संख्यामा उपत्यकाबाट बाहिरिन्छन् । काठमाडौं उपत्यकाको अनुमानित एकतिहाई जनसख्या स्थायी प्रकृतिको होइन ।

भौगोलिक हिसाबले हेर्ने हो भने मेट्रो एफएम काठमाडौं उपत्यकाका सबै सहरहरूमा सुन्न सकिन्छ । अधिकांश कार्यक्रम काठमाडौं महानगरपालिकासँग सम्बन्धित हुने भए पनि यो स्टेसन ललितपुर, भक्तपुर, कीर्तिपुर र ठिमी सहरमा समेत सुनिने गरेको छ । मेट्रो एफएमको तरंग काठमाडौं उपत्यकाबाहेक नुवाकोट, काभ्रे, बनेपा, धुलिखेलदेखि बारा, पर्सासम्म पुग्ने गरेको छ ।

काठमाडौं परम्परागत रुपमा नेवार बस्ती हो । काठमाडौं महानगरपालिका विभिन्न जातजाति, विभिन्न भाषाभाषीका समुदाय बसोबास गर्ने राजधानी सहर भए पनि यहाँ नेवारहरूको बाहुल्यता छ । त्यसैले मेट्रो एफएमले आफ्ना कार्यक्रमको लगभग २५ प्रतिशत कार्यक्रम नेपाल भाषामा प्रसारण गर्दै आएको छ । अहिलेसम्मको अवस्थालाई केलाउँदा र श्रोताका माझ लोकप्रियताका हिसाबले हेर्ने हो भने मेट्रो एफएमका श्रोता काठमाडौं उपत्यकाका अरु सहरदेखि लिएर बनेपा, धुलिखेलसम्मका नेवारहरूले धेरै सुन्ने गरेका छन् । दैनिक ४ घन्टामात्रै भए पनि सबै नेपाल भाषाका कार्यक्रम बिहान बेलुका स्टेसनको प्राथमिक समयमा प्रसारण हुने गरेको छ । यसले पनि यो स्टेसनका अधिकांश श्रोताहरू एउटै समुदायका भएको देखिन्छ ।

महानगरका लागि विभिन्न योजना बनाएर बसिरहनुहुने मेयर केशव स्थापितको योजना फरक छ । उहाँ मेट्रो एफएमलाई राजधानीको रेडियो बनाउने योजना गर्दै हुनुहुन्छ । "क्षमताका हिसाबले यो उपत्यकाभित्रका श्रोताका लागि मात्रै हो । तर भोलि यो काठमाडौंमा मात्रै सीमित हुनुहुँदैन । पूर्वदेखि पश्चिमका मान्छे आउँदा महानगरको बडापत्र एकपटक सुन्ने मौका उनीहरूले पाउनुपर्छ, जग्गा किन्दा के गर्ने अथवा नापी गर्दा, कर तिर्न जाँदा के गर्ने, राजधानीमा मुद्दा लड्न आउने मान्छेले के गर्ने ? कहाँ बस्ने, सामान कहाँ राख्ने ? भन्ने हरेक प्रश्नको जवाफ यसले दिनुपर्छ । त्यसैले यो हटलाइनसरह हरेक प्रश्नका उत्तर, अप्ठेराहरू सल्टाउन सक्ने रेडियो बन्नुपर्छ । राजधानीलाई हामीले त बुझेको छैन भने बाहिरबाट आउनेले कसरी बुझ्ने । त्यस कारण अरु स्टेसनका लागि निश्चित लक्षित समूह हुन सक्छ तर मेरा लागि यस्तो हुन सक्दैन । समाजका सबै पक्षलाई

समेट्ने मेरो लक्ष्य हो," महानगर प्रमुख भन्नुहुन्छ ।

कार्यक्रमलाई दिएको प्राथमिकतालाई आधार बनाउने हो भने मेट्रोको अर्को लक्षित श्रोता भनेको काठमाडौं उपत्यका वरिपरिको तामाङ बस्ती पनि हो ।

## ५. सामुदायिक सहभागिता

संरचनागत हिसाबले मेट्रो एफएम अरु स्टेसनभन्दा फरक छ । महानगरपालिकाका विभिन्न वडाबाट निर्वाचित भएर आउने जनप्रतिनिधिहरूको परिषद् नै यो रेडियोको सर्वोच्च निकाय हो । परिषद्को मातहतमा महानगरपालिका बोर्ड छ । महानगरका विभिन्न विभागहरूमध्ये यो सूचना तथा सञ्चार विभागको एउटा इकाइ हो । त्यसैले यसलाई महानगरपालिकाभित्रको एउटा प्रशासनिक इकाइभन्दा माथि उठेर हेर्न सकिन्न ।

अहिले पनि रेडियो स्टेसनको कर्मचारी बन्नका लागि महानगरको कर्मचारी बन्नुपर्ने अवस्था छ । स्टेसन म्यानेजरसमेत महानगरपालिकाकै कर्मचारीबाट नियुक्त गरेर पठाउने चलन केही समयअघिसम्म थियो । यसरी हेर्दा प्रशासनिक संयन्त्रका रुपमा परिचित स्टेसनको व्यवस्थापकीय क्षेत्रमा समुदायको सहभागिता शून्य छ । हालसालै गठन भएको मेट्रो एफएमको पहिलो सञ्चालक समितिमा महानगरपालिका बाहिरबाट सामुदायिक रेडियोका क्षेत्रमा दखल राख्नुहुने रघु मैनालीलाई राखिएको छ । तर यसले निरन्तरता पाउँदै जाने र सकेसम्म धेरै समुदायका व्यक्तिहरूलाई सहभागी गराउँदै लाने सम्भावना देखिँदैन ।

मेट्रो एफएमबाट प्रसारण हुने कार्यक्रमलाई आधार मान्ने हो भने यसलाई सहभागितामूलक स्टेसनका रुपमा हेर्न सकिन्छ । स्टेसन म्यानेजर मनरुप नेप्च्यून शाहीका विचारमा मेट्रो एफएममा हुने समुदायको सहभागितालाई फरक ढङ्गले हेर्नुपर्छ । "हामीले अझैसम्म जुनसुकै समुदायबाट मान्छे आएर हामी कार्यक्रम चलाउँछौं भनेका बेला कार्यक्रम चलाउन नदिएको मौका नै छैन ।"

मेयर केशव स्थापित पनि यस्तै तर्क राख्नुहुन्छ, "जनजातिहरूले हाम्रो आवाज आएन भन्छन् । मैले उनीहरूलाई यो केशव स्थापित भन्ने मान्छे छ भन्ने थाहा छैन ? भनेर जवाफ दिने गरेको छु । तपाईहरू भाषाका बारेमा सरकारसँग जोरी खोज्दै हिड्नु भन्दा हाम्रो रेडियोमा आएर कार्यक्रम चलाउनुस् त्यो फाइदाजनक हुन्छ भन्दिने गरेको छु । तर सबैले गाली मात्रै गर्न जानेका छन् भनेका बेला आउँदैनन् ।"

समुदायका हरेक व्यक्तिहरूको पहुँचमा रेडियो पुगोस् भनेर मेयरले रेडियोका हरेक मञ्चमा कार्यक्रम सञ्चालन गर्न आउनका लागि आग्रह गर्ने गर्नुभएको छ । "मैले अपाङ्गहरूलाई पैसा लाग्दैन कार्यक्रम चलाउन आउनुस् भनेको छु, एचआईभी एड्स भएका र समलिङ्गीहरूलाई पनि कार्यक्रम चलाउन आउनुस् भनेको छु । समाजले स्वीकार्न सकेन भने तपाईहरू रेडियोबाट आफ्ना कुरा राख्न सक्नुहुन्छ भनेको छु । हरेक धर्म, भाषा, जातजाति, उत्पीडित, दमित सबैले यो स्टेसनमा कार्यक्रम चलाउन पाउनुपर्छ ।"

काठमाडौं महानगरपालिका र स्टेसनलाई सहभागीमूलक बनाउनका लागि केही समयअघिदेखि महानगर बोर्डको बैठक खुल्ला गरिएको छ । त्यसैगरी महानगरपालिकाले सञ्चालन गर्ने "खुल्ला इजलास" मा हुने हरेक कुराकानीलाई रेडियोबाट प्रसारण गर्ने गरिएको छ । मेट्रो एफएमले नेपाली, नेपाल भाषा,

तामाङ र मैथिली भाषामा कार्यक्रम प्रसारण गर्दै आएको छ । यी विभिन्न भाषाका कार्यक्रमले पनि विभिन्न समुदायका व्यक्तिलाई कार्यक्रममा सहभागी हुन सघाएको छ । नेपाल जनजाति मुक्ति आन्दोलनका अध्यक्ष सीताराम तामाङका अनुसार उपत्यकाका आदिवासीहरूको जीवनशैली र संस्कृतिका बारेमा कार्यक्रम प्रसारण गरिदिएर यो रेडियोले खाँचो पूरा गरिदिएको छ । "यो रेडियोले बेलाबखत हाम्रो जातीय र भाषिक सवालमा पनि आवाज उठाउने गरेको छ । यो रेडियोको राम्रो पक्ष भनेकै यही हो ।" रेडियोलाई उहाँ भाषासँगै जोडेर प्रशंसा गर्नुहुन्छ । यीबाहेक स्टेसनले विभिन्न विषयवस्तुमा समुदायका मान्छे स्टुडियोमै ल्याएर छलफल गर्ने गरेको छ ।

## ६. स्टेसनको निरन्तरता

काठमाडौं महानगरपालिका स्थानीय निकायहरूमा सबैभन्दा धेरै बजेट बोकेर बसेको संस्था हो । महानगरपालिकाका आफ्नै आम्दानीका विभिन्न स्रोतहरू छन् । हरेक वर्ष महानगरपालिकाले मेट्रो एफएम सञ्चालनका लागि करिब ८० लाख बजेट छुट्याउने गरेको छ । सुरुका केही वर्ष यो स्टेसनले विज्ञापन नै प्रसारण गरेको थिएन ।

महानगरपालिकाको बजेटबाटै यो सञ्चालन भइरहेको थियो । अहिले मेट्रो एफएमले वार्षिक ८-१० लाख रुपैयाँ आम्दानी गर्न थालेको छ । सीमित लक्षित श्रोता र स्टुडियो उत्पादनबिनाको कार्यक्रम प्रसारण गर्दा पनि मेट्रो एफएमको वार्षिक बजेट लगभग १ करोड रुपैयाँ छ । राजनीतिक प्रतिबद्धताको निरन्तरता र महानगरपालिकाको चाहना रहुन्जेलसम्म आर्थिक अभावका कारण स्टेसन बन्द हुँदैन ।

महानगरपालिका बोर्डका सदस्यहरूले बेला-बेलामा मेट्रो एफएममा भइरहेको लगानीको प्रतिफल खोज्ने गरेका छन् । सुरुमा गरेका योजना र लिएको लक्ष्यअनुसार स्टेसन सञ्चालन हुन सकेको छैन । स्टेसन म्यानेजर नेप्च्यून शाही स्टेसनको फ्रिक्वेन्सी र ट्रान्समिटरको क्षमता परिवर्तन भएपछि स्टेसन आफैंले वार्षिक २०-२५ लाख आम्दानी गर्न सक्छ भन्ने आँटमा हुनुहुन्छ ।"

महानगरपालिका भएकाले विभिन्न संघ-संस्थाहरूबाट सहयोग पाउन गाह्रो छैन । अन्तर्राष्ट्रिय प्रसारण संस्थाहरूबाट तालिमका अवसर जुटाउन र सामानको सहयोग लिन अरु स्टेसनलाई भन्दा सजिलो छ ।" स्टेसनको निरन्तरताप्रति नेप्च्यून शाही ढुक्क हुनुहुन्छ ।

मेट्रोको निरन्तरताका लागि तेजेश्वर बाबु ग्वग: को सल्लाह छ "मेट्रोको अस्मिता स्वायत्त स्वशासन यन्त्रलाई सार्थक टेवा पुऱ्याउनुमा केन्द्रित हुनु अनिवार्य छ । मेट्रोको पहिचान अन्य व्यापारिक रेडियोहरूको भन्दा भिन्न हुनुपर्छ । यसका गतिविधि नगरपालिकामुखी हुनु जरुरी छ । यसपछि मेट्रोलाई कुनै खतरा छैन ।"

यो स्टेसनले आफ्ना लागि आफैंले निर्णय लिन सक्दैन । स्टेसनलाई दिगो बनाउन र उद्देश्यअनुसार सञ्चालन गर्न जागिरे मनस्थितिलाई उखेलेर फाल्नुपर्छ । सामुदायिक भावना र जागिरे मनस्थितिले रेडियो सञ्चालन त भइरहन्छ तर यसले महानगरवासीको मन जित्न सक्दैन । यसलाई सामुदायिक रेडियोको संरचनामा सञ्चालन गर्ने हो भने स्टेसनलाई स्वायत्त बनाउनु जरुरी छ । सूचना तथा सञ्चार विभागका प्रमुख तथा पूर्व स्टेसन म्यानेजर शिशिर मानन्धर मेट्रो दिगो हुने आधारलाई पुरानो अनुभवसँग जोडेर हेर्ने गर्नुहुन्छ ।

"हामी ६ वर्षमा प्रवेश गर्न लाग्यौं । पुरानै फ्रिक्वेन्सी, सय वाटको ट्रान्समिटरले स्टेसन राम्रै तरिकाले सञ्चालन गरिरहेका छौं । बिहान २ घण्टा बेलुका २ घण्टा चलाएको रेडियो स्टेसन अहिले बिहानदेखि बेलुकासम्म साढे सोह्र घण्टा चलाइरहेका छौं । यी आधारलाई हेर्ने हो भने त स्टेसन दिगो नहुने कुरै छैन ।"

काठमाडौंमा प्रसारण भइरहेका र हुन बाँकी गरी एक दर्जनभन्दा धेरै स्टेसनसँगको प्रतिस्पर्धामा मेट्रो एफएमको पहिचान के हो भन्ने प्रष्ट हुन सकेको छैन । मेट्रो एफएम महानगरपालिकाको स्टेसनभन्दा बढी नेवार भाषा प्रवर्द्धन गर्ने स्टेसनका रुपमा परिचित छ । यस्तो पहिचानले फ्रिक्वेन्सी परिवर्तन गरेर र प्रसारण क्षमता बढाएरमात्रै स्टेसन दिगो हुन्छ भन्ने मान्न सकिँदैन ।

## ७. चुनौती र व्यवधान

काठमाडौं महानगरपालिकामा अहिले करिब २ हजार कर्मचारी विभिन्न विभागमा कार्यरत छन् । मेयर, उपमेयर, वडाअध्यक्षहरू, कार्यकारी अधिकृत, विभागीय प्रमुखहरू र अन्य कर्मचारी, उनीहरूका परिवारले मेट्रो एफएम नियमित सुन्छन् ? मेट्रो एफएमले महानगरपालिकाभित्रकै कर्मचारी र पदाधिकारीहरूलाई सम्बोधन गर्न नसकेसम्म काठमाडौं जिल्लाकै दश लाख श्रोताको मन जित्न कसरी सक्छ ? महानगरपालिकासँग सम्बन्धित कुनै पनि विषयमा रेडियो सगरमाथा, कान्तिपुर एफएम र मेट्रो एफएमले मेयरसँग अन्तर्वार्ताका लागि अनुरोध गरे भने मेयरले सबैभन्दा पहिले प्राथमिकता दिने स्टेसनमा मेट्रो पर्छ कि पर्दैन ?

अहिले प्रसारणमा रहेका १० वटा एफएम स्टेसन र प्रसारणोन्मुख स्टेसनहरूका माझमा मेट्रो एफएमको परिचय के हो ?

माथि उठाइएका तीनवटा प्रश्नले मेट्रो एफएमका वर्तमान र आगामी चुनौतीहरूलाई छर्लङ्ग पार्छन् । आर्थिक हिसाबले कुनै पनि चिन्ता गर्न नपर्ने यो स्टेसनका लागि प्राविधिक, कार्यक्रम र संस्थागत चुनौतीहरू असंख्य छन् ।

### *७.१ प्राविधिक चुनौती र व्यवधान*

- असनमा भाडाको भवनपछि कालिकास्थान हुँदै अहिले फेरि मेट्रो एफएम बागदरबारमा सर्ने मनस्थिति बनाएर बसेको छ । रेडियो स्टेसन सार्नु भनेको प्राविधिक रुपले धेरै खर्चिलो र झन्झटिलो काम हो । झन् त्यसमाथि बारम्बार स्टेसन सार्दै जाने, फ्रिक्वेन्सी परिवर्तन गर्ने हो भने स्टेसनको पहिचान श्रोताहरूमाझ दिगो रहन सक्दैन ।
- स्टुडियोमा आवश्यकभन्दा बढी रकम खर्च गरिएको छ । तर जति रकम खर्च गरिएको छ, त्योअनुसारको स्टुडियोको गुणस्तर छैन । स्टुडियोमा बाहिरको आवाज लिक हुन्छ र रेडियोबाट आउने आवाज टाडाबाट बोलेजस्तो सुनिन्छ ।
- रेडियोसँग भएको उत्पादन स्टुडियो छैन । रेडियोबाट प्रसारण हुने अधिकांश कार्यक्रम प्रत्यक्ष प्रसारण गर्ने गरिएको छ । प्राविधिक रुपले हेर्ने हो भने मेट्रोसँग गुणस्तरीय यन्त्रहरूको जोरजाम गरिए पनि यी सामानहरूको न त राम्रोसँग रेखदेख भएको छ न त प्रयोग नै ।
- कार्यक्रम उत्पादक र रिपोर्टरहरूका लागि फिल्ड रेकर्डर उपलब्ध गराइएको छैन । अधिकांश कार्यक्रम स्टुडियोमा प्रत्यक्ष कुराकानीमा आधारित छन् ।

- कार्यक्रम उत्पादनलाई चुस्त, छिटो र छरितो बनाउनका लागि डिजिटल प्रविधि प्रयोग हुन सकेको छैन । स्टेसनमा कार्यक्रम उत्पादनका लागि कम्प्युटरको व्यवस्था गरिएको छैन ।

### ७.२ *कार्यक्रममा चुनौती*

- मेट्रो एफएममा कार्यरत अधिकांश कर्मचारीहरूलाई स्टेसनको मिसन, लक्ष्य र उद्देश्य के हो भन्ने थाहा छैन । उनीहरूले यही स्टेसनमा किन काम गरिरहेका छन्, स्टेसनको पहिचान के हो भन्ने थाहा छैन । यस्तो कर्मचारी मनस्थितिले कार्यक्रममार्फत स्टेसनको लक्ष्य र उद्देश्य पूरा हुन सक्दैनन् ।
- कार्यक्रम प्रस्तोताहरू रेडियो कार्यक्रम उत्पादन र प्रस्तुतिको अनुभवका आधारमा भन्दा पनि चिनाजानी र आफ्नो मान्छेको पहुँचमा आउने गरेका छन् । उनीहरूसँग न त रेडियोको अनुभव छ न त तालिम ।
- स्टेसनबाट प्रसारण हुने कार्यक्रमको मूल्याङ्कन गर्ने संरचना तयार गरिएको छैन ।
- सामुदायिक सहभागिताका नाममा तामाङ भाषा, नेपाल भाषा, मैथिली, दलित आदि समुदायलाई कार्यक्रम सञ्चालन गर्न दिइएको छ तर स्टेसनको स्पष्ट नीति छैन । कसैसँग रकम असुलिएको छ र कसैलाई मासिक तलब खुवाएर राखिएको छ ।
- मेट्रो एफएमको अर्को पहिचान नेवार एफएमका रुपमा छ । बिहान, दिउँसो र बेलुका रेडियोको महत्त्वपूर्ण समयमा नेपाल भाषामा कार्यक्रम प्रसारण गर्ने गरिएको छ । यसले स्टेसनको पहिचान महानगरपालिका एफएम भन्नेभन्दा पनि भाषाका हिसाबले चिनिने गरेको छ ।
- मेट्रो एफएम सञ्चालनको उद्देश्य र कार्यक्रम उत्पादनमा तालमेल छैन ।
- स्टेसनबाट प्रसारण हुने समाचार बुलेटिनहरूमा महानगर गतिविधिहरूभन्दा अरु पत्रपत्रिकाले समेटेका राष्ट्रिय अन्तर्राष्ट्रिय गतिविधिहरूले प्राथमिकता पाउने गरेका छन् ।
- मेट्रोका अधिकांश सांगीतिक कार्यक्रमहरू महानगरवासीका आवश्यकताभन्दा समय भर्नका लागि प्रसारण गर्ने गरिएका छन् ।
- स्टेसनबाट प्रसारण हुने महानगरपालिकासम्बन्धी कार्यक्रम र प्रसारण हुने समयको तालमेल मिलाइएको छैन । यस्ता कार्यक्रमहरू स्टेसनले प्राय: कार्यालय समयमा प्रसारण गर्ने गरेको छ । त्यसैगरी महानगरपालिकाका विभिन्न विभागहरू र मेट्रो एफएमबीच समन्वयको अभाव छ । यसले गर्दा विभागका गतिविधिहरू ओझेलमा पर्ने गरेका छन् ।

### ७.३ *संस्थागत चुनौती*

मेट्रो एफएमको सबैभन्दा ठूलो चुनौती भनेकै संस्थागत स्वायत्तता हो । स्टेसन स्वायत्त भएर समुदायका विभिन्न व्यक्तिहरूलाई नसमेटेसम्म यो स्टेसनले सामुदायिक पहिचान पाउन सक्दैन । प्रशासन र राजनीतिक हस्तक्षेपका कारण स्टेसनले रेडियोसम्बन्धी सीप र दक्षता नभएका व्यक्तिहरूलाई भर्ना गर्न बाध्य हुने गरेको छ । नातावाद-कृपावादबाट आउने कर्मचारीको भर्ना रोक्न पनि यो स्टेसनलाई स्वायत्त बनाउनुपर्छ भन्ने तर्क स्टेसन म्यानेजर मनरुप नेप्च्यून शाहीको छ ।

समुदायलाई समेत सहभागी बनाएर कर्मचारीहरूको हातबाट यसलाई स्वतन्त्र व्यक्तिहरूको हातमा पुऱ्याउने प्रयासहरू भइरहेका छन् । स्टेसनलाई महानगरपालिकाको एउटा इकाइबाट छुटाएर समुदायमा आधारित स्टेसन बनाउनका लागि धेरै चुनौतीहरू स्टेसनसामु छन् ।

महानगरपालिकाले हालसालै पहिलोपटक मेट्रोकै लागि भनेर स्टेसन म्यानेजर नियुक्त गरेको छ । तर प्रशासनयन्त्रका आधारमा चलेको रेडियो सीमित अधिकार लिएर सञ्चालन गर्न कठिन हुन्छ । स्टेसन म्यानेजर मनरुप नेप्च्युन शाहीका भनाइमा “प्रशासनले रेडियो चलाउनु हुँदैन । महानगरपालिकाका शाखा अधिकृत, नासु र खरिदारबाट रेडियो स्टेसन सञ्चालन हुन सक्दैन । स्टेसन म्यानेजरहरू रेडियोका लागि नियुक्त भए पनि अधिकांश समय महानगरपालिकामा बिताउँछन् । रेडियो, स्टेसन म्यानेजरहरूका लागि प्राथमिकतामा पर्दैनथ्यो । मेट्रो एफएमलाई महानगरपालिकाका अरु शाखा सञ्चालन गरेजस्तै गर्ने गरिएको छ ।”

रेडियोको आफ्नै अधिकार सम्पन्न सञ्चालक समिति नभएका कारण महानगर बोर्डमा रेडियोका लागि गराउनुपर्ने नीतिगत निर्णयहरू अन्य विभागको एजेन्डाका अगाडि ओझेलमा पर्ने गरेको छ । सयौं एजेन्डाको बीचमा मेट्रो एफएमको प्रस्ताव बीचमै हराउने अवस्था छ । हालै रेडियोका लागि सञ्चालक समिति गठन गरिए पनि स्थानीय निकायमा रही आएको अन्योलका कारण काम सुरु हुन सकेको छैन ।

सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक तथा मेट्रो एफएम सञ्चालक समितिका सदस्य रघु मैनालीका अनुसार रेडियो प्रविधिका बारेमा जान्नुपर्ने सीप र जुक्तिहरू कार्यक्रम उत्पादकलाई प्रभावकारी ढंगले अभ्यास गराउन जरुरी छ । “नगरवासीसम्म क्षणक्षणमा फालिने सन्देशलाई व्यवस्थित पार्न कार्यक्रम उत्पादकहरूको ज्ञान र विवेक खार्नुपर्छ । निजामती नियमावलीअनुसार चल्ने कर्मचारीतन्त्रको ठाउँमा तत्काल महत्त्वपूर्ण निर्णय लिन सक्ने चुस्त व्यवस्थापन र दूरदर्शी नेतृत्व निर्माण गर्नु आवश्यक छ । त्यसैगरी आवश्यकताअनुसार जनशक्ति नियुक्त गर्ने अधिकार स्टेसन म्यानेजरमा हुनुपर्छ ।”

मेट्रो एफएमले महानगरको मुखपत्र अथवा सांस्कृतिक पहिचानभन्दा भाषागत पहिचान पाएको छ । तर भाषा र संस्कृति भनेका फरक-फरक कुरा हुन् । प्रसारणको महत्त्वपूर्ण समयमा नेपाल भाषाको कार्यक्रम प्रसारण हुनुले पनि यो रेडियोलाई सामुदायिकभन्दा एउटा निश्चित वर्गको रेडियोका रूपमा परिचित गराउँदैछ । उसका लागि अबको चुनौती भनेको यो पहिचान परिवर्तन गरेर हरेक महानगरवासीको रेडियो स्टेसन बन्नु हो ।

# नागरिक अभिव्यक्तिको माध्यम मेट्रो एफएम

*केशव स्थापित मेयर*

*काठमाडौं महानगरपालिका*

म २०५४ सालमा काठमाडौं महानगरपालिकाको मेयर पदमा निर्वाचित भएर आउने बित्तिकै मेट्रो रेडियोको अवधारणा सुरु भएको हो । हुन त त्यतिबेला काठमाडौंमा रेडियो सगरमाथालगायत ५-६ वटा रेडियो स्टेसन प्रसारणमा थिए । तर सञ्चार मन्त्रालयलाई मेट्रो रेडियोको अवधारणाबारे थाहै रहेनछ । त्यसैले अरु स्टेसनहरूले प्रसारणका लागि अनुमति पाइरहे तर हामीलाई दिइएन । मेट्रो एफएमको जन्म ठूलो मारमुङ्ग्रीपछि भएको हो, कहिले कोसँग, कहिले कोसँग । उनीहरूको तर्क थियो- "राजनीतिक निकायलाई रेडियो स्टेसनको अनुमति दिन मिल्दैन ।" मैले एउटा औपचारिक कार्यक्रममा मन्त्रीकै अगाडि यो तर्कको विरोध गरेँ । "रेडियो स्टेसनको अनुमति दिँदा लेनदेनको कुरो आइरहेको छ । कति दिनुपर्ने हो, कसलाई दिनुपर्ने हो, मन्त्रीजीलाई यहीं दिए पनि हुन्छ कि ?" भनेपछि बल्ल स्टेसनको अनुमतिका लागि प्रक्रिया अगाडि बढेको हो ।

सुशासनका लागि निर्णय प्रक्रिया खुला र पारदर्शी हुनुपर्छ । महानगरपालिकाका कामकारबाही पारदर्शी बनाउन र जनतासँग प्रत्यक्ष सम्पर्क गर्नका लागि मेट्रो एफएमको अवधारणा ल्याइएको थियो । फेरि मान्छेलाई "आवाज" दिइसकेपछि ऊ सन्तुलनमा आउँछ भन्ने सर्वमान्य विश्वास हो ।

मेट्रो एफएम खोल्नुको अर्को प्रमुख उद्देश्य आवाजविहीनहरूको आवाज बाहिर ल्याउने पनि हो । राजधानीमा बसोबास गर्ने र राजधानी आउने-जानेहरूको आवाज सुनिदिने वैकल्पिक ठाउँ मेट्रोलाई बनाउन खोजेको हो ।

सञ्चारका अरु थुप्रै विकल्प भएको ठाउँमा मेट्रोको व्यवस्थापन र कार्यक्रमहरू प्रभावकारी हुन नसकेका कारण यसले सोचेको जस्तो महानगरवासीको आवाज हुन सकेको छैन । तैपनि परिवर्तन भनेको विस्तारै आउने कुरा हो र यो रेडियोले पनि विस्तारै परिवर्तन ल्याउँदैछ । मैले देखेका परिवर्तनहरूमा :

- ☐ रेडियोमार्फत महानगरपालिकाका निर्णयहरू पारदर्शी बनाउन थालेपछि धेरै प्रशासकीय कुराहरू ठीक ठाउँमा आएका छन् ।
- ☐ पहिला-पहिला जस्तो "आज सडकमा फोहोर नफालिदिनुस्" भनेको दिन जम्मा हुने जस्तो फोहोर आजकल जम्मा हुँदैन । आजभोलि रेडियोबाट "घर-घरबाट फोहोर ननिकाल्नुहोला" भनिदिएपछि फोहोर निक्लँदैन ।
- ☐ आजभोलि सडक पेटीको छेउमा पिसाब फेर्नेहरूको संख्या घटेको छ । र, महानगरपालिकाले निर्माण गरेका सार्वजनिक शौचालयको प्रयोग बढेको छ ।
- ☐ हामीले रेडियोमार्फत निश्चित समयमा बाहेक रिङरोडभित्र ट्रक लान पाइँदैन भनेर धेरै प्रसार-प्रचार गऱ्यौं । अहिले ट्रक ड्राइभरहरूको मनस्थितिमा परिवर्तन आएको छ ।
- ☐ मेयरका निर्णय र योजनाहरू हरेक नगरवासीहरूका कानमा पुगेका छन् । धेरैले मलाई केशव स्थापित भनेर व्यक्तिगत रुपमा नचिने पनि मेरा बारेमा कुरा गर्ने धेरै छन् ।

मलाई थाहा छ मैले माथि उठाएका परिवर्तनहरू मेट्रो एफएमले गर्दा मात्रै आएको होइन । तर पनि काठमाडौं सहरको आवाज बोक्ने त मेट्रोले नै हो । सूचनाको एउटा धारमध्ये महानगरवासीहरूको आवाज बोक्छ यसले । त्यसैले सहरमा के हुँदैछ भन्ने सुन्न मेट्रो एफएम सुन्नुपर्छ ।

यो रेडियोको सबैभन्दा राम्रो पक्ष भनेको नै यसको शक्ति हो । महानगरको बोर्डमा आएर हरेक कुराहरूको विरोध गर्ने सदस्यहरूलाई रेडियोमा अन्तर्वार्ता लिएपछि सबै कुरो ठेगानमा आइहाल्छ । तपाईको वडामा के कस्ता विकास भएका छन् भनेर सोधेपछि उनीहरूबाट विकासको फेहरिस्त आउन थाल्छ ।

यो माध्यमलाई मैले साँच्चिकै सदुपयोग गरेको छु । बैठकमा विरोध गरेर, नोट अफ डिसेन्ट लेखेरमात्रै महानगरपालिका अगाडि बढ्दैन । यो स्टेसनमा जति लगानी भएको छ त्यसको प्रतिफल हेऱ्यो भने लगानीको एक प्रतिशत पनि होइन । हामीले गरेका नीतिगत निर्णयहरू तुरुन्तका तुरुन्तै बाहिर ल्याउँदा हुने फाइदाहरू धेरै छन् । यसको भित्री लाभको पक्ष मैलेमात्रै बुझेको छु ।

# मेट्रो एफ.एमको विहानीको सेवामा प्रसारण हुने कार्यक्रमको रूप रेखा

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ५:२५–५:३० प्रसारण आरम्भ | | | | | | | |
| **५:३०–५:४५ वौद्ध प्रवचन** | | | | | | | |
| कार्यक्रम संचालक | संघसक्षित/सुसिल /पन्ना | संघसक्षित/सुसिल /पन्ना | संघसक्षित/सुसिल /पन्ना | संघसक्षित/सुसिल /पन्ना | संघसक्षित/सुसिल /पन्ना | संघसक्षित/सुसिल /पन्ना | संघसक्षित/सुसिल /पन्ना |
| **५:४५–६:०० हिन्दु प्रवचन** | | | | | | | |
| कार्यक्रम संचालक | आ.ढुण्डीराज न्यौपाने | आ.ढुण्डीराज न्यौपाने | आ.ढुण्डीराज न्यौपाने | आ.ढुण्डीराज न्यौपाने | आ.ढुण्डीराज न्यौपाने | आ.ढुण्डीराज न्यौपाने | आ.ढुण्डीराज न्यौपाने |
| **६:००–६:३० काया कैरन (समाचार सार)** | | | | | | | |
| ६:३०-६:४५ | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान |
| ६:४५-७:०० | Sports round up | मेट्रो विहानी | मेट्रो विहानी | मेट्रो विहानी | मेट्रो विहानी | मेट्रो विहानी | Sports Personality |
| कार्यक्रम संचालक | सरिता श्रेष्ठ | संतोष दाहाल | संतोष दाहाल | संतोष दाहाल | संतोष दाहाल | संतोष दाहाल | संतोष दाहाल |
| **७:००–७:१५ राष्ट्रिय समाचार** | | | | | | | |
| ७:१५-७:३० | प्राकृतिक चिकित्सा | मन्थन | मन्थन | मन्थन | मन्थन | मन्थन | मन्थन |
| कार्यक्रमसंचालक | ज्ञानेन्द्र विवश | ज्ञानेन्द्र विवश | ज्ञानेन्द्र विवश | ज्ञानेन्द्र विवश | ज्ञानेन्द्र विवश | ज्ञानेन्द्र विवश | ज्ञानेन्द्र विवश |
| ७:३०-७:४५ मेट्रो हट लाइन | | | | | | | |

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| कार्यक्रम संचालक | सिता न्यौपाने विनोद | उत्तम निरौला | उत्तम निरौला | उत्तम निरौला | उत्तम निरौला | उत्तम निरौला | उत्तम निरौला |
| | | | | ७:४५-८:०० The Synopsis | | | |
| कार्यक्रम संचालक | शिशिर/अभिलाषा | शिशिर/अभिलाषा | शिशिर/अभिलाषा | शिशिर/अभिलाषा | शिशिर/अभिलाषा | शिशिर/अभिलाषा | शिशिर/अभिलाषा |
| | | | | **८:००-८:१५ नेपाल मण्डल** | | | |
| कार्यक्रम संचालक | | | | | | | रिता/श्री कृष्ण |
| ८:१५-८:३० | | | | | | | ढुकू दबू |
| कार्यक्रम संचालक | रिता<br>श्री कृष्ण महर्जन | रिता<br>श्री कृष्ण महर्जन | रिता<br>श्री कृष्ण महर्जन | रिता<br>श्री कृष्ण महर्जन | रिता<br>श्री कृष्ण महर्जन | रिता<br>श्री कृष्ण महर्जन | रिता<br>श्री कृष्ण महर्जन |
| ८:३०-९:०० | न्यने कने ज्याइ्व: | भी: नेवा | सिइके उसाय | दबु | चेसना | छक न्हइपुके | सा.पत्रिका ज्याभ्व |
| कार्यक्रम संचालक | प्रतिसरा सायमि | शरद कसा: | जुजुमान महर्जन | उद्येन सायमि | सागर/रजनी<br>/रिता | उद्येन सायमि | रजनी/सागर |
| ९:००-९:३० | शब्द साग्रीला | महिला जागरण | बाल सरोकार | हाम्रो सम्पदा | मेट्रो डबली | गीत संगीत | यातायात गतिबिधि |
| कार्यक्रम संचालक | ज्ञानेद्र विवश | गेहिनी जोशी | अस्मिता नेपाल | सुनिल राजोपाध्याय | नेहा शर्मा | | किरण ढकाल |
| ९:३०-१०:०० | शहरी शुसासन | गीत संगीत | IT@metro.com | वातावरण | Out of Valley | अनुभूति | |
| कार्यक्रम संचालक | | उत्तम निरौला | विकिल स्थापित | शोभा मानन्धर | दिपक पाठक | राजु लामा | किरण हजुर खड्का |
| १०:००-११:०० | अनुरोध संगीत | को होला ? | सम्झना बिर्सना | Metro Quiz 5 | स्वर संगीत | अथिति संगम | Ritesh on Air |

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| कार्यक्रम संचालक | अमर/नरोत्तम मानन्धर | नरोत्तम मानन्धर | वैजिल केसी | अमर महर्जन | प्रकाश उप्रेती | अमर/ नरोत्तम मानन्धर | रितेश पोखरेल |
| ११:००-१२:०० | Action Cut | स्वर शब्द संगीत | मनको चाहना | Metro Bonanza | Action Cut | Mix Max | Request on line |
| कार्यक्रम संचालक | नरसिह/किरण ढकाल | अजय श्रेष्ठ | श्रमिका/धर्म भण्डारी | सजिना/इरोज स्थापित | नरसिह/किरण ढकाल | उत्तम थापा | अमर/नरोत्तम |
| १२:००-१२:४५ | PoP Show | Top Ten | Unplued Show | Metro Friends club | मिथिलाञ्चल | शब्द भण्डार | खुसीका पल |
| कार्यक्रम संचालक | सुनिल राजोपाध्याय | अमर महर्जन | नरोत्तम/अमर महर्जन | ललिता गीरी | सरोज खेलाडी | टंक न्यौपाने | वैजिल के.सी. |
| १२:४५-१:०० | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर |
| कार्यक्रम संचालक | नेहा/शिवराम | नेहा/शिवराम ढकाल | नेहा/शिवराम ढकाल | नेहा/शिवराम ढकाल | नेहा/शिवराम ढकाल | नेहा/शिवराम ढकाल | नेहा/शिवराम ढकाल |
| १:००-२:०० | Icy-Spicy | Youth blues | Music @ 1 | Metro classics | Silver Chair | Friday Collection | Explosive |
| कार्यक्रम संचालक | सुनन्दा डंगोल | संजय राजभण्डारी | इरोज/सजिना | संजय राजभण्डारी | सुनन्दा ढंगोल | सिल्भिया राजोपाध्याय | ऋचा/ममता |

E-mail: metrofm@wlink.com.np

फोन नं. ४-४४१२४६/४७/८१ फ्याक्स नं. ४-४४१२४८

# मेट्रो एफ.एमको बेलुकीको सेवामा प्रसारण हुने कार्यक्रमको रूप रेखा

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| २:००-२:४५ | सहलह दबू | वञ्जला | न्हयइपुगु संगीत | उसाँय्/समा: | न्हयस:लिस: कासा | म्ये कासा | थगु धापु |
| कार्यक्रम संचालक | धर्म/बिक्रम शाक्य | रिता महर्जन | धर्म मुनिकार | सिल्भिया राजोपाध्याय | जुजुमान महर्जन | पवित्र कसा: | |
| २:४५-३:०० | मेट्रो हालखवर (नेपाल भाषामा) | मेट्रो हालखवर (नेपाल भाषामा) | मेट्रो हालखवर (नेपाल भाषामा) | मेट्रो हालखवर (नेपाल भाषामा) | मेट्रो हालखवर (नेपाल भाषामा) | मेट्रो हालखवर (नेपाल भाषामा) | मेट्रो हालखवर (नेपाल भाषामा) |
| कार्यक्रम संचालक | धर्म/श्रीकृष्ण महर्जन | धर्म/श्रीकृष्ण महर्जन | धर्म/श्रीकृष्ण महर्जन | धर्म/श्रीकृष्ण महर्जन | धर्म/श्रीकृष्ण महर्जन | धर्म/श्रीकृष्ण महर्जन | धर्म/श्रीकृष्ण महर्जन |
| ३:००-३:४५ | सास्कृतिक मण्डल | सास्कृतिक मण्डल | सास्कृतिक मण्डल | सास्कृतिक मण्डल | सास्कृतिक मण्डल | सास्कृतिक मण्डल | सास्कृतिक मण्डल |
| कार्यक्रम संचालक | विद्या/रमिता | सुधन/विनिता | रत्न/सुनीता | प्रविन/पूर्ण | विनिता/प्रविन | मञ्जला | रजनी/सागर |
| ३:४५-४:०० | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर |
| कार्यक्रम संचालक | शिवराम ढकाल | शिवराम ढकाल | शिवराम ढकाल | शिवराम ढकाल | शिवराम ढकाल | शिवराम ढकाल | शिवराम ढकाल |
| ४:००-५:०० | लोकलहरी | लोकलहरी | लोकलहरी | लोकलहरी | लोकलहरी | लोकलहरी | लोकलहरी |
| कार्यक्रम संचालक | किरण ढकाल | किरण ढकाल | किरण ढकाल | किरण ढकाल | किरण ढकाल | किरण ढकाल | किरण ढकाल |
| ५:००-५:३० | वाल कार्यक्रम | वाल कार्यक्रम | वाल कार्यक्रम | वाल कार्यक्रम | वाल कार्यक्रम | वाल कार्यक्रम | वाल कार्यक्रम |
| कार्यक्रम संचालक | सरिता श्रेष्ठ | सरिता श्रेष्ठ | सरिता श्रेष्ठ | सरिता श्रेष्ठ | सरिता/विकिल स्थापित | सरिता श्रेष्ठ | सोनिका कसा: |
| ५:३०-६:०० | नाडसाल | नाडसाल | नाडसाल | नाडसाल | नाडसाल | नाडसाल | नाडसाल |

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| कार्यक्रम संचालक | इन्दिरा तामाङ | इन्दिरा तामाङ | इन्दिरा तामाङ | इन्दिरा तामाङ | इन्दिरा तामाङ | इन्दिरा तामाङ | इन्दिरा तामाङ |
| ६:००-६:३० | साहस | गीत संगीत | काष्ठमण्डप | वालसरोकार | बयेली | गीत संगीत | डकम्स ब्वीज |
| कार्यक्रम संचालक | टंक/ओ.प्रकाश | | अजय श्रेष्ठ | युवराज विद्रोही | मेघराज अधिकारी | | किरण ख./दिपक पाठक |
| ६:३०-७:०० | महानगर गतिबिधि | म्युतुक मेरो साथी | महानगर गतिबिधि | स्वस्थ्य र जिवन | काठमाडौं सन्देश | गीत संगीत | प्राज्ञिक गतिबिधि |
| कार्यक्रम संचालक | नेहा/केशु नेपाल | चन्द्रमणी/रोजिना | नेहा/केशु नेपाल | रितेश पोखेरेल | सरिता/युगल कि.गौतम | | विश्व विमोहन श्रेष्ठ |
| ७:००-७:१५ | राष्ट्रिय समाचार | राष्ट्रिय समाचार | राष्ट्रिय समाचार | राष्ट्रिय समाचार | राष्ट्रिय समाचार | राष्ट्रिय समाचार | राष्ट्रिय समाचार |
| ७:१५-७:४५ | अंकुर | मन्थन | मन्थन | सन्दर्भ र आवाज | मन्थन | मन्थन | अंकुर |
| कार्यक्रम संचालक | राजन/दिपक/गोपाल | शिवराम ढकाल | शिवराम ढकाल | सारदा/प्रदिप परियार | शिवराम ढकाल | शिवराम ढकाल | राजन/दिपक/गोपाल |
| ७:४५-८:०० | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर | मेट्रो हालखवर |
| कार्यक्रम संचालक | नेहा शर्मा | नेहा शर्मा | नेहा शर्मा | नेहा शर्मा | नेहा शर्मा | नेहा शर्मा | नेहा शर्मा |
| ८:००-८:३० | नेपाल मण्डल | नेपाल मण्डल | नेपाल मण्डल | नेपाल मण्डल | नेपाल मण्डल | नेपाल मण्डल | नेपाल मण्डल |
| कार्यक्रम संचालक | सानु/विक्रम शाक्य | सानु/विक्रम शाक्य | सानु/विक्रम शाक्य | सानु/विक्रम शाक्य | सानु/विक्रम शाक्य | सानु/विक्रम शाक्य | सानु/विक्रम शाक्य |
| ८:३०-९:०० | विकासानन्दया/न्वचू | भ्मी कलाकार | मचा अधिकार | नेवा: दबू | भ्मीगु सम्पदा | म्येहिसि ख्याल:किसि | छम्ह छगु छक्व: |
| कार्यक्रम संचालक | पवित्र कसा: | ललेन्द्र शाक्य | ललेन्द्र शाक्य | श्रीकृष्ण महर्जन | श्रीकृष्ण महर्जन | राजु/हृदय | पवित्र कसा: |

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ९:००-९:४५ | कोसे ढुङ्गा | सांगीतिक सुस्केरा | मेरो गीत | भवाना | Forever Hits | Moods & Melodies | Old is Gold |
| कार्यक्रम संचालक | अजय श्रेष्ठ | धर्म भण्डारी | विश्व वि.मोहन श्रेष्ठ | किरण खड्का | केशु नेपाल | रितेस पोखरेल | रितेस पोखरेल |
| ९:४५-१०:०० | चतुराङ्गिणी | चतुराङ्गिणी | चतुराङ्गिणी | चतुराङ्गिणी | चतुराङ्गिणी | चतुराङ्गिणी | चतुराङ्गिणी |
| कार्यक्रम संचालक | किशोर सेढाई | किशोर सेढाई | किशोर सेढाई | किशोर सेढाई | किशोर सेढाई | किशोर सेढाई | किशोर सेढाई |

E-mail: metrofm@wlink.com.np
फोन नं. ४-४४१२४६/४७/८१ फ्याक्स नं. ४-४४१२४८

# मेट्रो एफ.एमको विहानीको सेवामा प्रसारण हुने कार्यक्रमको रूप रेखा

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ५:२५ | प्रसारण आरम्भ | प्रसारण आरम्भ | प्रसारण आरम्भ | प्रसारण आरम्भ | प्रसारण आरम्भ | प्रसारण आरम्भ | प्रसारण आरम्भ |
| ५:३० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| ५:४५ | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ६:०० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ६:०० | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ६:१५ | समाचार मुलक खेलकुद | समाचार मुलक खेलकुद | समाचार मुलक खेलकुद | समाचार मुलक खेलकुद | समाचार मुलक खेलकुद | समाचार मुलक खेलकुद | समाचार मुलक खेलकुद |
| ७:०० | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ७:१५ | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ७:३० | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ७:४५ | समाचार मुलक अंग्रेजी | समाचार मुलक अंग्रेजी | समाचार मुलक अंग्रेजी | समाचार मुलक अंग्रेजी | समाचार मुलक अंग्रेजी | समाचार मुलक अंग्रेजी | समाचार मुलक अंग्रेजी |
| ८:०० | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ८:३० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| ९:०० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ९:३० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| १०:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| ११:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |

## मेट्रो एफ.एमको बेलुकीको सेवामा प्रसारण हुने कार्यक्रमको रूप रेखा

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| १२:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | प्रसारण आरम्भ |
| १२:४५ | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| १:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| २:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| २:४५ | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ३:०० | समाचार मुलक/ मनोरञ्जनात्मक | समाचार मुलक/ मनोरञ्जनात्मक | समाचार मुलक/ मनोरञ्जनात्मक | समाचार मुलक/ मनोरञ्जनात्मक | समाचार मुलक/ मनोरञ्जनात्मक | समाचार मुलक/ मनोरञ्जनात्मक | समाचार मुलक/ मनोरञ्जनात्मक |
| ३:४५ | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ४:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| ५:०० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ५:३० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| ६:०० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ६:३० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ६:४५ | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ७:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| ७:१५ | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ७:४५ | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ८:०० | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक | समाचार मुलक |
| ८:१५-८:३० | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक | शिक्षा मुलक |
| ८:३० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |
| ९:०० | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक | मनोरञ्जनात्मक |

## १. ऐतिहासिक पृष्ठभूमि

रेडियो लुम्बिनी, बुद्धको जन्मस्थल लुम्बिनीको निकट मणिग्राममा रहेको छ । बुद्धको जन्मस्थल, विश्व शान्तिको मुहान लुम्बिनीमै रहेर पनि रुपन्देही जिल्ला र समग्र लुम्बिनी अञ्चल गुमनाम अवस्थामा रहेको र लुम्बिनीकै बारेमा पनि स्थानीय नागरिकहरूमा अपनत्वको महसुस हुन सकेको थिएन ।

अर्कोतर्फ सञ्चारको साधन राजधानी केन्द्रित थियो । राजधानीबाट पत्रपत्रिका पुग्न २ दिन लाग्थ्यो भने रेडियो नेपाल रुपन्देहीमा राम्ररी सुनिँदैनथ्यो । छिटो, छरितो सूचना पाउने साधनको अभाव थियो । सूचना र सञ्चारको पहुँच ग्रामीण क्षेत्रमा नपुगेसम्म केन्द्रको एजेन्डामा प्रायोजित कोसेली विकासको नाराले मात्र समुदाय विकसित हुन सक्दैन भन्ने कुरामा रुपन्देहीको एउटा जमात सहमत थियो । अर्जुन ज्ञवाली, ऋषिराम भुसाललगायतका बौद्धिक व्यक्तित्वहरूको सामिप्य पाएको यो जमात रुपन्देहीको राजनीतिक चेतनायुक्त बौद्धिक वर्ग, व्यापारी, उद्योगपति र सञ्चारकर्मीहरूको संगम जस्तो थियो । रेडियो लुम्बिनीका संस्थापक अध्यक्ष तथा स्टेसन म्यानेजर भरत भुसाल त्यतिखेरको क्षण सम्झँदै भन्नुहुन्छ, "सञ्चारको क्षेत्रमा विकल्प दिन सक्ने केही काम गर्न पाए हुन्थ्यो भन्ने हाम्रो सोच थियो । हामीमा उत्साह र जाँगर पनि थियो । तर के गर्ने भन्ने टुंगोमा पुगिसकेका थिएनौं ।"

सामुदायिक क्षेत्रमा सञ्चारको प्रभावकारी र सरल माध्यमद्वारा सूचनाको पहुँच बढाउनुपर्ने आवश्यकता बोध गर्नुपर्ने आधारहरू रुपन्देहीवासीहरूका अगाडि विद्यमान थिए । संसार एक्काइसौं शताव्दीको संघारमा थियो । लुम्बिनी क्षेत्र भने सञ्चार र सूचनाविहीन अवस्थामा गुज्रिरहेको थियो । सामान्य कृषि प्रविधिदेखि नुन, चिनी पानीकै सूचना र सन्देश प्रवाह गर्ने प्रभावकारी माध्यमहरूबाट समुदायहरू वञ्चित थिए । धनाढ्य, सरकारी उच्च ओहदाका केही मुठ्ठीभर व्यक्तिहरूको शौखको विषय बनेको रेडियो काठमाडौं बाहिरका आमनागरिकहरूका लागि भने भरत भुसालका शब्दमा "चन्द्रमाको यात्रा" नै बनेको थियो ।

२०५४ सालमा नेपाल वातावरण पत्रकार समूहले रेडियो सगरमाथा सञ्चालन गरेर दक्षिण एसियामा सामुदायिक रेडियो प्रसारणको नयाँ ढोका खोलिसकेको थियो । जनस्तरबाट वा गैरसरकारी क्षेत्रबाट आफ्नै स्वामित्व व्यवस्थापन निर्णय र सहभागितामा रेडियो सञ्चालन गरेर समूहले देशकै अन्य समुदायका लागि समेत एउटा प्रेरणा र हौसलाको काम गरेको थियो ।

रेडियो सगरमाथा सञ्चालन भएपछि काठमाडौंमा पैसावाल व्यापारीहरू एफएम रेडियो सञ्चालनतिर आकर्षित भएका थिए । नभन्दै काठमाडौंमा केही एफएम स्टेसन खुले पनि । तर यस्ता एफएमका सञ्चालकहरूले काठमाडौंमा मात्रै नाफा कमिन सक्ने देखेर चार भन्ज्याङबाहिर रेडियो लिएर जाने हिम्मत गरेनन् भने काठमाडौं उपत्यकाबाहिरका समुदाय पनि प्रविधिप्रतिको अनभिज्ञताले आफ्नो समुदायमा रेडियो सञ्चालन गर्ने कुरामा विश्वस्त हुन सकिरहेका थिएनन् । राजधानीबाहिर ठाउँ ठाउँमा समुदायले टावर रेडियो सञ्चालन गरेका थिए तर तिनका आफ्नै सीमा र बाध्यता थिए । त्यसैले रेडियोबाहिर पनि पुर्‍याउनुपर्ने र गाउँमा बस्नेहरूका बुताबाट पनि सञ्चालन गर्न सकिन्छ भन्ने कुरा स्थापित गर्नुपर्ने आवश्यकता थियो ।

घनश्याम भुसाल, रुपन्देही क्षेत्र नम्बर ३ बाट प्रतिनिधिसभा सदस्य हुनुहुन्थ्यो । उहाँले गाउँमा केही गरौं भन्ने सोच राख्नुभएको थियो । रुपन्देहीमा सामुदायिक रेडियो स्थापना गर्न रेडियो सगरमाथाका तत्कालीन स्टेसन म्यानेजर मैनाली तत्कालीन सांसद घनश्याम भुसालले सल्लाह गर्नुभयो । रेडियो लुम्बिनीका संस्थापक स्टेसन म्यानेजर भरत भुसालका अनुसार, सांसद भुसाल र मैनालीबीच धेरैपटक कुराकानी भएपछि रुपन्देहीमा एउटा सानो भेला डाकियो ।

रुपन्देहीको पहिलो सानो भेलाले एफएम स्टेसनको आवश्यकता स्वीकार गऱ्यो । त्यसका लागि संगठनात्मक स्वरूप सहकारीको बनाउने निधो भयो । संस्था दर्ता प्रक्रियाका लागि र सञ्चार मन्त्रालयबाट अनुमतिका लागि एउटा समिति गठन गरियो ।

संस्था दर्तादेखि एफएम प्रसारण इजाजतलगायतका सबै काम गर्न भरत भुसालको अध्यक्षतामा सरोज भट्टराई उपाध्यक्ष, र सदस्यहरूमा बाबुराम चौधरी, कृष्ण भुसाल, कृष्ण नेपाल, लेखनाथ पाण्डे, पद्मा प्याकुरेल सदस्य रहेको सञ्चालक समिति गठन भयो । यो समितिले संस्था दर्तादेखि एफएमको लाइसेन्स प्राप्ति समेतका सवै कार्य पूरा गऱ्यो । लुम्बिनी सूचना तथा सञ्चार सहकारी संस्था जन्मियो । लविङमा रघु मैनाली र घनश्याम भुसालको भूमिका रह्यो ।

यस बीचमा रघु मैनाली रेडियो सगरमाथाको स्टेसन म्यानेजरको जिम्मेदारीबाट अलग भएर काठमाडौं बाहिर रेडियोको स्थापनामा मद्दत गर्ने सोचमा हुनुहुन्थ्यो । मैनालीले ढुक्कै झन्डै अढाइ महिना रेडियो लुम्बिनीमा बसेर रेडियोको सम्पूर्ण तयारी गर्नुभयो । परिणामस्वरूप, २०५६ साल माघ २७ गते श्रीपञ्चमीका दिन काठमाडौंबाहिर समुदायको स्वामित्व, व्यवस्थापन र लगानीमा पहिलो रेडियो स्टेसनका रूपमा रेडियो लुम्बिनीले आफ्नो प्रसारण सुरु गऱ्यो । प्रसारणको सुरुका दिनहरूको सम्झना गर्दै रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवाली भन्नुहुन्छ, “रमाइलो हिसाबले रेडियो सुरु गर्ने भइयो । काठमाडौंमा मात्रै बजेको रेडियो अब हाम्रै गाउँघरमा बजाउने भइयो भनेर दंग परियो । त्यतिखेर हामीलाई रेडियोको बारेमा भनिएको मात्रै थियो । स्वयंसेवकबाट मात्रै चल्छ भन्ने सुनेका थियौं, आफैंलाई चाहिँ वास्तविक कुरा केही पनि थाहा थिएन, तर चलाउन थालेपछि पो थाहा भयो, रेडियो चलाउन त गाऱ्हो कुरा रहेछ ।” रेडियो लुम्बिनी काठमाडौं उपत्यका बाहिरको पहिलो सामुदायिक रेडियो स्टेसन हो ।

रेडियो लुम्बिनी प्रसारण गर्दाका समयमा यसमा जिल्लाका विभिन्न जाति, भाषा, धर्म, लिंग र पेशाका ८२ जना सदस्य थिए भने अहिले सदस्यहरूको संख्याले १०० नाघिसकेको छ ।

## २. स्टेसनको अभिप्रेरणा, लक्ष्य र उद्धेश्य

प्रसारण सुरु गर्नुअघि नै रेडियो लुम्बिनीले आफ्ना लक्ष्य र उद्देश्यहरू किटेको थियो । बुँदागत रूपमा हेर्दा ती लक्ष्य र उद्देश्यहरू यस्ता छन्:

### *२.१ लक्ष्य*

- स्थानीय ज्ञान, सीप र दक्षताको पहिचान, परिचालन तथा सम्बर्द्धन गर्नु

- ☐ स्थानीय भाषा, साहित्य, कला, संस्कृति तथा लोक परम्पराहरूको पहिचान तथा सम्बर्द्धन गर्नु
- ☐ राष्ट्रिय एकता, गौरव तथा स्वाभिमान अभिवृद्धि गर्दै न्याय र प्रजातन्त्रको पक्षमा अनुशासित तथा प्रगतिशील संस्कृतिको विकास गर्नु
- ☐ विश्व शान्तिको मुहानका रूपमा परिचित गौतम बुद्धको जन्मस्थल लुम्बिनीको भौतिक, आध्यात्मिक विकास र जागरणका लागि प्रचार-प्रसार गर्नु
- ☐ सहकारी भावना, उद्यमशील संस्कृति, राष्ट्रिय उद्योग तथा स्वदेशी बजारलाई प्रोत्साहित गर्नु,
- ☐ स्थानीय सरकार र जनताका बीच भरपर्दो सम्पर्क माध्यमका रूपमा काम गर्नु,
- ☐ महिला तथा बालबालिकाहरूको हक र अधिकारको संरक्षणका लागि सामूहिक दायित्वको बोध गराउनु,
- ☐ पिछडिएका तथा अल्पसंख्यक जाति र वर्गको आवाजलाई प्राथमिकता दिँदै उनीहरूको विकासका लागि जनमत तयार गर्नु,
- ☐ शिक्षा, स्वास्थ्य, वातावरण, दिगो विकास, मानवअधिकार, सामुदायिक विकासलगायतका सामाजिक क्षेत्रमा व्यापक जागरण अभिवृद्धि गर्नु,
- ☐ आधुनिक कृषि, विज्ञान तथा प्रविधिका उपलब्धिहरूसम्म जनताको सूचनाको पहुँच बढाउनु,

### २.२ *उद्देश्य*

- ☐ सूचना, शिक्षा, मनोरन्जन र सामाजिक चेतनाको अभिवृद्धि गर्ने,
- ☐ सामाजिक एवं आर्थिक परिवर्तनमा सहयोग पुऱ्याउने,
- ☐ महिला, बालक, वृद्ध र उपेक्षित वर्गको आवाज मुखरित गर्ने,
- ☐ ग्रामीण प्रतिभालाई विशेष प्रोत्साहित गर्ने,
- ☐ हरेक नागरिकलाई जिम्मेवारी बोध गराउँदै विकास निर्माणको तहमा सहभागी गराउने,
- ☐ नागरिकहरूमा विकास निर्माणका कार्यमा सहभागी हुन र जिम्मेवारी बोध गर्न प्रेरित गर्ने,
- ☐ शिक्षा, स्वास्थ्य, वातावरण, दिगो विकास, मानवअधिकार, पोषण, सरसफाइलगायत सामुदायिक विकासका क्षेत्रमा जागरण ल्याउने,
- ☐ आधुनिक कृषि-प्रविधि, पशुपालन र आयआर्जनका विकल्पहरूलाई जनतामा चिनाउने,
- ☐ नगर क्षेत्रका औद्योगिक, व्यापारिक, सांस्कृतिक, शैक्षिक तथा विकास निर्माण र नागरिक गतिविधिका बारेमा सुसूचित गर्ने र सहयोग पुऱ्याउने,
- ☐ प्रसारण क्षेत्रभित्रका स्थानीय भाषा, संस्कृति, बालसाहित्य र लोक परम्पराहरूको पहिचान, संरक्षण र सम्बर्द्धन गर्ने,
- ☐ विभिन्न जातजाति, भाषाभाषी, धर्म र संस्कृतिका जनतामा पारस्परिक सद्भाव, मैत्री र भाइचाराको भावना विकास गर्ने,
- ☐ सहकारी भावना, उद्यमशीलता, राष्ट्रिय उद्योग एवं स्वदेशी बजारको व्यापक प्रचार-प्रसार गर्ने,
- ☐ जनतालाई अधिकार र कर्तव्यको बोध गराउने,

- विश्व शान्तिको मुहान लुम्बिनीको भौतिक तथा आध्यात्मिक विकास र जागरणका लागि प्रचार-प्रसार गर्ने,

## ३. संस्थागत संरचना, कार्यक्रम र जनशक्ति

### *३.१ संस्थागत संरचना*

रेडियो लुम्बिनी सञ्चालन गर्ने संस्था लुम्बिनी सूचना तथा सञ्चार सहकारी संस्था हो । यो संस्था प्रचलित सहकारी ऐन २०४८ अनुसार जिल्ला सहकारी कार्यालयमा दर्ता भएको छ । सहकारी संस्था व्यवस्थित गर्नका लागि सहकारी ऐन, सहकारी नियमावली र विभिन्न निर्देशिकाहरू छन् । तर रेडियो सञ्चालनका लागि भने राष्ट्रिय प्रसारण ऐन, राष्ट्रिय प्रसारण नियमावली र लाइसेन्सका शर्तहरूका अधिनमा रहनुपर्ने हुन्छ ।

यसको संगठनात्मक स्वरूपमा- साधारणसभा, सञ्चालक समिति र आन्तरिक लेखा समिति रहेका छन् । साधारणसभा सर्वोच्च निकाय हो । सञ्चालक समितिको निर्वाचनदेखि नीति र योजनाको निर्देशन यो निकायबाट हुन्छ । हरेक वर्ष साधारणसभा गर्नै पर्छ । यसका लागि कानुनी बाध्यात्मक अवस्था छ । सञ्चालक समितिको निर्वाचन भने ३-३ वर्षमा हुने प्रावधान छ । लेखा समिति आन्तरिक रुपमा लेखा परीक्षण समिति हो । यसले संस्थाको आर्थिक गतिविधि निर्दिष्ट गर्छ र आफ्नो प्रतिवेदन साधारणसभामा पेश गर्छ । यो समिति साधारण सभाबाटै निर्वाचित हुन्छ । आर्थिक क्षेत्रमा सञ्चालक समितिलाई निर्देशन दिने र आवश्यकता ठानेमा विशेष साधारणसभा बोलाउन सिफारिस गर्ने अधिकारसमेत लेखा समितिमा रहेको हुन्छ ।

संस्थाको सचिव र रेडियोको प्रबन्धक यसको दैनिक प्रशासनको कार्यकारी निकाय हो। सचिव वा प्रबन्धकको नियुक्ति सञ्चालक समितिले गर्छ । तर यो पदमा जाने व्यक्ति संस्थाको सदस्य हुनुपर्ने विधान (विनियम) को बाध्यता छ । सञ्चालक समितिले अन्य विभिन्न उप-समितिहरूको गठन गर्न सक्छ । यसले आफूलाई सल्लाह दिने विभिन्न क्षेत्रका व्यक्तिहरू संलग्न रहेको सल्लाहकार समिति गठन गर्छ । रेडियो प्रसारणका क्षेत्रमा कार्यक्रम अनुगमन उप-समिति रहेको छ । यसमा सञ्चालक समितिका सदस्य, साधारण सदस्य र स्थानीय बुद्धिजीवीहरू समावेश छन् । त्यसैगरी संस्थाको आन्तरिक कार्यक्रम व्यवस्थापन गर्न रेडियोकर्मी र व्यवस्थापनसमेतको प्रतिनिधित्व रहने गरी कार्यक्रम व्यवस्थापन उपसमिति रहने गरेको छ ।

यसरी यी विभिन्न निकायले रेडियो लुम्बिनीको सञ्चालनमा महत्त्वपूर्ण भूमिका खेलेका छन्। यी निकायहरू एकअर्कामा सन्तुलन र नियन्त्रणको काम त गर्छन् नै साथै यिनले समुदायको सहभागितालाई समेत सुनिश्चित गरेका छन्।

### *३.२ कार्यक्रम*

रेडियो लुम्बिनी हाल बिहान ५.०० बजेदेखि बेलुकी ११ बजेसम्म सञ्चालनमा रहेको छ । २०६१ जेठको सुरुवातसँगै रेडियो लुम्बिनी दैनिक १८ घण्टा प्रसारण हुन थालेको छ । रेडियो लुम्बिनीले अहिले हरेक घण्टामा समाचार बुलेटिन प्रसार गर्न थालेको छ । यसबाहेक दैनिक ११ वटा राष्ट्रिय र स्थानीय पत्रिकाहरूको समाचार सार तथा हप्तामा ११ पटक गुरुङ र मगर भाषामा समाचार प्रसार हुन्छ । यसले ४ वटा भाषामा कार्यक्रमहरू प्रसार गर्ने गर्छ ।

प्रसारण क्षेत्रमा थारू र मधेसी जनसंख्यालाई दृष्टिगत गरी थारू भाषामा कार्यक्रम बढाउँदै लैजाने नीति रहेको छ । तर रेडियो लुम्बिनीका सञ्चालकहरूका अनुसार, थारू समुदायका व्यक्तिहरू सञ्चार क्षेत्रमा उल्लेख्य रूपमा प्रवेश नगरेका कारण स्टेसनले सोचेजति मात्रामा थारू भाषामा कार्यक्रम विस्तार हुन सकेको छैन । थारू भाषा संस्कृतिको कार्यक्रमम, थारू भाषामा कृषि र बाल कार्यक्रम साप्ताहिक रूपमा ३०।३० मिनेट सञ्चालन हुन्छन् भने दैनिक १ घण्टा विभिन्न सन्देश, जानकारी र शिक्षामूलक विषयसहित सांगीतिक कार्यक्रमसमेत प्रसारण हुन्छ ।

समग्रमा रेडियो लुम्बिनीमा समाचारसहित समसामयिक, शैक्षिक, स्वास्थ्य, बालबालिका, साहित्यिक, साँस्कृतिक, महिला सशक्तीकरण, जातीय समता, अपांग उत्थान, कृषि, आर्थिक, सामाजिक विषयवस्तु, विश्व समाचार, खेलकुद आदि विषयका कार्यक्रम नियमित रुपमा प्रसारण भइरहेका छन् । मोटामोटी रूपमा हेर्ने हो भने प्रसारणमा शिक्षामूलक कार्यक्रमको भार करिब ४४ प्रतिशत छ भने सांगीतिक कार्यक्रमको भार ५६ प्रतिशत रहेको छ ।

कार्यक्रम उत्पादनको प्राथमिक क्षेत्रका रूपमा स्थानीय आवश्यकता, स्थानीय विषयवस्तु, स्थानीय समस्या सम्भावना गौरव र गतिविधि रहेका छन् । स्थानीय क्षेत्रका लागि उपयोगी राष्ट्रिय र अन्तर्राष्ट्रिय उपलब्धि, नवीन खोज, घटना आदि समेत रेडियो लुम्बिनीले प्रसार गर्ने गरेको कुरा प्रमुख निर्माता लेखनाथ ज्ञवाली बताउनुहुन्छ ।

संस्थापक स्टेसन म्यानेजर भरत भुसालका अनुसार, कार्यक्रममा भाषा शैली र लवजलाई स्थानीयकरण गर्ने प्रयत्न गरिएको छ । तर रुपन्देही अर्घाखाँची, गुल्मी, पाल्पा, स्याङ्जा, पर्वत, बाग्लुङ र स्थानीय आदिवासीको संयुक्त स्थान भएकाले भाषाको लवजमा एकात्मकता नभएकाले र यी क्षेत्रका लवजहरूको अति छ्यासमिस अवस्था रहेकाले पूर्णत: एकरुपता ल्याउन गाऱ्हो परेको देखिन्छ । कार्यक्रम उत्पादकहरू विभिन्न क्षेत्रबाट आएका र तिनको लवजमा समेत एकरूपता आउन नसकेको कारण कार्यक्रमहरूमा प्रयोग हुने भाषा, प्रस्तुति र शैलीमा एकरूपता हुन नसकेको रेडियो सुन्दा प्रष्टै देखिन्छ । रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवाली, तालिम दिनेहरू पनि थरीथरी मान्यता भएका व्यक्तिहरू भएकाले कार्यक्रम उत्पादक र सञ्चालकहरूको सिकाइ नै पनि एकै खालको हुन नसकेको अनुभव सुनाउनुहुन्छ । अधिकांश कार्यक्रमहरूमा फिल्डका वास्तविक आवाज राख्न नसकेको पाइयो । उपयुक्त तालिम र फिल्ड रेकर्डरको अभावका कारण यस्तो भएको कार्यक्रम सञ्चालकहरूको गुनासो छ ।

विभिन्न खाले व्यावसायिक समस्या आफ्ना ठाउँमा छँदैछन् तर समग्रमा रेडियो लुम्बिनीले प्रसारणका माध्यमबाट समुदायमा पुऱ्याएको योगदानका लागि यसलाई नेपाल प्रेस इन्स्टिच्युटले भर्खरै गोपालदास पत्रकारिता पुरस्कारले सम्मानित गरी हौसला बढाइदिएको छ ।

"रेडियो लुम्बिनीले संकटकाललगायतका अप्ठ्यारो अवस्थामा पनि कार्यक्रमहरूमा सन्तुलन कायम गर्न सक्यो, हाम्रा कार्यक्रममा कलात्मक कमीकमजोरी पक्कै पनि छन् तर समाजमा हामीले फ्याँकेका सूचना र अन्य सामग्रीलाई हेर्दा नयाँ खुल्ने रेडियोका लागि मार्गदर्शक नै बनेका छन्, यो हाम्रा लागि गौरवको कुरा हो", रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवाली भन्नुहुन्छ ।

### *३.४ जनशक्ति*

रेडियो लुम्बिनीको ठूलो जनशक्तिले पत्रकारिता रेडियो लुम्बिनीमै आएर सिकेको हो । यो जनशक्ति सञ्चार क्षेत्रको यात्रामा लागेको नै लुम्बिनीबाट हो । यसैले रेडियो लुम्बिनीलाई आवश्यक पर्ने जनशक्ति स्थानीय स्तरबाटै

विकास गरिएको हो । रेडियो सुरुवातकालमा प्रशिक्षित १२।१३ जनाको समूह यस संस्थाको पहिलो पुस्ताको मुख्य जनशक्ति हो भने त्यसपछिका दोस्रो र तेस्रो पुस्ताका विभिन्न आन्तरिक र बाह्य तालिमबाट प्रशिक्षित जनशक्तिसमेत अहिले रेडियोमा कार्यक्रम सञ्चालन गरिरहेको छ । रेडियो लुम्बिनीमा अहिले पूर्णकालीन, अल्पकालीन र स्वयंसेवक गरी ५० जनाको हाराहारीमा जनशक्ति रहेको छ ।

कार्यक्रमतर्फ १५ जना पूर्णकालीन सञ्चारकर्मी कार्यरत छन् । त्यसैगरी प्रविधिका क्षेत्रमा ४ जना र लेखा व्यवस्थापन क्षेत्रमा ५ जना पूर्णकालीन छन् । प्राविधिक क्षेत्रमा रेडियो लुम्बिनीसँग रेडियो ट्रान्समिटरको सामान्य मर्मत, स्टुडियोको निर्माण र नयाँ उपकरण जडान गर्न सक्ने क्षमता विकास भएको छ । केही समयअघि ५०० वाटको ट्रान्समिटर प्रविधि प्रमुख कृष्ण केसीले व्यक्तिगत जोखिममा एक्लै जडान गरिदिनुभएको थियो ।

कर्मचारी नियुक्त गर्नका लागि एउटा स्थायी पदपूर्ति उपसमिति छ । यसले आवश्यकताअनुसार कर्मचारीहरूको नियुक्ति गर्ने गर्दछ । रेडियो लुम्बिनीमा स्वयंसेवकहरूले समेत मनग्गे योगदान पुऱ्याएका छन् । अधिकांश स्वयंसेवकहरूको प्रवृत्तिचाहिँ पहिले केही सिक्नु रहेको र सिकिसकेपछि जागिर पाउनु रहेको संस्थापक स्टेसन म्यानेजर भरत भुसालको अनुभव छ । स्वभावतः स्वयंसेवकहरूलाई स्टेसनले सुविधा दिन सकेको छैन ।

## ४. श्रोता

रेडियो लुम्बिनीको खास श्रोता स्थानीय समुदायका बासिन्दा हुन् । जातिगत दृष्टिले हेर्दा रेडियो लुम्बिनीका श्रोताहरूमा बाहुन, क्षेत्री, दलित वर्ग, मगर, गुरुङ तथा आदिवासी यादव, थारू र मुसलमान रहेका छन् । यस्तै भाषागत हिसाबले कुरा गर्ने हो भने रेडियो लुम्बिनीको प्रसारण दायराभित्र नेपाली, मैथिली, भोजपुरी र थारू भाषीहरूको बाहुल्य रहेको छ भने मगर र गुरुङ भाषी पनि रेडियो लुम्बिनीका श्रोताहरू हुन् ।

धार्मिक दृष्टिकोणबाट रेडियो लुम्बिनीका श्रोताहरूलाई छुट्याउँदा हिन्दु मुख्य रूपमा देखिन्छन् भने त्यसपछि बुद्ध र मुस्लिम धर्मावलम्बीहरू रहेका छन् । पेशागत हिसाबले हेर्दाचाहिँ रेडियो लुम्बिनीका कार्यक्रम सुन्नेहरूमा कृषक, उद्यमी-व्यापारी, कर्मचारी, विद्यार्थी र गृहिणीहरू हुन् । उमेरका हिसाबले बालबालिकादेखि किशोर, युवा, प्रौढ र पाको उमेरका व्यक्तिहरू यसका श्रोता हुन् । यसरी हेर्दा प्रायः सबै वर्ग, क्षेत्र र लिंग, उमेर समूह र भाषाभाषी र धर्मावलम्बी रेडियो लुम्बिनीका श्रोता हुन् । यी सबै वर्गलाई समेटेर कार्यक्रम प्रसार गर्न सक्नु रेडियो लुम्बिनीको चुनौती र खुबी दुवै हो । बालबालिका र पाको उमेरका व्यक्तिलाई लक्षित गरेर कार्यक्रमको प्राथमिकता तय गरिएको छ । किशोर-किशोरीहरूलाई ज्ञान, शिक्षा र जानकारी बढाउने उद्देश्यका कार्यक्रम केन्द्रित गरिएको छ । गीत संगीतलाई केवल मनोरन्जनमात्र होइन शिक्षाको प्रभावकारी माध्यमका रूपमा ग्रहण गरिएको छ । यसका अतिरिक्त कृषक, विद्यार्थी, महिला अधिकार, बालअधिकार र चेतना, दलित, स्थानीय भाषा, व्यापार, उद्यमलगायतका विषयलाई समेटेर कार्यक्रम सञ्चालन गरेर रेडियो लुम्बिनीले समग्रमा प्रायः श्रोतालाई समेटेको छ ।

अर्को हिसाबले हेर्दा रेडियो लुम्बिनीका श्रोताहरूमा सहरी क्षेत्र र ग्रामीण क्षेत्रका बासिन्दाहरू रहेका छन् । यी दुवैको रुचि र आवश्यकतामा केही फरक छ । सहरी क्षेत्रका बासिन्दाहरू ग्रामीण क्षेत्रका बासिन्दाको तुलनामा थोरै भए पनि सूचना र अवसरको पहुँचमा छन् भने ग्रामीण जनता सूचना र अवसरबाट पूर्णतया वञ्चित छन् । यी दुवैथरी श्रोताको सूचनाको आवश्यकता पूरा गर्न रेडियो लुम्बिनीले प्रयास गरिरहेको छ ।

क्षेत्रगत रुपमा भन्दा रेडियो लुम्बिनीका श्रोता रुपन्देही, नवलपरासी, कपिलवस्तु, पाल्पा र अर्घाखाँची जिल्लाका बासिन्दा हुन् । चितवनको पश्चिमी क्षेत्रसमेत यसको प्रसारण दायराको क्षेत्र हो ।

## ५. सामुदायिक सहभागिता

रेडियो लुम्बिनी समुदायकै सवा सयभन्दा बढी व्यक्तिको प्रत्यक्ष संलग्नतामा सञ्चालित छ । भाषा, धर्म, जाति, लिंग, पेशा, वर्गका दृष्टिले सबै क्षेत्रको सहभागिता रहेको छ संस्थागत स्वामित्वमा ।

कार्यक्रमतर्फ स्थानीय आदिवासी थारूहरूको भाषामा कार्यक्रम दैनिक र साप्ताहिक गरी ५ प्रकृतिका कार्यक्रम सञ्चालनमा छन् । मगर र गुरुङको भाषिक उपस्थितिसमेत रहेको छ । कार्यक्रममा दलित, मगर, गुरुङ, थारू जातिका व्यक्तिहरू सहभागी छन् । महिला संख्या आधाभन्दा बढी छ ।

रेडियो लुम्बिनीले समुदायलाई रेडियोमा संलग्न गराउन संगठित श्रोताको अवधारणा अघि सारेको छ । समुदायको गतिविधिलाई सञ्चारमा पुऱ्याउन ग्रामीण क्षेत्रमा रेडियो प्रतिनिधिका रूपमा सामुदायिक कार्यकर्ताहरूलाई क्रियाशील गराइएको छ । अहिले रेडियो लुम्बिनीका श्रोताहरूका २५ वटा क्लब क्रियाशील छन् । श्रोता क्लबहरूले समुदाय र रेडियोबीच सेतुको काम गरेका छन् । क्लबहरूले रेडियो कार्यक्रमहरूबारे समुदायलाई जानकारी गराउने र समुदायका आवाज रेडियोसमक्ष पुऱ्याउने महत्त्वपूर्ण कार्य गरेका छन् ।

रेडियो लुम्बिनीका कार्यक्रममा समुदायको राम्रो सहभागिता रहेको छ । समुदायका व्यक्तिहरू सीधैं रेडियो स्टेसनमा आएर, पत्र पठाएर र फोन गरेर कार्यक्रमहरूमा संलग्न हुन सक्छन् । यसबाहेक विभिन क्षेत्रका व्यक्तिहरूका आवाज पनि कार्यक्रममा प्रसार हुन्छन् ।

## ६. सामाजिक परिवर्तन

भगवान् गौतम बुद्धको पावन जन्मभूमिमा स्थापित रेडियो लुम्बिनीको प्रसारणपछि स्थानीय बासिन्दाले रेडियो प्रविधिसँग परिचित हुने मौका पाए । मणिग्रामका होटल व्यवसायी द्रोण दाहाललाई रेडियो लुम्बिनी असाध्यै मन पर्छ । किन त ? उहाँकै शब्दमा "यसले न्याय-अन्याय छुट्याएर भन्ने गर्छ । यसको भविष्य राम्रो छ ।"

भरत भुसालका शब्दमा "सामुदायिक रेडियो लुम्बिनीको प्रसारणले स्थानीय क्षेत्रमात्र नभएर सिंगो मोफसलमा रेडियो स्टेसन सञ्चालन गर्ने सामर्थ्य बोध गराउनु यसको पहिलो परिवर्तन मान्न सकिन्छ ।"

रेडियो प्रसारणबाट स्थानीय क्षेत्रमा आएका परिवर्तनहरूलाई छोटकरीमा केलाउने हो भने सञ्चार साधनमा ग्रामीण क्षेत्रका सर्वसाधारणको पहुँच पुगेको अनुभूति भएको छ । यस्तै स्थानीय आदिवासीहरूमा आफ्नै भाषामा, आफ्नै सेरोफेरोमा कार्यक्रम प्रसारण हुँदा गौरवको भावना बढेको छ र रेडियोप्रति आकर्षण पनि बढेको छ । बिहान अबेरसम्म सुत्नेहरूमा बिहान ६:१५ बजे प्रसारण हुने रेडियो सगरमाथाको पत्रपत्रिकाको सँगालो कार्यक्रम सुन्न चाँडै उठ्ने बानी बसेको छ । सत्य, तथ्य र स्पष्ट स्थानीय घटनाहरू थाहा पाउन एफएमले के भन्छ सुनौं भन्ने जिज्ञासा श्रोतामा बढेको छ । "कतिपय एफएम र पत्रपत्रिकामा हल्लैहल्लाको भरमा पनि समाचार दिएको हुन्छ, त्यस्तो कुरामा त खास विश्वास पनि लाग्दैन, तर अहिलेसम्म रेडियो लुम्बिनीले चाहिँ विश्वसनीय समाचार र कार्यक्रमहरू दिइरहेको छ, रेडियो लुम्बिनीप्रति एकदमै विश्वास लाग्छ," श्रोता द्रोण दाहालको विश्वास हो यो ।

रेडियो लुम्बिनीले आफ्ना कार्यक्रमहरूमा नागरिक समस्या र तिनको समाधानका लागि दोहोरो संवादको अवसर बढेको छ । यसले सञ्चालन गरेको हमार मर्चवार कार्यक्रमबाट स्थानीय मर्चवार क्षेत्रको समस्या, अवस्था, सम्भावना र राम्रा पक्षको उजागर गर्नुका साथै स्थानीय समुदायको निर्णय गर्ने क्षमता बढेको छ भने सुशासनका लागि सरकारी निकायलाई समेत सहयोग पुगेको छ (हेर्नुस: मर्चवारसम्बन्धी बक्समा राखिएको भरत भुसालको लेख) ।

रेडियो लुम्बिनीबाट प्रसारित कार्यक्रमबाट भारतले सीमामा नेपाली भू-भाग डुब्ने गरी बनाएको रसियावाल-खुर्दलोटन बाँधविरुद्ध जनमत सिर्जना गर्न र राष्ट्रियताको भावना सिर्जना गर्न सहयोग पुऱ्याएको छ ।

यसले हाजिरी जवाफलगायतका कार्यक्रममार्फत विद्यालय र ११, १२ कक्षाका विद्यार्थीहरूमा गुणस्तरीय पढाइका लागि प्रतिस्पर्धा बढाउनुका साथै स्थानीय निकायका जनप्रतिनिधि र कर्मचारीहरूमा जनताप्रतिको जवाफदेही बढाउनसमेत सहयोग पुऱ्याएको छ ।

“हामीले कुलो पानीदेखि भैंसी हराएको र बालक हराएको सम्मका सूचनाहरू नि:शुल्क प्रसार गर्दै आएका छौं, आदिवासी समुदाय: थारू, मगर, गुरुङलगायत मर्चवार, भगवान् गौतम बुद्धको मावल देवदहसम्बन्धी जेजस्ता कार्यक्रम दिन सक्यौं, ठूलो कुरो गर्न सकियो भनेर गर्व लागेको छ, रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवाली भन्नुहुन्छ । रेडियो लुम्बिनीले स्थानीय सामुदायिक विकासका साथै लैंगिक समता र जातीय समानताका लागि चेतना जगाउने तथा बालअधिकार, महिला सशक्तीकरण र शान्तिका पक्षमा प्रसार गरेका कार्यक्रमहरूले सामाजिक चेतना जगाउने कार्य गरेको छ ।

## ७. स्टेशनको निरन्तरता

रेडियो लुम्बिनी २०५६ माघ २७ देखि निरन्तर र नियमित प्रसारणमा रहेको छ । सुरुमा दैनिक ४ घण्टाबाट प्रसारण सुरु गरेको रेडियो लुम्बिनी अहिले १८ घण्टा प्रसारणमा रहेको छ । निरन्तरताका लागि यसले विज्ञापन, कार्यक्रम प्रायोजन र कार्यक्रम तथा उपकरण सहयोग लिने नीति बनाएको छ। आर्थिक स्रोतका हिसाबले सहकारीका सदस्यहरूले लगानी गरेको रकम नै रेडियो लुम्बिनीको बीउ सम्पत्ति हो। यसलाई सहयोग गर्ने संस्थाहरूमा डानिडाको हुगोउ, सामुदायिक रेडियो सहयोग केन्द्र/नेपाल वातावरण पत्रकार समूह/रेडियो सगरमाथा, युनेस्को, एमएस नेपाल आदि रहेका छन् ।

यी संस्थाका अतिरिक्त रेडियो लुम्बिनीले स्थानीय व्यापारी, सरकारी र गैरसरकारी संस्थाहरूसँग मिलेर कार्यक्रमहरू उत्पादन/प्रसारण गर्ने गरेको छ। यसबाट रेडियोको निरन्तरताका लागि सहयोग पुगेको यसका सञ्चालकहरूको भनाइ छ। औद्योगिक नगरी बुटवलसमेत यसको प्रसारणको दायरामा परेकाले व्यापारिक विज्ञापन र कार्यक्रम प्रायोजन राम्रै रहेको छ भने काठमाडौंमा समेत विज्ञापन प्रवर्द्धन शाखा खोलेको छ ।

रेडियो लुम्बिनी आत्मनिर्भरतातर्फ अघि बढिरहेको भए तापनि सानै ठाउँमा ४-४ वटा रेडियो स्थापनाका लागि सरकारले इजाजत दिएपछि भने यो साधन र स्रोत बाँडिने निश्चित छ। चारवटा रेडियो सीमित साधन र स्रोत भएका ठाउँमा चल्न सक्छन् कि सक्दैनन् भन्ने चासो अहिले यो क्षेत्रमा बढेको छ। रेडियो लुम्बिनीका सञ्चालकहरू पनि यो कुरामा चिन्तित छन् ।

रेडियो लुम्बिनीले आफ्नै स्टुडियो भवन निर्माण गर्न जग्गा खरिद गरेको छ भने भवन निर्माण कार्य अगाडि बढाइरहेको छ ।

स्टेसनको निरन्तरताका लागि यसलाई स्पष्ट दिशावोध गराउनुपर्ने, स्रोत र साधनको क्षेत्र बढाउनुपर्ने, रेडियो तालिम केन्द्रका रूपमा विस्तार गर्दै जानुपर्ने कार्यहरू गर्नुपर्ने र कार्यक्रमका क्षेत्रमा अझ बढी सामुदायिकीकरण गर्नुपर्ने आवश्यकता रहेको छ ।

## ८. चुनौती र व्यवधान

रेडियो लुम्बिनी सुरु भएदेखि नै यसले व्यवधान र चुनौती सहँदै आउनुपरेको छ। यसका चुनौती र व्यवधानलाई कार्यक्रम, प्राविधिक, दिगोपन गरी मुख्य रूपमा तीन भागमा विभाजन गर्न सकिन्छ:

### ८.१ *कार्यक्रम*

रेडियो लुम्बिनीले यसका श्रोताको आवश्यकता र चाहना पूरा गर्ने उद्देश्यले कार्यक्रम प्रसार गरेको भए पनि यसले अझै गुणस्तरीय कार्यक्रम पस्कनुपर्ने सुझाव संस्थापक स्टेसन म्यानेजर भरत भुसालको छ । रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवालीका विचारमा, बाहिरको प्रतिक्रिया राम्रै पाइएको भए पनि स्टेसनभित्र व्यावसायिकताका हिसाबले कार्यक्रमबारे असन्तुष्टि देखिनु स्वाभाविकै हो । कार्यक्रमको पहिचान, दक्ष जनशक्तिको पूर्ति र दक्ष जनशक्तिको भरथेगका लागि अझै पहल हुनुपर्ने देखिन्छ ।

रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवाली कार्यक्रममा कतिपय कमजोरी भएको कुरा स्वीकार्नुहुन्छ । उहाँ भन्नुहुन्छ, "हामी समयको गतिमा अगाडि बढ्न सकेका छैनौं । हाम्रा रेडियोकर्मीहरूको आवाजमा मीठास र सुरिलोपनको अभाव छ । अलिक हामी परम्परागत भएका छौं । हाम्रा कार्यक्रमहरू बढी बौद्धिक भए, आमसञ्चारमाध्यममा हुनुपर्ने जति सरलता भएन कि भन्ने प्रतिक्रिया पनि मैले पाएको छु । यसलाई हामीले चिर्न सक्नुपर्छ ।"

रेडियो लुम्बिनीले कार्यक्रममा संवेदनशील जिम्मेवारी महसुस गरेको छ: राजनीतिक सन्तुलन कायम राख्ने, जातीय सन्तुलन मिलाउने, धार्मिक, पेशागत सन्तुलन मिलाउने । यो बढो गाऱ्हो कुरा रहेछ, अध्यक्ष ज्ञवालीको भनाइ छ ।

कार्यक्रम लक्ष्यित श्रोतामाझ निश्चित उद्देश्य र सन्देश बोकेर व्यावसायिक मानकमा प्रसार गर्न सक्ने अवस्था सिर्जना गर्नु नै कार्यक्रमका हिसाबले रेडियो लुम्बिनीको चुनौती हो । यसले विविध पेशा, उमेर समूह, लिंग, जाति, वर्ग र भूगोलमा छरिएर रहेका श्रोताको रुचि र आवश्यकतालाई व्यावसायिक सीप, कला र धर्मको कसीमा जाँचेर कार्यक्रमका हिसाबले पूरा गर्दै अघि बढ्न सक्नु आवश्यक छ ।

### ८.२ *प्राविधिक*

रेडियो लुम्बिनीका प्राविधिक प्रमुख कृष्ण केसीका अनुसार, प्राविधिक कठिनाइहरू स्टेसन सुरु भएदेखि नै भोग्नुपरेको छ । पहिलोपल्ट प्रसारणका लागि जोड्ने बित्तिकै ट्रान्समिटर नै जल्यो । त्यसपछि जोडेको अर्को

ट्रान्समिटर पनि केही समय चलेपछि पड्कियो । “हामीले पूर्णव्यावसायिक (Professional) भन्दा पनि अर्ध व्यावसायिक (Semi Professional) उपकरणहरूले काम चलाउनु परिरहेको छ । तालिमको अभाव छ । काम चलाउको हैसियतमा प्राविधिक उपकरणहरू चलिरहेका छन् ।

केही समयअघि मात्रै रेडियो लुम्बिनीको छँदाखाँदाको एउटा राम्रो मिक्स्चर पनि जल्यो । रुपन्देहीमा विद्युत् आपूर्तिमा भोल्टेजमा एकरूपता नभएका कारणले पनि उपकरणहरूमा बढी भोल्टेजले हानेर बिगार्ने गरेको प्रविधि प्रमुख केसीको गुनासो छ । आफूसँग दक्ष प्राविधिक जनशक्ति नभएको पनि उहाँको भनाइ छ ।

अर्कोतिर रेडियोका प्राविधिक उपकरण पुराना पनि भइसकेका छन् । एकातिर पर्याप्त उपकरणको अभाव, अर्कातिर भएका उपकरण पनि पुराना । यसले गर्दा भनेजस्तो राम्रो आवाज प्रसार हुन सकिरहेको छैन,” अध्यक्ष अर्जुन ज्ञवाली भन्नुहुन्छ । फिल्ड रेकर्डरको कमीका कारण लुम्बिनीले आवश्यक परेजति जनताका आवाज अझै बटुल्न सकेको छैन ।

पूरै व्यावसायिक र नयाँ उपकरण र तिनलाई सही ढंगले चलाउन जान्ने जनशक्तिको जोरजाम नै रेडियो लुम्बिनीको एउटा प्राविधिक चुनौती हो भने अर्को चाहिँ डिजिटल उत्पादन र प्रसारण ।

### *८.३ दिगोपन*

दिगोपन रेडियो लुम्बिनीको महत्त्वपूर्ण चुनौती बनेर खडा भएको छ । यसले प्रसारण सुरु भएदेखि नै यो समस्याको सामना गर्नु परिरहेको छ । “सबैभन्दा ठूलो चुनौती भनेकै आर्थिक हिसाबले व्यवस्था मिलाउनु हो रहेछ, पहिले स्वयंसेवकबाट मात्रै चलिहाल्छ नि भन्ने सुनेका थियौं र रहरै रहर अनि लहडै लहडमा सुरु गरिहालियो, चलेपछि त आर्थिक संयोजन मिलाउन पो धेरै गाऱ्हो भयो”, संस्थापक अध्यक्ष अर्जुन ज्ञवालीको अनुभव हो यो ।

वास्तवमै २५ जना सेयर सदस्यबाट सुरु गरिएको सहकारी संस्था आर्थिक समस्याको समाधानकै लागि अहिले १२९ जनाको विशाल परिवार भइसकेको छ । “आफ्नै स्टुडियो घर बनाइसक्नलाई त यो संख्या १५० नपुऱ्याई धर छैन जस्तो छ”, अध्यक्ष ज्ञवाली भन्नुहुन्छ ।

ठूलो परिवार भएको संस्थाका आफ्नै खाले सवलता र दुर्वलता हुन्छन् । लुम्बिनी सूचना तथा सञ्चार सहकारी संस्थामा पनि परिवार ठूलो हुँदै गएपछि त्यसलाई सही ढंगले व्यवस्थापन गर्न र परिचालन गर्न तुलनात्मक रूपमा गाऱ्हो भइरहेको अध्यक्ष अर्जुन ज्ञवालीको कथन छ ।

रेडियोको अर्को महत्त्वपूर्ण पक्ष भनेको व्यवस्थापकीय बन्दोबस्त राम्ररी मिलाउन सक्नु हो । रेडियो लुम्बिनीले यो कुरामा भने आफूलाई कमजोर ठानेको छ । व्यवस्थापकीय अनुभव, तालिम र ज्ञानको आदान-प्रदानको अभावमा यो हुनु स्वाभाविकै पनि हो । रेडियोकर्मीको बीचमा समन्वय गर्ने, अनुशासन कायम गर्ने र कर्मचारीको क्षमताको मूल्यांकन गरी राम्रालाई पुरस्कृत गर्ने जस्ता काममा दक्षता पुऱ्याउन व्यवस्थापनले नसकेको अनुभव अध्यक्ष अर्जुन ज्ञवालीले सँगाल्नुभएको छ ।

“व्यवस्थापकीय बन्दोबस्त मिलाउन सकिएन, हामी सिपालु थिएनौं, यस पक्षबाट भन्ने हो भने स्टेसन भगवान् भरोसा चालिरहेको छ,” उहाँ भन्नुहुन्छ । उहाँका विचारमा आन्तरिक द्वन्द्व र अनमेल देखाउने प्रयास पनि भइरहेको छ जुन ठीक होइन ।

दिगोपनका लागि बजार बिस्तार र आर्थिक स्रोतको खोजी अर्को मुख्य पाटो हो । अहिले रुपन्देहीमा मात्र तीनवटा रेडियो स्टेसन बजिरहेका छन् भने एउटा प्रसारणको पूर्णतयारीमा जुटेको छ । बुटवल औद्योगिक क्षेत्र भए पनि यहाँको उद्योग र व्यवसायले ४-४ वटा रेडियोलाई धान्न सक्ला कि नसक्ला यो भविष्यको बात बनेको छ । तर रेडियो लुम्बिनीका अध्यक्ष अर्जुन ज्ञवालीका विचारमा नयाँ खुलेका रेडियोहरूले यसलाई ठूलो असर पार्न सक्दैनन् किनकि यो पाँच वर्षको भइसक्यो । "हाम्रो रेडियो सामुदायिक रेडियो हो, हाम्रा सेयर सदस्यहरूले नाफा नलिने निर्णय भइसकेको छ, त्यसैले हाम्रा सदस्यहरूलाई खाली रेडियो बजेको सुन्न पाए पुग्छ, यसैले हाम्रो प्रतिस्पर्धा अन्य रेडियोसँग हुनेछैन भन्ने कुरामा हामी ढुक्क छौं," उहाँ भन्नुहुन्छ ।

समग्रमा रेडियो लुम्बिनी आत्मनिर्भर भइसकेको छ । यसले रणनीतिक हिसाबले योजना बनाएर आफूसँग भएको मानवीय संशाधनलाई बेलाबेलामा धार लाउँदै यो संशाधनको सही उपयोग गरेर प्रसारणमा पहिलेदेखि बनेको आफ्नो स्थान कायमै राख्न सक्नु आवश्यक छ । साथै तीन-तीनवटा अन्य प्रतिस्पर्धी रेडियो स्टेसन खडा भइसकेकाले आर्थिक, कार्यक्रम र दिगोपनका हिसाबले अल्पकालीन र दीर्घकालीन रणनीति बनाएर अघि बढ्न सक्नु समयको माग हो । पौडन नजानेको मान्छे खोलामा झ्वाम्म फाल हालियो, अहिले पौडेर बाहिर निस्कँदा थाहा भयो, पौडदा धेरै चुनौतीको सामना गर्नुपर्दोरहेछ, अध्यक्ष ज्ञवालीका यी शब्दले रेडियो लुम्बिनीका अगाडि अनगिन्ति चुनौती अझै छन् भन्ने कुराको पुष्टि गर्छन् ।

# रेडियो लुम्बिनी र मर्चवार

**भरत भुसाल,**
संस्थापक स्टेसन म्यानेजर, रेडियो लुम्बिनी

हाल एफएम प्रसारण वा सामुदायिक रेडियो सञ्चालन आमसमुदायका लागि नौलो भएन, जुम्ला, बझाङ र सोलुखुम्बुमा समेत सामुदायिक प्रसारण सुरु हुँदैछन् । व्यापारिक क्षेत्रहरूमा, खासगरी काठमाडौं, बुटवल, पाल्पा, पोखरा, चितवन, विराटनगरजस्ता क्षेत्रहरूमा झन प्रतिस्पर्धा बढेको छ । ५० वटा जति एफएम सञ्चालनको क्रममा छन् । अर्थात् लहर एफएमको छ ।

चार वर्षअगाडि भने अवस्था अत्यन्तै फरक थियो । रेडियो सगरमाथाबाट प्रभावित भई रेडियो लुम्बिनीको तयारी गर्दा हामी संस्थापकहरू आफैंले के गर्दैछौं ? के हाम्रा बुताबाटै रेडियो सञ्चालन हुन्छ ? जस्ता प्रश्नहरूले हामीलाई काउकुती लगाएको जस्तो महसुस हुन्थ्यो । रेडियो लुम्बिनी सुरु हुने कुरा अरु व्यक्तिले सुन्दा धेरैका लागि मजाक बन्थ्यो, काठमाडौंबाहिर पहिलो रेडियो खुल्ने, ग्रामीण क्षेत्रमा, हामी सर्वसाधारणबाट यो काम हुन सक्छ भन्ने बारेमा प्राय: सबैलाई विश्वास थिएन । रेडियो लुम्बिनी सञ्चालनमा आएपछि युनेस्को परियोजनाअन्तर्गत मदनपोखरा गाविस पालपाले सुरु गऱ्यो, त्यसरी क्रमश: काठमाडौंबाहिर पनि रेडियो विस्तार हुँदै गयो । यो ४ वर्षमा जोसुकैले पनि रेडियो सञ्चालन गर्न सक्छौं भन्ने विश्वास बढाएको छ ।

रेडियो सञ्चालन भएपछि कुनै विशेष समुदायका लागि विशेष कार्यक्रम गर्नुपर्छ भन्ने सोचिरहेका थियौं । रुपन्देही जिल्लाको मर्चवार क्षेत्रलाई केन्द्रित गरेर कार्यक्रम बनाउने निधो गऱ्यौं । मर्चवार क्षेत्र रुपन्देही जिल्लाका करिब १८ वटा गाविसको संयुक्त नाम हो । मर्चवार क्षेत्रको पूर्व, पश्चिम र दक्षिणतिर भारतको सिमाना पर्छ । उत्तरमात्र नेपाल पर्छ । लामो समयदेखि मर्चवार शासक र सत्ताका लागि भोटको खानीमात्र बन्यो । त्यसको सामाजिक विकासका लागि राज्यले खासै वास्ता गरेको थिएन । यसै परिवेशमा मर्चवारवासीको स्वाभिमान र शक्ति विकसित गर्न कार्यक्रम सञ्चालन गर्ने निधो गऱ्यौं ।

मर्चवार र सिंचाइका क्षेत्रमा लामो अध्ययन/अनुसन्धान गर्नुभएका दीपक ज्ञवाली र अजय दीक्षितले यस कार्यमा रेडियो लुम्बिनीलाई कार्यक्रमको अवधारणा, विषयवस्तु र आर्थिक रूपमा पनि महत्त्वपूर्ण सहयोग गर्नुभयो । रेडियो कार्यक्रम “हमार मर्चवार” सञ्चालन भयो ।

कार्यक्रम “हमार मर्चवार” हप्तामा २ दिन प्रसारण गरिन्थ्यो । त्यसमा एउटा नेपाली भाषामा, जसमा मर्चवारका पीडा समस्या, सम्भावना र गौरवका पक्षहरू अन्यक्षेत्रका श्रोतालाई जानकारी दिनु थियो । नेपाली सत्ताले सिंगो मर्चवारविरुद्ध फैलाएको गलत सन्देश चिर्नु थियो । अर्को दिन स्थानीय भाषामा मर्चवारका बासिन्दालाई जागृत गर्ने, प्रेरित गर्ने र उनीहरूलाई सचेत गर्ने कार्यक्रम थियो । खासगरी मर्चवारको सिंचाइलाई केन्द्र बनाएर सिंचाइ र जागरण, सिंचाइ र स्वास्थ्य, शिक्षा, आय, रोजगारलगायत विविध विषयमा सिंगो मर्चवारलाई केन्द्रित गरिएको थियो ।

मर्चवारका बासिन्दाको मुख्य समस्या एउटा मात्र छैन । रुपन्देही जस्तो सुविधा सम्पन्न जिल्लामा करिब २० वटा गाविसमा केवल ३ वटा मात्र माध्यमिक विद्यालय छन् । मर्चवारका बासिन्दाले सिंचाइका लागि खोलाको पानी विद्युतीय पम्पले तानेर सिंचाइ गर्नुपर्छ । बजार टाढा छ । स्वास्थ्यको अवस्था उस्तै छ । अझ विकराल समस्या पानी प्रदूषणको छ ।

मर्चवार क्षेत्रका १४ वटा गाविसमा सिंचाइको स्रोत एउटा दानव खोला हो । यो खोलामा लुम्बिनी रोडमा रहेको "रिलायन्स पेपर मिल" ले यति बढी प्रदूषण गराएको छ कि त्यो पानी चौपायालाई पनि हानिकारक छ भने खेती पनि बिगारिरहेको छ । एउटा पुँजीपतिको निहित स्वार्थका लागि सिंगो राज्य हजारौं जनताको स्वास्थ्यसँग खेलवाड गरेको हामीले देख्यौं । त्यो विषयलाई हामीले महत्त्वका साथ उठायौं । रेडियो र स्थानीय पत्रपत्रिकामा समेत उठाइसकेपछि अरु पत्रकारहरूले पनि त्यसलाई महत्त्व दिन थाल्नुभयो ।

दानव खोलाको प्रदूषण नियन्त्रण गर्न अथवा रिलायन्स पेपर मिलको फोहोर र रसायन सोझै खोलामा नफाल्नका लागि मर्चवार सिंचाइ जलउपभोक्ता समूहले स्थानीय जिल्ला विकास समिति, प्रमुख जिल्ला अधिकारी, श्रम कार्यालय र उद्योग विभागसमेतमा पटक-पटक उजुरी गरे । अर्को उद्योग त्रिवेणी डिस्टिलरीले सुरुमा नदी प्रदूषित गराए पनि पछि आफ्नो परिसरमै केही पोखरी बनाएर पानी थिग्राउने गर्दथ्यो । तर रिलायन्स पेपरले केही वास्ता गरेन । प्रमुख जिल्ला अधिकारीदेखि प्रशासन मिलका सामु निरिह देखिन्थ्यो मर्चवारवासीहरूमा आक्रोश बढिरहेको थियो ।

यता सिंचाइ गरेबापत उपभोक्ताहरूले तिर्नुपर्ने पोत राम्रोसँग उठेको थिएन । पानी पोत संकलन नभएका कारण समिति राम्रोसँग क्रियाशील हुन सकेको थिएन । पानीपोत नतिर्नेमा स्थानीय धनी किसानहरू नै बढी थिए । पोत असुली गर्नुपर्ने मुख्य समस्यालाई निराकरण गर्नुपर्ने थियो । अर्कोतिर नहरको अवस्थाले गर्दा कतिपय कृषकको खेतमा पानी पुगेकै थिएन । उनीहरू बिनासिंचाइ पोत तिर्न बाध्य थिए ।

पोत र सिंचाइका बारेमा नियमित रेडियो अन्तर्क्रिया गरेपछि दुवै पक्षमा सुधार देखिन थाल्यो । पोत नतिर्ने किसानहरूलाई सार्वजनिक गर्ने र पानी नपुगेका ठाउँमा पानी पुऱ्याउनु समितिलाई सार्वजनिक रुपमा बाध्य गर्न थालेपछि मर्चवारमा परिवर्तन नै देखिन थाल्यो । रेडियो कार्यक्रमले गर्दा नहर सुरु भएको ६ वर्षमा पहिलोपटक मेरो खेतमा सिंचाइ भयो भन्ने किसानहरू भेटिए भने, ६ वर्षमा सबैभन्दा बढी पानीपोत असुली भएको त्यो वर्ष हो भनेर अध्यक्ष तजमुल मुसलमान भन्नु हुन्थ्यो ।

सामुदायिक क्षेत्रमा दोहोरो सञ्चार वा अन्तर्क्रिया गर्ने अवसर हुँदा परिवर्तनका लक्षणहरू बढ्दै जान्छन् भन्ने व्यावहारिक अनुभव हामीले त्यहाँ पायौं । सामुदायिक रेडियोहरूले यी प्रकृतिका स्थानीय समस्या र आवश्यकतामा जोड दिने हो भने समुदायको उत्थान र विकास सम्भव छ । हाम्रा लागि वा सामुदायिक रेडियोका लागि ठूला विषय होइन कि स्थानीय विषय नै प्रमुख र महत्त्वपूर्ण हुन्छन् । यसैमा सामुदायिक रेडियोको भविष्य निर्धारण हुन्छ ।

मर्चवार क्षेत्रलाई हाइलाइट गर्न नयाँ शव्दावलीको प्रयोग सुरु गऱ्यौं । मेची-महाकाली भने जस्तै साँस्कृतिक क्षेत्रमा "मर्चवार-मुस्ताङ" भन्ने शव्दको प्रयोग गऱ्यौं । हाल पनि विविध सांस्कृतिक पहिचान दिने सांगीतिक प्रकृतिको कार्यक्रमको नाम "मर्चवार-मुस्ताङ" रहेको छ ।

# रेडियो लुम्बिनीको संस्थागत संगठन यस्तो रहेको छ



# रेडियो लुम्बिनी साप्ताहिक प्रसारण तालिका

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ५:०० | आध्यात्मिक अनुष्ठान | आध्यात्मिक अनुष्ठान | आध्यात्मिक अनुष्ठान | आध्यात्मिक अनुष्ठान | आध्यात्मिक अनुष्ठान | आध्यात्मिक अनुष्ठान | आध्यात्मिक अनुष्ठान |
| ५:५० | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर |
| ६:१५ | पत्रपत्रिकाको संगालो | पत्रपत्रिकाको संगालो | पत्रपत्रिकाको संगालो | पत्रपत्रिकाको संगालो | पत्रपत्रिकाको संगालो | पत्रपत्रिकाको संगाल | पत्रपत्रिकाको संगालो |
| ६:३५ | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत |
| ७:०० | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार |
| ७:१५ | स्थानीय पत्रपत्रिका | स्थानीय पत्रपत्रिका | स्थानीय पत्रपत्रिका | स्थानीय पत्रपत्रिका | स्थानीय पत्रपत्रिका | स्थानीय पत्रपत्रिका | स्थानीय पत्रपत्रिका |
| ७:३० | कानून सम्बन्धि | खेल संसार | जीवन चक्र | सह अस्तित्व | घुम्दैफिर्दै | साप्ताहिक स.समीक्षा | स्थानीय पत्रपत्रिका |
| ८:०० | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर |
| ८:०५ | छिनोफानो | एकताको गाथा | साक्षात्मक | ८:१५ सम्म | जमर्को | हाम्रो लुम्बिनी | लुम्बिनी क्वीज |
| ८:३० | उद्यमी वार्ता | विज्ञान प्रविधि | अर्न्तदृष्टि | मेरो देश मेरो गौरव | शैक्षिक चौपारी | कृषि | परिवार स्वास्थ्य |
| ९:०० | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर |
| ९:१० | लोक शुशेली | लोक भाखा | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक भाखा | नमस्ते लुम्बिनी |
| १०:०० | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर |
| १०:१५ | सिनो नगरी | सिनो नगरी | सिनो नगरी | सिनो नगरी | सिनो नगरी | सिनो नगरी | मिन्हाम गोराक/संगम |

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| ११:०० | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर |
| ११:०५ | खिंचडी | हेलो लुम्बिनी | हेलो लुम्बिनी | हेलो लुम्बिनी | हेलो लुम्बिनी | खिंचडी | हेलो लुम्बिनी |
| ११:०५ | खिंचडी | हेलो लुम्बिनी | हेलो लुम्बिनी | हेलो लुम्बिनी | हेलो लुम्बिनी | खिंचडी | हेलो लुम्बिनी |
| १२:०० | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर |
| १२:१५ | भोजपुरीगीत/गोवशहरकहाल | भोजपुरी गीत | भोजपुरी गीत | भोजपुरी गीत | भोजपुरीगीत/गोवशहरकहाल | भोजपुरी गीत | भोजपुरी गीत |
| १:०० | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर |
| ᇁ०५ | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली |
| २:०० | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर |
| २:१० | पाहुर | युवा आवाज | दर्पण | पप डट कम | हाम्रोगीत तपाइको सन्देश | मर्चवार मुस्ताङ | मझेरी |
| ३:०० | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर |
| ३:१५ | लुम्बिनी कल इन | लुम्बिनी कल इन | लुम्बिनी कल इन | लुम्बिनी कनेक्सन | लुम्बिनी कल इन | लुम्बिनी कल इन | लुम्बिनी कल इन |
| ४:०० | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर | संक्षिप्त हालखबर |
| ४:०५ | जीवन अनि म | तपाइका गीत | तपाइका गीत | तपाइका गीत | तपाइका गीत | तपाइका गीत | तपाइका गीत |
| ५:०० | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर |
| ५:१०: | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली |

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ६:०० | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर |
| ६:०५ | बाल संसार(कोशेली) | बाल संसार | बाल संसार | बाल संसार | बाल संसार | बाल संसार | बाल संसार (फोनइन) |
| १२:०० | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर | नेपाल खबर |
| ६:३० | रेडियो नाटक | सरोकार/रुप | शैक्षिक त्रिवेणी | सेरोफेरो | परिवेश | मगर भाषाको समाचार | हाम्रो वातावरण |
| ७:०० | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार |
| ७:१५ | गफानन्दको गफ | हाम्रो रुपन्देही<br>हाम्रो गौरव/चिन्यारी | अर्थवाणिज्य | खेत खरियान | असलजोडी | आमा रेडियो पत्रिका | हाम्रो नगर हाम्रो शहर<br>सामयिक चर्चा |
| ७:४५ | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर | हाल खबर |
| ८:०० | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली | लोक शुशेली |
| ८:४५ | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा |
| ९:१५ | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री |
| १०:०० | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर | संक्षिप्त हाल खबर |
| १०:१५ | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री | शुभ रात्री |
| १०:४५ | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा | विविसि नेपाली सेवा |
| १०:४५ | रात्री सेवा समाप्ता | रात्री सेवा समाप्ता | रात्री सेवा समाप्ता | रात्री सेवा समाप्ता | रात्री सेवा समाप्ता | रात्री सेवा समाप्ता | रात्री सेवा समाप्ता |

## १. ऐतिहासिक पृष्ठभूमि

प्राचीन इतिहास बोकेको तानसेन बजारको चर्चालाई ओझेल पार्ने गरी चर्चामा आइरहने ठाउँ हो, पाल्पा जिल्लाको मदनपोखरा गाउँ विकास समिति । पाल्पा जिल्ला र नेपालका अरु करिब ४ हजार गाविसहरूका लागि नमुना गाउँको नाम पाएका केही गाउँहरूमध्येमा यो पर्छ । मदनपोखरा ग्रामीण विकासका आधारमा गाविसहरूमध्ये निकै अगाडि नै छ । छोराछोरीलाई विद्यालय पठाउनै पर्छ भनेर गाउँलेहरू आफैं सहभागी भएर विद्यालय सञ्चालन गरेका थिए ।

मदनपोखराको पहिचान भनेको समुदायको एकीकृत र सामूहिक भावना हो । गाउँ विकास समीतिका निवर्तमान अध्यक्ष यमप्रसाद पाण्डे मदनपोखराका मान्छेहरू श्रमको सम्मान गर्छन् भन्नुहुन्छ, “हलो जोतेर बाहुनको जात जान्छ भन्ने कसैले सोच्दैनन् । शिक्षकले पनि आरामले खेती गरेर आफैं भारी बोकी तानसेन लगेर बेच्छन् ।” यमप्रसाद पाण्डेका अनुसार मदनपोखरेली बेला-बेलामा विकासका बारे नयाँ-नयाँ प्रयत्नहरू गर्ने गर्छन् । यमप्रसाद पाण्डे उदाहरण दिएरै भन्नुहुन्छ, “मदनपोखरामा सामुदायिक वन र विद्यालयको सोच आयो बन्यो । भित्ते पत्रिकाको सोच आयो, प्रकाशित भयो । पाल्पा जिल्लामै नभएको हाट बजारको सोच पोहोर साल हामीले निकाल्यौं, त्यो पनि सुरु गरिसकेका छौं । अडियो टावरको अवधारणा आयो, त्यो पनि सञ्चालन गर्‍यौं ।  रेडियोको अवधारणा आयो अहिले सञ्चालन भइरहेको छ ।”

मदनपोखरामा रेडियोको अवधारणा २०५२ सालतिर प्रवेश गरेको हो । त्यतिबेला मदनपोखरामा महिलाहरूले संगठित भएर माडी उपत्यका महिला अडियो प्रसारण केन्द्रको नामबाट अडियो टावर सञ्चालन गरिरहेका थिए । महिलाहरू पाल्पा जिल्ला माडी उपत्यकाका विभिन्न एघार गाविसमा रेकर्डर बोकेर जान्थे । कार्यक्रम बनाएर ठाउँ-ठाउँबाट माइकमा बजाउँथे । अडियो टावरबाट कार्यक्रम प्रसारण गर्दा नै यति प्रभावकारी हुँदोरहेछ भने रेडियोबाटै कार्यक्रम चलाउन पाए कस्तो गजब हुने थियो भन्ने सोच हामीहरूमा थियो ।” एकैपटक धेरै ठाउँमा सन्देश पुर्‍याउन पाए सजिलो हुन्थ्यो भन्ने मदनपोखराकै सोमनाथ अर्याललाई पनि लागेको थियो ।

अडियो टावरबाट हुने प्रसारण नै रेडियो मदनपोखराको जन्मको पृष्ठभूमि हो तर रेडियो स्टेसन नै  खोल्ने सोचचाहिँ मदनपोखरेलीको आफ्नै होइन । विकास पत्रकारिताका प्रवर्द्धक भारतदत्त कोइराला, विनय कसजू, हेमबहादुर विष्टले पनि त्यसबेला रेडियो खोल्न सल्लाह दिनुभएको थियो ।

रेडियो स्थापना गर्ने कुरा गर्दा पछि हटेका मान्छेहरू पनि प्रेरणा र हौसला पाएपछि बाहिर निस्के । गाउँका धेरै सदस्यसँग कुराकानी पनि थालियो । अन्त्यमा सरकारलाई रेडियो स्टेसन प्रसारण अनुमति दिन बाध्य पार्नका लागि गाविसले अनुमतिका लागि आवेदन हाल्ने गाउँस्तरीय निर्णय भयो । गाविसको परिषद् बैठकमा हरेक वर्ष रेडियो सञ्चालन गर्ने भनेर निर्णय गरिन्थ्यो । अनुमति पाइनसके पनि स्टेसन सञ्चालनार्थ ५ सदस्यीय समीति गठन भएको थियो । यो समितिमा मदनपोखराका सोमनाथ अर्याल, यमप्रसाद पाण्डे, झपेन्द्र जीसी, उर्मिला घिमिरे र नगेन्द्र पाण्डे हुनुहुन्थ्यो । गाउँ परिषद्को बैठकमा हरेक वर्ष कुरा उठ्थ्यो र सेलाउने गर्थ्यो ।

काठमाडौंमा रेडियो सगरमाथाको सफलता देखिसकेका मदनपोखराका अग्रजहरूले गाउँ विकास समितिबाट रेडियो सञ्चालन गर्ने सोच तयार पारे । सबैलाई लागेको थियो, रेडियो स्टेसन जसले पनि चलाउन सक्छ । “हामीले समुदायको हित हुने, सामाजिक परिचालनमा महत्त्वपूर्ण भूमिका राख्ने, उत्पीडित, महिला र जनजातिहरूलाई

अगाडि बढ्न उत्प्रेरित गर्ने कार्यक्रम गर्नुपर्छ ।" झपेन्द्र जीसीलगायत स्टेसन स्थापनामा संलग्न पदाधिकारीहरू सुरुदेखि नै रेडियोको उद्देश्य के हो भनेर प्रष्ट हुनुहुन्थ्यो ।

मदनपोखराका बासिन्दाले गाविसको नाममा रेडियो स्टेसन स्थापनाको तयारी सुरु गरे । यो बैठकमा गाउँमा रेडियोलाई कसरी भित्र्याउने भन्ने छलफल भएको थियो । "बैठकमा हाम्रोभन्दा गाविसका नाममा आवेदन हाल्दा अनुमति पाउन अप्ठेरो हुनसक्छ भनेर नै यस्तो निर्णय लिइएको थियो," मदनराज घिमिरेको कथन छ ।

२०५२ सालमा मदनपोखरा गाविसले रेडियो स्टेसन सञ्चालनका लागि आवेदन दियो । तर तत्कालीन सञ्चारमन्त्री प्रदीप नेपाल गाउँलेहरूले रेडियो स्टेसन सञ्चालन गर्न सक्दैन भन्ने सोचाइ राख्नुहुन्थ्यो । "उहाँ हाम्रै पार्टीका नेता हुनुहन्थ्यो, तर उहाँले ठाडै रेडियोको स्वामित्व गाविसलाई दिन थाल्यो भने प्रान्तीय र इलाकाका कुरा आउन थाल्छन् त्यसैले यस्तो रेडियोको कुरा नगर्नुस् भन्नुभयो" निवर्तमान अध्यक्ष यमप्रसाद पाण्डे स्टेसन स्थापना गर्दाताका पाए/नपाएका सहयोगको लेखाजोखा राख्नुहुन्छ ।

मदनपोखरा गाविसले २०५५ साल पुस १७ गते सञ्चार मन्त्रालयबाट एफएम १०६.९ मेगाहर्जमा प्रसारण गर्नका लागि रेडियो मदनपोखराको नाममा प्रसारण अनुमति पाएको हो । सुरुमा स्टेसनको नाम राख्ने कुरामा सानोतिनो विवाद पनि भयो । केहीले रेडियो मदनपोखरा भन्ने नाम नै राख्नुपर्छ भन्ने दबाब दिए भने केहीले मदनपोखरा नाम एउटै गाविसमा सीमित हुन्छ त्यसैले रेडियो पाल्पा नाम राख्नुपर्छ भन्ने सुझाव पनि दिएका थिए ।

रेडियो प्रसारण अनुमति पाएपछि स्रोत परिचालन गर्न रेडियो मदन पोखराले प्रयत्न सुरु गर्‍यो । यसअघि नै रेडियो सञ्चालन गरिसकेको संस्था नेपाल वातावरण पत्रकार समूहमा सम्पर्क गर्‍यो । समूहले रेडियो सगरमाथामार्फत युनेस्कोमा सम्पर्क गर्‍यो । रेडियो सगरमाथाका तल्कालीन स्टेसन म्यानेजर तथा कार्यक्रम निर्देशक रघु मैनाली भन्नुहुन्छ, युनेस्कोसँग सम्पर्क गर्दा ऊ सहयोग गर्न तयार त भयो तर सशर्त । उसले मदनपोखरा गाविससँग रेडियो परियोजना सञ्चालनको अनुभव नभएको हुँदा नेपाल वातावरण पत्रकार समूह युनेस्कोले सहयोग गर्ने परियोजना सञ्चालन गर्ने जिम्मा लिन्छ भने युनेस्को सहयोग गर्न तयार भएको जानकारी दियो । यो कुरा हामीले मदनपोखरा गाविसका पदाधिकारीलाई सुनायौं । उनीहरूले निर्णय गरेर नेपाल वातावरण पत्रकार समूहलाई परियोजना सञ्चालन गरिदिन अनुरोध गर्‍यो । त्यसपछि युनेस्कोमा हामीले प्रस्ताव हाल्यौं । परियोजना स्वीकृत भयो । र, यो परियोजना संचालनका लागि नेपाल वातावरण पत्रकार समूहले मदनपोखरा गाविसका प्रतिनिधि र समूहका प्रतिनिधि राखेर संयुक्त  कमिटी गठन गर्‍यो । त्यसमा मदनपोखराका तर्फबाट गाविस अध्यक्ष यमप्रसाद पाण्डे र झपेन्द्र जीसी तथा नेपाल वातावरण पत्रकार समूह/रेडियो सगरमाथाका तर्फबाट रघु मैनाली र ओम खड्का रहनुभएको थियो । यही कमिटीले रेडियो परियोजना सञ्चालन गरी सञ्चालनको झन्डै डेढ वर्षपछि मदनपोखरा गाविसलाई रेडियो परियोजना हस्तान्तरण गर्‍यो ।

रेडियो मदनपोखराले प्रविधि परीक्षणका रूपमा प्रसारण आरम्भ २०५६ चैत २३ गते दिउँसो एक बजेर ५ मिनेटमा गरेको हो । एक सय वाट क्षमताको ट्रान्समिटरबाट प्रसारण हुने रेडियो मदनपोखरा करिब ४ लाख जनतामाझ पुग्न सक्छ । सुरुमा दुई घन्टा, चार घन्टा, छ घन्टा, आठ घन्टा हुँदै अहिले यो स्टेसन बिहान छ बजे नौमती बाजाको तालमा जाग्छ भने राति साढे नौ बजे बन्द हुन्छ ।

“सुरुमा अनुमति पाइसकेपछि पनि हामीले यो रेडियोलाई एकदमै हल्का रूपमा लिएका थियौं । हामीले त सोचेका थियौं- रेडियो डोकामा लिएर माइकबाट बोल्दै हिंड्ने भन्ने सोचेका थियौं । पछि पो थाहा भयो एकै ठाउँबाट गर्नुपर्छ र यो डोकामा लिएर जान सम्भव हुँदैन ।” यो डोकोमा लिएर हिंड्ने प्रविधि होइन भन्ने कुरा सञ्चालक समितिका सदस्य एकप्रसाद भण्डारीले धेरै समयपछि मात्रै बुझ्नुभएको हो । मदनपोखरा गाविसले अनुमतिपत्र पाइसकेपछि मदनपोखरेलीले रेडियो चलाई छाड्छन् भन्ने कसैलाई पनि लागेको थिएन । रेडियोका पदाधिकारीहरू रेडियो स्टेसन स्थापनार्थ आर्थिक स्रोत जुटाउन सहयोगी हातहरूको खोजी गर्दै जाँदा मदनपोखराको सम्पर्क यूनेस्कोसँग भयो । स्टेसन म्यानेजर गुणाकर अर्यालका अनुसार “स्टुडियो बनाउन आउँदैन, कार्यक्रम सञ्चालन गर्न जान्दैनौं । हामीलाई रेडियो सञ्चालन गर्नका लागि तालिम र साधन चाहियो भनेर माग गरियो ।”

## २. अभिप्रेरणा, लक्ष्य र उद्देश्य

### *२.१ अभिप्रेरणा*

गाउँले रेडियो खोल्नुपर्छ भन्ने मदनपोखरेलीको आफ्नै सोच होइन । मदनपोखरेली आफैंले रेडियो सञ्चालन गर्न सक्छौं भन्ने कल्पना पनि गरेका थिएनन् । जनतालाई अधिकार सम्पन्न बनाउँदै उनीहरूलाई सूचनाको मालिक बनाउन सक्यो भने गाउँको वास्तविक विकास हुन्छ भन्ने कुरा मदनपोखराका अगुवाहरूले ग्रामीण पत्रकारिता प्रवर्द्धकहरू भारतदत्त कोइराला, विनय कसजू र हेमबहादुर विष्टहरूको संगतबाट थाहा पाइसकेका थिए । गाउँमा रेडियो खुलेका थिएनन् तर खोल्न सकियो भने गजब हुन्छ भन्ने विश्वास धेरैमा थियो । ग्रामीण पत्रकारिताका अग्रजहरूसँगको सम्बन्ध, उहाँहरूको प्रेरणा नै रेडियो मदनपोखरा स्थापनाको बीउ हो ।

ज्ञान, सूचना र मनोरञ्जनले जनतालाई अधिकार दिन्छ । यस्तो अधिकार प्रजातान्त्रिक संस्कारमा मात्रै पाइन्छ । प्रजातान्त्रिक संस्कारको विकास नहुन्जेल विकास स्थिर हुँदैन । यही संस्कारको थालनी गर्न गाउँमा एउटा रेडियोको कल्पना गरिएको थियो । मानव विकासका क्षेत्रमा अगुवा मदनपोखरा गाविसले अब एउटा विकास सहयोगी सञ्चारमाध्यम किन नभित्र्याउने भन्ने कुरा उठेपछि रेडियोको अवधारणा आएको हो ।

### *२.२ लक्ष्य*

क) आफ्नो गाउँ वरपरका घटना, परिवेश, धार्मिक, सांस्कृतिक, ऐतिहासिक, आर्थिक, सामाजिक, शैक्षिक, भौगोलिक तथा विविध पक्षको जानकारी गराउनु,

ख) मौलिक संस्कृतिको संरक्षण र सम्बर्द्धन गर्दै स्वस्थ संस्कृतितर्फ डोऱ्याउनु,

ग) समुदायलाई सूचनाको मालिक बनाई मौलिक र मानवअधिकार, विकेन्द्रीकरण, स्वायत्त शासन, नीति निर्माण र कार्यान्वयनमा जनसहभागिता र स्वामित्वबोध गराउनु,

घ) ग्रामीण जनतामा आत्मसम्मान, स्वाभिमान र आत्मपहिचानको भावना बढाउनु,

ङ) स्थानीय लवज र भाषाको प्रयोग गरी निरक्षर जनताका लागि शिक्षाको स्रोत बन्नु,

च) युवा शक्तिलाई विकृत हुनबाट रोकी रचनात्मक कार्यतर्फ उन्मुख गराउनु,

छ)	"कृषि, शिक्षा, स्वास्थ्य र रोजगार, पर्यटनसहितको पूर्वाधार" भन्ने पाल्पा जिल्लाको विकासको लक्ष्य पूरा गर्नु र

ज)	महिला सशक्तीकरण, लैंगिक समानता, बालअधिकारजस्ता समानताका पक्षमा वकालत गर्नु ।

*२.३ उद्देश्य*

माथि उल्लिखित सामुदायिक रेडियो मदनपोखराका लक्ष्य पूरा गर्न संस्थाले निम्न उद्देश्यहरू लिएको छ ।

क)	शिक्षा, स्वास्थ्य, वन, कृषि, वातावरण र जनसंख्यासम्बन्धी विशेष कार्यक्रमद्वारा जनचेतनाको अभिवृद्धि गर्ने,

ख)	विकासका निम्ति सञ्चार भन्ने नीतिबाट सकारात्मक सन्देश समुदायमा पुऱ्याई विकासमा अग्रसर गराउने,

ग)	महिला, उत्पीडित, जनजाति, बालबालिकाको अधिकारका बारेका कार्यक्रम प्रसारणमा जोड दिने,

घ)	रेडियो र समुदायबीच दोहोरो सञ्चार प्रणालीको विकास गर्ने,

ङ)	रेडियो कार्यक्रम योजना गर्दा सामाजिक र स्थानीय सहमति जुटाउने,

च)	रेडियोलाई जनचासो र जीवनसंगीका रूपमा समुदायले ग्रहण गर्ने विषय बनाउने,

छ)	विकास योजनाको पारदर्शिता तथा जनसहभागिताको महत्त्वबारे सु-सूचित गराउने,

ज)	पाल्पा जिल्लाको लोकसंस्कृति र भाकाहरूको संरक्षण र सम्बर्द्धन गर्ने र

झ)	समुदायका हरेक व्यक्तिलाई "यो मेरो रेडियो हो" भन्ने भावना जगाउन समुदायमा आधारित विभिन्न कार्यक्रमहरू गर्ने ।

## ३. संस्थागत संरचना, कार्यक्रम र जनशक्ति

*३.१ संस्थागत संरचना*

रेडियो मदनपोखरा गाविसद्वारा सञ्चालित रेडियो स्टेसन हो । यसको प्रसारण इजाजतपत्रको स्वामित्व मदनपोखरा गाविससँग छ । रेडियोले गर्ने आम्दानी, खर्च र लगानी भनेको रेडियोको सम्पत्ति हो । रेडियोको सर्वोच्च निकाय भनेको गाउँ परिषद् हो । गाउँ परिषद्को मातहतमा सामुदायिक रेडियो मदनपोखरा सभा छ । यो सभामा पाल्पा जिल्लाका ६५ गाविसमध्ये रेडियोको तरंग पुग्ने २३ गाविसका अध्यक्ष, जिल्लाका विभिन्न सरकारी, गैरसरकारी कार्यालयका प्रतिनिधिहरू, श्रोता, कृषक, उद्यमीजस्ता समाजका हरेक पक्षका व्यक्तिहरूलाई निम्त्याइन्छ । वर्षमा एकपटक बस्ने रेडियो सभाले रेडियो सञ्चालक समितिका लागि प्रतिनिधिहरू मनोनयन र निर्वाचन गर्ने गर्छ ।

मदनपोखरा गाविसका अध्यक्षको अध्यक्षतामा १७ सदस्यीय सञ्चालक समिति गठन गरिएको छ, जुन रेडियो मदनपोखरा सभाको मातहतमा छ । यो समितिले रेडियोको स्वामित्व परिवर्तन गर्नेबाहेक स्टेसनका लागि जस्तोसुकै निर्णय लिन सक्छ । सञ्चालक समितिले गरेका निर्णयहरू गाविसले सदर गर्ने गरेको छ । त्यसैगरी सभाले स्टेसनबाट प्रसारण हुने हरेक कार्यक्रमको अनुगमनका लागि कार्यक्रम अनुगमन समिति चयन गर्छ । त्यसैगरी स्टेसनका हरेक गतिविधिहरूमा नीतिगत सल्लाह दिनका लागि सल्लाहकार समिति पनि गठन हुन्छ ।

सञ्चालक समितिले गरेका नीतिगत निर्णयहरूको कार्यान्वयन गर्न र रेडियोलाई नियमित सञ्चालन गर्नका लागि स्टेसन म्यानेजर सदस्य-सचिव रहने गरी ५ सदस्यीय कार्य सम्पादन समिति गठन गरिएको छ ।

स्टेसन म्यानेजरको मातहतमा सामुदायिक रेडियो मदनपोखराका रेडियो समिति, प्रशासन र प्रसारण गरी ३ विभाग छन् ।

*(हेर्नुहोस् संस्थागत संरचना)*

स्थानीय स्तरमा जनतासँग मिलेर काम गर्दै जाँदा उनीहरूका आवाजका आधारमा रेडियो मदनपोखराले आफ्नो सञ्चालक समितिलाई अझ बढी सहभागीमूलक बनाउन खोजिरहेको छ । तर स्थानीय निकायको चुनाव हुन नसकेको अवस्थामा यस्तो नीतिगत निर्णय लिने अधिकार स्टेसनसँग छैन । चुनाव नभएसम्म यही संरचनामा बाँधिनु रेडियोको बाध्यता छ । "तर अब चुनाव भए पनि नभए पनि यो संरचनालाई परिवर्तन गर्नुपर्छ र रेडियोलाई अझ बढी सहभागीमूलक बनाउनुपर्छ," स्टेसनका संयोजक सोमनाथ अर्याल प्रतिबद्धता जाहेर गर्नुहुन्छ । नयाँ संरचनाअनुसार अब गाविस अध्यक्षको अध्यक्षतामा, गाविस उपाध्यक्ष सञ्चालक समितिको उपाध्यक्ष, स्टेसन म्यानेजर स्वत: सचिव, स्टेसन संयोजक स्वत: सदस्य हुने गरी लक्षित क्षेत्रका २३ गाविसका अध्यक्षका तर्फबाट एकजना, रेडियोका कर्मचारीका तर्फबाट एकजना राख्ने सोच स्टेसनले बनाएको छ । त्यसैगरी जिल्लामा कार्यरत अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूबाट एक जना, आमा समूहबाट २ जना, उत्पीडित-जनजातिबाट एक जना, गाविस महासंघ र जिविस महासंघबाट एक/एक जना, किसान, सामुदायिक उपभोक्ता महासंघबाट, गैरसरकारी संस्था महासंघ आदिबाट एक/एक जना गरी २१ जना सदस्यका लागि निर्वाचन र मनोनयन गर्ने मनस्थिति रेडियोले बनाएको छ । त्यसैगरी गाउँ-गाउँमा गठन भएका रेडियो मदनपोखरा संगी समूहबाट प्रतिनिधित्व गर्ने गरी एक जना, गाउँमा गठन भएका रेडियो मूलसमिति र रेडियो प्रतिनिधिहरूबाट पनि प्रतिनिधित्व हुने व्यवस्था मिलाउन खोजिएको छ ।

गाउँ-गाउँमा बैठक बसेर बैठकबाट आएका सुझावहरूलाई लागू नगरी हुन्न भन्ने निक्र्यौलमा पुगिसकेपछि यो निर्णयमा पुगिएको हो । ४-४ वटा रेडियो स्टेसन भएको ठाउँमा समुदायको सहभागिताबिना एकलकाँटे तरिकाले रेडियो सञ्चालन गर्न सकिन्न र टिक्न पनि सकिन्न भन्ने रेडियो सञ्चालकहरूले बुझिसकेका छन् । सामुदायिक रेडियो मदनपोखरालाई व्यवस्थापकीय हिसाबले पनि साँच्चिकै सामुदायिक रेडियो बनाउने प्रक्रिया थालनी भइसकेको छ ।

### ३.२ ***कार्यक्रम***

रेडियो मदनपोखरा अहिले बिहान, दिउँसो र साँझ गरी दैनिक सवा १२ घन्टा प्रसारण भइरहेको छ । रेडियो मदनपोखराको प्रसारण विहान साढे पाँच बजे सुरु हुन्छ र राति साढे नौ बजे बन्द हुन्छ । स्टेसनले दिवा प्रसारण हालसालै थप गरेको हो । बिहान साढे पाँच बजेदेखि १० बजेसम्म प्रसारण हुने कार्यक्रमहरूमा धर्मसंस्कृति, समाचारमूलक स्थानीय गतिविधि, काठमाडौंबाट विभिन्न संघ-संस्थाहरूले उत्पादन गरेका कार्यक्रम र बिहानी संगीत प्रसारण गर्ने गरिएको छ । मध्यान्ह १२ देखि सवा ३ बजेसम्मको प्रसारणमा काठमाडौंबाट उत्पादित समाचार बुलेटिन र सांगीतिक कार्यक्रमहरू प्रसारण गर्ने गरिएको छ ।

साँझ पाँच बजेदेखि राति साढे नौ बजेसम्मको सन्ध्याकालीन प्रसारणमा स्टेसनका ग्रामीण प्रतिनिधिहरूले उत्पादन गरेका कार्यक्रम, मगर भाषाको कार्यक्रम, बालबालिकाका लागि कार्यक्रम, समाचारमूलक कार्यक्रम, माडी उपत्यकालाई समेटेर तयार पारिने रेडियोको चर्चित कार्यक्रम "माडीको पाहुर" लगायत पत्रपत्रिकाका समाचार र स्थानीय गतिविधिहरू प्रसारण गर्ने गरिएको छ ।

स्टेसनमा कार्यरत पत्रकार र रेडियोकर्मीले समुदायसँगै मिलेर काम गर्ने हुँदा समुदायभित्रका श्रमिकदेखि नीति निर्माण तहसम्म सबै वर्गका आवाजलाई समेटेर कार्यक्रम तयार गर्ने गरिएको छ । दैनिक प्रसारण हुने कार्यक्रमहरूमा अन्तर्वार्ता, स्थलगत रिपोर्टहरू, टेलिफोन वार्ता, जिल्लाका विभिन्न धार्मिक, साँस्कृतिक स्थलका बारेमा जानकारी, उद्योग/व्यापार मेला, स्थानीय चाडपर्वजस्ता विषयवस्तुलाई समेट्ने गरिएको छ । विभिन्न अवसरहरूमा रेडियो मदनपोखराले प्रत्यक्ष प्रसारण पनि गर्ने गरेको छ । हरेक कार्यक्रममा स्टेसनका रेडियो प्रतिनिधि, सम्पर्क व्यक्ति संगी समूह, शिक्षक, विद्यार्थी, किसानहरूलाई पनि सूचनाको स्रोतका रूपमा प्रयोग गर्ने गरिएको छ ।

स्टेसनबाट प्रसारण हुने सम्पूर्ण कार्यक्रममध्ये सूचना र शिक्षामूलक कार्यक्रम ५० प्रतिशत छ भने ५० प्रतिशत कार्यक्रम मनोरञ्जनात्मक छन् । स्टेसनले प्रसारण गर्ने मनोरञ्जनात्मक कार्यक्रममा स्थानीय लोकगीत, नेपाली गीत-संगीत, विभिन्न भाषाभाषीका गीतहरू समेटिने गरिएको छ । त्यसैगरी शिक्षामूलक कार्यक्रममा धर्म, संस्कृति, कृषि, वन, वातावरण, महिला, उत्पीडित दलित आदिवासीसँग जोडिएका विषयवस्तुलाई उठाइन्छ । मानवअधिकार, सुशासन, द्वन्द्व व्यवस्थापनजस्ता विषयमा पनि विभिन्न कार्यक्रम प्रसारण हुने गरेका छन् ।

रेडियो मदनपोखराबाट प्रसारण हुने कार्यक्रमको सबभन्दा बलियो पक्ष सूचनामूलक कार्यक्रम हो । स्टेसनले दैनिक राष्ट्रिय, स्थानीय समाचारहरू, विकास निर्माण, यातायात, अस्पतालका सूचनाहरू, तरकारीको दैनिक मूल्य, सार्वजनिक सूचनाहरू, सामाजिक सन्देश, मानिस वा सामान हराए वा भेट्टिएका जानकारी, दुर्घटना, प्राकृतिक प्रकोप आदिका बारेमा प्रसारण गर्ने गरेको छ ।

स्टेसनमा कार्यरत कार्यक्रम सञ्चालकहरूले रेडियोबाट प्रसारण भएका आफ्ना कार्यक्रमले पारेका प्रभावका बारेमा थुप्रै उदाहरणहरू सुनाउने गर्छन् । स्थापनाकालदेखि कार्यरत उत्पादक राजेश अर्यालको अनुभवमा स्टेसनले उत्पादन गर्ने हरेक कार्यक्रम परिवर्तनमुखी हुने गर्छन् । यसको सानो उदाहरण दिँदै उहाँ भन्नुहुन्छ- "हाम्रो जिल्लाका सीडीओले गाई पालेका रहेछन् । बिहान-बेलुका दूध खाने तर दिउँसोचाहिँ गाई बजारमा छोडिदिने गरेका रहेछन् । गाईले बजारका मान्छेलाई दु:ख दिन थालेपछि स्टेसनमा चिठ्ठी आयो । म सीडीओसँग अन्तर्वार्ता लिन गएँ । उहाँले अब भोलिदेखि यस्तो समस्या आउँदैन । तर अन्तर्वार्ता नगरौं भन्नुभयो । हामीले पीडितको स्वरमात्रै बजायौं । भोलिपल्ट त उहाँले गाईलाई रिडी कटाउन लगाउनुभएछ ।"

रेडियोमा "उत्पीडित आवाज" सञ्चालन गर्नु हुने सुकुम नेपालीले कार्यक्रममा "दलित" शब्द नै प्रयोग गर्नु हुन्न । उहाँको कार्यक्रमले जातीय छुवाछूत र असमानता विरोधी कुराहरू उठाउने गरेको छ । प्राथमिक विद्यालयका शिक्षक सुकुमले कार्यक्रम सञ्चालन गर्न थालेपछि कार्यक्रम झनै प्रभावकारी हुन थालेको छ । अरुले काम गर्न आइज नभनेसम्म नजाने संस्कारमा हुर्कनुभएका सुकुम नेपाली आजकाल रेडियोमा ढिलो काम सुरु गरियो भनी पछुताउन थाल्नुभएको छ । "कार्यक्रमले उत्पीडितहरूलाई मन्दिर प्रवेश गर्न सघायो । विवाह ब्रतवन्धमा

जाँड-रक्सी नभई नहुने हाम्रै समाजका व्यक्तिहरू खिर खान थालेका छन् । रक्सी र भगडाबिना विवाह हुन थालेको छ । एउटा रेडियो कार्यक्रमले त्यहाँभन्दा धेरै परिवर्तन के नै पो गर्न सक्छ र ?" सुकुम नेपालीको प्रश्न छ ।

"रेडियोले के गर्न सक्छ ?" भन्ने प्रश्नको जवाफमा गाविस अध्यक्ष, जिविस सभापति, स्टेसन म्यानेजरदेखि स्टेसनका कुनै पनि पदाधिकारीको मुखबाट एउटै उदाहरण आउँछ- स्टेसनले बस दुर्घटनामा परेका मान्छेहरूको ज्यान जोगाउन खेलेको भूमिका । राजेश अर्याल दुर्घटना र रेडियोको भूमिकाको यसरी बेलीविस्तार लगाउनुहुन्छ- खस्यौली गाविसमा बस पल्टेको हाम्रो रेडियो सँगी समूहका सदस्यले टाढैबाट देख्नुभएछ । उहाँले हामीलाई फोन गर्नुभयो । हामीले यो थाहा पाउने बित्तिकै हाम्रा त्यही क्षेत्रका रेडियो प्रतिनिधिलाई खटायौं । दुर्घटना भएको आधा घण्टा नबित्दै उहाँ सबै बुझेर स्टेसनमा आइपुग्नुभयो । दुर्घटनाका बारेमा उहाँसँग रेडियोबाट प्रत्यक्ष कुराकानी गरेपछि हामीले सीधा डीएसपीलाई फोन गर्‍यौं । उहाँले पनि टेलिफोनबाटै सुनिने गरी "ल केटा हो दुर्घटना परेछ तु गइहाल्" भनेर आदेश दिनुभयो । त्यसपछि हामीले मिसन अस्पतालमा फोन गर्‍यौं उपचारका लागि तयार रहन भनेर । पुन: घटनास्थलमा पुग्दा स्थानीय बासिन्दाले दुर्घटनामा परेका मान्छेको उद्धार गर्दैरहेछन् । अस्पताल पुगेका हाम्रा प्रतिनिधिले घाइते र त्यहाँ भइरहेको उपचारका बारे जानकारी दिन थाले । हामीले रेडियोबाट घाइतेहरूका लागि रगतको आह्वान गर्‍यौं । बजारका मान्छे रगत दान गर्नका लागि अस्पताल पुगे । मदनपोखरा गाउँ नजिकका मान्छेहरूचाहिँ उकालो चढेर स्टेसनमा आइपुगे र सोध्न थाले, "खोई कहाँ दिने हो रगत ?"

यो रेडियोले व्यवस्थापनमा बाहेक कार्यक्रममा समेत समाजका हरेक पक्षको प्रतिनिधित्व हुने गरी उत्पीडित, आदिवासी, महिलाका हितमा कार्यक्रम सञ्चालन गर्दै आएको छ । "स्टेसनले समुदायका कुरा सुनेर, स्थानीय आवश्यकता बुझेर त्यसैअनुसार कार्यक्रम उत्पादन गर्ने र प्रसारण गर्ने भएकाले यो सामुदायिक रेडियो हो । यसले अरुले के गर्छन् भन्दा पनि समुदायले के भन्छ भन्ने कुरामा ध्यान दिएको छ," सञ्चालक समितिका सदस्य तथा निवर्तमान जिविस सभापति झपेन्द्र जीसी कार्यक्रमका बारेमा भन्ने गर्नुहुन्छ ।

### ३.३ *जनशक्ति*

रेडियो मदनपोखराका जनशक्तिको आधार भनेका स्वयंसेवक हुन् । २० जना स्थानीय स्वयंसेवकबाट सुरु भएको यो रेडियोमा अहिले जम्माजम्मी १७ जना पूर्णकालीन कर्मचारी छन् । कार्यक्रम उत्पादन र प्रसारणमा संलग्न रेडियोकर्मीहरूको संख्या एक दर्जन छ । स्टेसनमा कार्यरत रेडियोकर्मीहरूबाहेक समुदायका स्वयंसेवक र रेडियो प्रतिनिधिहरूले पनि कार्यक्रम निर्माण र सञ्चालन गर्ने गरेका छन् ।

जनशक्ति उत्पादनको सबैभन्दा अप्ठेरो पक्ष भनेकै तालिमको व्यवस्था हो । रेडियो गाउँमा भएको हुनाले तालिमका अवसरहरू उपलब्ध छैनन् । त्यसैले आफूलाई आवश्यक जनशक्तिको जोहो आफैं गर्नुपर्ने बाध्यता छ ।

रेडियो मदनपोखराले जनशक्ति परिचालनलाई पनि दिगो बनाउनका लागि लक्षित क्षेत्रभरि स्वयंसेवक परिचालन गरेको छ । स्टेसनले "रेडियो लक्षित क्षेत्र" भनेर छुट्ट्याएको २३ वटा गाविसमा गाउँका समाजसेवी अथवा गाविस अध्यक्षको संयोजकत्वमा मूलसमिति गठन गरिएको छ । हरेक गाविसमा एक जना रेडियो प्रतिनिधि चयन गरेर पठाएको छ । त्यसैगरी सोही गाविसबाट एक जना महिलालाई रेडियो सम्पर्क व्यक्ति छानिएको छ । रेडियो प्रतिनिधि मूलसमितिको सचिव हो र रेडियोका लागि गाउँमा सबैभन्दा सक्रिय व्यक्ति । प्रतिनिधिले गाउँमा हुने हरेक

विकास निर्माणका काममा जनशक्ति र स्रोत परिचालन गर्छन् । रेडियोले गाविसका मुद्दाहरू उठाउनका लागि यी प्रतिनिधिहरूबाटै "परिवेश बोल्छ" भन्ने कार्यक्रम सञ्चालन गरिरहेको छ । रेडियोमा महिलाहरूको सक्रियता बढाउनका लागि छानिएका सम्पर्क व्यक्तिहरूले गाउँका समाचार रेडियोमा पठाउने, आफ्नो गाविसमा संगी समूह गठन गर्ने, उनीहरूलाई परिचालन गर्ने, गाउँमा सामाजिक तथा रचनात्मक कार्यक्रम आयोजना गर्छन् ।

स्टेसनले भावी जनशक्तिका रूपमा अहिलेका स्वयंसेवकहरूको क्षमता अभिवृद्धि गरिरहेको छ । रेडियोले उनीहरूलाई बोल्न र कार्यक्रम बनाउन सिकाउँछ । "यस्तो सामूहिक र सामुदायिक भावनाकै कारण अहिले रेडियो मदनपोखरा यो स्थितिमा पुगेको छ कि, यसले एकैपटक हजार जना स्वयंसेवक परिचालन गर्न सक्छ," स्टेसनका संयोजक सोमनाथ अर्यालको दाबी छ ।

## ४. श्रोता

प्राचीन ऐतिहासिक महत्त्व बोकेको पाल्पा जिल्लाको पूर्वमा नवलपरासी, पश्चिममा अर्घाखाँची र गुल्मी, उत्तरमा स्याङ्जा, गुल्मी, तनहुँ तथा दक्षिणमा रुपन्देही र नवलपरासी जिल्ला पर्छन् । पाल्पा जिल्लाको कुल जनसंख्याको झन्डै आधा, २० हजार घरधुरी रेडियो मदनपोखराका लक्षित श्रोता हुन् । रेडियोको प्रसारण क्षमता, तरंग सुनिने क्षेत्र र भौगोलिक अवस्था हेरेर आफ्ना श्रोतालाई रेडियो मदनपोखराले ३ भागमा विभाजन गरेको छ । अहिले रेडियो मदनपोखराका प्रमुख लक्षित गाविसहरू २३ वटा छन् । यसलाई वर्षेनी ५-५ गाविसका दरले बढाउँदै जाने नीति स्टेसनको छ । रेडियोबाट प्रसारण भएका कार्यक्रमबाट परिवर्तन आयो/आएन हेर्नका लागि स्टेसनले निश्चित क्षेत्रलाई मात्रै कार्यक्रम लक्षित गरेको छ ।

रेडियो सुनिने तर प्रभावकारिता मापन गर्न नसकिने र प्रत्यक्ष काम गर्न नसक्ने क्षेत्रलाई दोस्रो र प्रसारण तरंग पुग्ने क्षेत्र गरी रेडियो मदनपोखराका श्रोतालाई तीन वर्गमा विभाजन गरिएको छ । रेडियो मदनपोखरा पाल्पामा बाहेक गुल्मी, बाग्लुङ, पर्वत, स्याङ्जा, म्याग्दी, रुपन्देही, अर्घाखाँची, नवलपरासी जिल्लामा समेत सुन्न सकिन्छ । यसरी लक्षित क्षेत्र र छिमेकी जिल्लामा समेत गरेर रेडियो मदनपोखराका श्रोता झन्डै ७ लाख भएको अनुमान स्टेसनको छ ।

पाल्पा जिल्लाका पत्रकार भुवन केसीले रेडियो मदनपोखराका श्रोताका बारेमा लेखेका छन्, "यो रेडियो पाँचतारे होटलमा संगीतमय रात बिताउनेहरूका लागि होइन, हिन्दी, अंग्रेजीमा झुम्नेहरूका लागि होइन । यो त घाँसी, खेताला, हली, गोठाला, कृषक, भरिया, बाल, वृद्ध, महिला, विपन्न वर्ग र उत्पीडित जनजातिहरूका लागि हो । अखबार, टेलिभिजन र रेडियोबाट वञ्चित तर आफ्ना गाउँठाउँका ज्ञान, सूचना र विकास समाचार सुन्न चाहनेहरूका लागि हो ।" कृषिमा आधारित पाल्पा जिल्लाका लगभग ९० प्रतिशत जनसंख्या नै यो रेडियोका प्रमुख श्रोता हुन् । तर यो रेडियोले युवापुस्तालाई समेट्न भने त्यत्ति सकेको छैन ।

जातिगत हिसाबले रेडियोका श्रोता भनेका जिल्लाका मगर, बाहुन क्षेत्री, विश्वकर्मा, नेवार, कुमाल, ठकुरी आदि हुन् ।

सक्रिय श्रोताहरू संगठित भएर गाउँ-गाउँमा "सामुदायिक रेडियो मदनपोखरा संगी समूह" गठन गर्न थालेका छन् । स्वत:स्फूर्त रूपमा खुलेका यस्ता संगी समूहहरूको संख्या अहिले ६० पुग्न लागेको छ । स्टेसनले चाहिँ

गाविसका रेडियो प्रतिनिधिमार्फत खुलेका श्रोता क्लबलाई मात्रै आधिकारिक मान्यता दिने गरेको छ । स्टेसनबाट प्रसारण हुने कार्यक्रम नियमित सुन्नेबाहेक संगी समूहरूले आफ्नै वार्षिक योजना बनाएर काम गर्ने गरेका छन् । रेडियोले बाहेक उनीहरूलाई स्थानीय संघ-संस्थाले सामाजिक काममा परिचालन गर्ने गरेका छन् ।

## ५. सामुदायिक सहभागिता

सुरुमा रेडियो मदनपोखराले कार्यक्रम प्रसारण गर्न थालेपछि धेरै पाल्पालीहरूलाई लागेको थियो, यो मदनपोखरेलीको मात्रै रेडियो हो । त्यतिबेला मदनपोखराका हरेक विकास प्रयासहरूलाई राजनीतिक दृष्टिले हेर्ने गरिन्थ्यो । केहीले त रेडियो मदनपोखरालाई कम्युनिष्टको रेडियोसमेत भन्न बाँकी राखेनन् । समुदायको भनिए पनि रेडियो मदनपोखरालाई हेर्ने दृष्टिकोण नै फरक-फरक थिए । तर अहिले रेडियो स्टेसन सञ्चालन भएको पाँच वर्षमा धेरैको सोचाइमा परिवर्तन आएको छ । पहिला वास्तै नगर्नेहरू अहिले "हाम्रो आवाज बोल्ने रेडियो मदनपोखरा हाम्रो पनि रेडियो हो, हामी पनि सहभागी हुन पाउनुपर्छ" भन्न थालेका छन् ।

स्टेसनले आफ्नो कार्यक्रम र व्यवस्थापन  दुवैलाई सामुदायिक सहभागिताको आधार बनाएकाले समुदायका हरेक व्यक्तिको मुखबाट यस्तो सुनिन थालेको हो । रेडियो मदनपोखराको कार्यक्रम उत्पादन गर्ने जनशक्तिको स्थायी मेरुदण्ड भनेको गाउँका रेडियो प्रतिनिधि र रेडियो सम्पर्क व्यक्ति हुन् । २१ वटा गाविसका रेडियो प्रतिनिधिले पालैपालो उत्पादन गर्ने कार्यक्रम "परिवेश बोल्छ" मा गाविसका गतिविधि, विकास निर्माण र त्यहाँका समस्याका बारेमा कुरा हुन्छ । त्यसैगरी हरेक गाविसमा रहेका रेडियो सम्पर्क व्यक्तिले आफ्नो वरपर भएका घटनालाई तुरुन्तै रेडियोमा सञ्चार गर्छन् र रेडियोबाट त्यो कुरा समाचारका रूपमा हरेकका घरघरमा पुग्छ । रेडियोमा महिला सहभगिता बढाउनका लागि सबै रेडियो सम्पर्क व्यक्तिहरू महिला रोजिएको छ, जसको संख्या विभिन्न गाविसमा गरी २२ जना छ ।

कार्यक्रम निर्माण गर्न इच्छुक समुदायका जोसुकै पनि उचित कारणसहितको प्रस्ताव लिएर स्टेसनमा गएपछि झन् उत्साही भएर फर्कन्छन्, किनकि स्टेसनले रेडियो कार्यक्रम चलाउन उनीहरूलाई स्वीकृति दिन्छ । अहिले रेडियो मदनपोखराले विभिन्न जातजाति, उत्पीडित वर्ग, कृषक, वन समिति, आमा समूहलगायतका समुदायलाई रेडियो कार्यक्रम सञ्चालनका लागि  खुला मञ्च प्रदान गरेको छ ।

प्रसारण इजाजतको स्वामित्व गाउँ विकास समीतिसँग रहे पनि यो रेडियो पूर्णरूपमा स्वतन्त्र र स्वायत्त भएर सहभागीमूलक तरिकाले सञ्चालन भइरहेको छ । रेडियो कार्यक्रममा मात्रै सामुदायिक सहभागिता भएर पुग्दैन भन्ने सोचले रेडियो मदनपोखराले व्यवस्थापनमा समेत समुदायका हरेक वर्गको सहभागिता गराउन थालेको छ । स्टेसन म्यानेजर गुणाकर अर्यालको भनाइ छ, "रेडियो कुनै एक व्यक्ति वा कुनै एक निश्चित समूहको रहरले चल्ने कुरा होइन, रेडियो चलाउन त सबभन्दा पहिला जनताले चाहेको छ कि छैन त्यो कुरा बुझ्नुपर्छ ।"

रेडियो सञ्चालन गर्न गाउँ परिषद्को मातहतमा गठन भएको सञ्चालक समितिमा समुदायका विविध क्षेत्रका व्यक्तिहरूलाई संलग्न गरिएको छ । १७ सदस्यीय सञ्चालक समितिमा आमा समूह, वन समूह, उद्योगपति, उत्पीडित, गैरसरकारी संस्थाहरू, स्थानीय निकायका प्रतिनिधिहरू गरी समुदायको प्रतिनिधित्व नै धेरै रहेको छ ।

रेडियोको व्यवस्थापन पनि सहभागीमूलक बनाएर रेडियो मदनपोखरालाई गाउँलेहरूको प्रतिनिधिमूलक संस्थाका रुपमा विकास गर्न खोजिएको छ । स्थानीय निकायको निर्वाचन हुन नसकेकाले परिमार्जित र अझै बढी सहभागितामूलक गराउन खोजिएको संस्थाको संरचना परिवर्तन गर्न सकिएको छैन ।

रेडियो मदनपोखराले आफूलाई माया गर्ने हितैसीहरू र समुदायका व्यक्तिहरूसँग दोहोरो सञ्चार गर्न र स्टेसनलाई दिगो बनाउने संरचना खडा गर्नका लागि सदस्यता वितरण गर्ने गरेको छ । आजीवन, मानार्थ र साधारण गरी ३ थरी सदस्यता वितरण गर्ने गरेको छ । अहिले स्टेसनका लगभग २ सय सदस्य छन् । त्यसैगरी स्टेसनका कार्यक्रम नियमित सुनेर प्रतिक्रिया दिन र स्थानीय तहमा रेडियोको हितमा काम गर्न रेडियो मदनपोखरा संगी समूह पनि गठन भएका छन् । रेडियो सदस्य र संगी समूहका एक-एक जना प्रतिनिधि छानेर सञ्चालक समितिमा लैजाने तयारी स्टेसनले गरिरहेको छ ।

स्टेसनको व्यवस्थापन र कार्यक्रम निर्माणमा सँगै आर्थिक स्रोत जुटाउनका लागि पनि रेडियो मदनपोखराले समुदायलाई नै परिचालन गरेको छ । रेडियोको आफ्नै भवन बनाउनका लागि आवश्यक रकम जम्मा गर्न समुदायका व्यक्तिहरूले सामूहिक महायज्ञ गरेका थिए ।

अहिले पाल्पा जिल्लाका २३ गाउँ विकास समितिमा रेडियोका सम्पर्क व्यक्तिहरूले मुष्ठीदान संकलन गरेर स्टेसनमा पठाइदिने गरेका छन् । स्टेसनलाई दिगो बनाउनुपर्छ भनेर समुदाय आफैं स्टेसनका लागि आर्थिक स्रोत जुटाउन थाल्नु समुदायको सहभागिता र परिचालनका हिसाबले नमुना काम हो ।

रेडियोलाई समुदायकै बनाउन रेडियो मदनपोखराले कार्यक्रम, व्यवस्थापन र आर्थिक स्रोत जुटाउनेजस्ता रेडियोको सबै क्षेत्रमा समुदायलाई गोलबन्ध गर्ने काम गरिरहेको छ । यही सामुदायिक सहभागिताका कारण पाल्पा जिल्लामा रेडियो मदनपोखरा सुन्ने माध्यमभन्दा बढी सामाजिक परिचालनको माध्यम बनेको छ ।

## ६. स्टेसनको निरन्तरता

मदनपोखरा गाउँ विकास समितिले रेडियो स्टेसन सञ्चालन गर्ने अनुमति लिइसकेपछि सबैलाई डर लागेको थियो रेडियो खुल्ने र बन्द हुने एकैपटक हुन्छ भनेर । गाविसले सरकारले वर्षेनी छुट्ट्याउने निश्चित रकम विकास निर्माणमा खर्च गर्छ कि रेडियोमा लगानी गर्छ भनेर मदनपोखरेलीले हेरिरहेका थिए । कसैलाई पनि लागेको थिएन मदनपोखरा गाउँको शिरानमा अवस्थित रेडियो सञ्चालनका लागि आर्थिक स्रोत सजिलै जुट्छ भनेर ।

स्टेसन स्थापना भएको ५ वर्षपछि अहिले रेडियो मदनपोखराले स्टेसन सञ्चालनका लागि आफ्नै विविध स्रोतहरू पाएको छ । स्टेसनको अहिले आम्दानीको मुख्य स्रोत भनेको प्रायोजित कार्यक्रम हो । स्थानीय संघ-संस्थाहरूको प्रायोजन र काठमाडौंमा उत्पादन भएका विभिन्न कार्यक्रमहरू स्टेसनले प्रसारण गर्ने गरेको छ । त्यसैगरी स्थानीय उत्पादनका विज्ञापनहरू र अरु सामाजिक सन्देशहरू प्रसारण गरेर गत वर्ष स्टेसनले दुई लाख रुपैयाँ आम्दानी गरेको थियो ।

यो वर्ष रेडियो मदनपोखराले विज्ञापनबाटै ५ लाख रुपैयाँ उठाउने लक्ष्य लिएको छ । रेडियो मदनपोखराले अहिले तलबमा मात्रै मासिक ५५ हजार रुपैयाँ खर्च गर्ने गरेको छ । यसरी कर्मचारीको तलब र स्टेसनको अन्य दैनिक कामका लागि मासिक एक लाख रुपैयाँसम्म खर्च गर्ने गरेको छ । "मासिक ४-५ लाख खर्च गर्न सकिने

अवस्थामा पुगेपछि मात्रै हामीलाई स्थायित्वका लागि कुनै डर हुँदैन," स्टेसनका लेखापाल तथा गाउँ विकास समितिका सचिव रमेश अर्याल अड्कल काट्नुहुन्छ ।

रेडियो मदनपोखराले आर्थिक आम्दानीका वैकल्पिक स्रोतहरू तयार पारेको हुनाले विज्ञापनमा मात्रै निर्भर रहनुपर्ने अवस्था छैन । अहिलेसम्म रेडियोले बहुराष्ट्रिय कम्पनीका पेय पदार्थ र चाउचाउ, बिस्कुटजस्ता उत्पादनको विज्ञापन बजाउनलाई चासो राखेको छैन । र, कहिलेकाहीं स्टेसनमा यस्ता विज्ञापन बजाउनका लागि आउने प्रस्तावहरूलाई समेत रेडियोले अस्वीकार गरेको छ । वार्षिक एक लाख ५७ हजार बराबरको चाउचाउको विज्ञापन गर्ने प्रस्ताव आफ्नो टेबुलको घर्राबाट निकाल्दै स्टेसन म्यानेजर गुणाकर अर्याल गौरवका साथ भन्ने गर्नुहुन्छ, "हामीले यो प्रस्ताव अस्वीकार गऱ्यौं ।" यो निर्णयबाट स्टेसन म्यानेजरमात्र होइन सञ्चालक समितिका अधिकांश पदाधिकारीहरू दङ छन् । चाउचाउको विज्ञापन नबजाउने स्टेसनको निर्णय सुनाउँदा विज्ञापनदाताबाट खाएको गाली गुणाकर अर्याल यसरी सम्झनुहुन्छ, "विज्ञापन नबजाउने भन्ने हाम्रो निर्णय टेलिफोनबाट सुनाइदिएपछि तपाईहरू राष्ट्रिय उद्योगको घाँटी निमोठ्न पाउनुहुन्न, तपाईहरूलाई विज्ञापन बजाउँदिन भन्ने अधिकारै छैन भन्ने कुरा पनि आयो । जबरजस्ती दबाब दिने कोसिस पनि भयो । मैले चाउचाउको विज्ञापन बजाएर गाउँलेलाई तपाईहरूको घरमा भएको मकै-भट्टमास गाई भैंसीलाई ख्वाउनुहोस्, चाउचाउ आफू खानुहोस्, भन्दा कसको अधिकार संरक्षण हुन्छ ? भन्ने प्रतिप्रश्न गरेपछि कस्तो मान्छे रहेछ भनेर फोन राखिदिए । उनीहरूलाई लागेको थियो होला अरु स्टेसनले जस्तै पैसाको मुख हेरेर हामीले खुरुक्क विज्ञापन बजाउँछौं भन्ने ।" हुन त सामुदायिक रेडियोका लागि निश्चित विज्ञापन नीति नभएका कारण रेडियोलाई यो बजाउन हुने र यो नहुने भन्ने केही बाध्यता छैन । तर समुदायप्रति उत्तरदायी स्टेसन भएका कारण नै यस्तो निर्णय रेडियो व्यवस्थापनले लिएको छ ।

मदनपोखरा पहिलेदेखि नै सामुदायिक सहभागिताका हिसाबले नमुना गाउँ हो । देशका विभिन्न ठाउँबाट नमुना गाउँ हेर्न वर्षैनी सयौं टोली आउने गरेका छन् । मदनपोखरा आउनका लागि अहिले अर्को आकर्षण थपिएको छ रेडियो । स्टेसन भ्रमणमा आउनेहरूसँग निश्चित भ्रमण शुल्क लिने गरिएको छ । यसले पनि केही हदसम्म आर्थिक स्रोत जुटाउन भरथेग गरेको छ ।

अहिले मदनपोखरा गाविसले मात्रै होइन, पाल्पा जिल्लाभित्र लक्षित क्षेत्रमा पर्ने २३ वटै गाविसले रेडियोका लागि वार्षिक बजेट छुट्ट्याउन थालेका छन् । त्यसैगरी जिल्ला विकास समितिबाट पनि रेडियोका लागि बजेट छुट्ट्याउने गरिएको छ । मदनपोखरा गाउँ विकास समितिमा भएका सामुदायिक वन उपभोक्ता समितिले पनि आफ्नो आम्दानीबाट रेडियोका लागि निश्चित रकम छुट्ट्याउने गरेका छन् ।

रेडियो आफैंले स्थानीय गीत-संगीतको प्रवर्द्धन गर्ने र आम्दानीको वैकल्पिक स्रोत तयार पार्नका लागि गीतका क्यासेट उत्पादन गर्ने गरेको छ । रेडियो मदनपोखराले उत्पादन गरेको दुईवटा साँगीतिक एल्बम बजारमा आइसकेको छ । त्यसैगरी बेलाबेलामा आयोजना गरिने विविध साँस्कृतिक कार्यक्रमहरूबाट पनि रकम संकलन गर्ने गरिएको छ ।

मदनपोखरा गाउँ विकास समितिका निवर्तमान अध्यक्ष यमप्रसाद पाण्डेका विचारमा रेडियोले श्रोतालाई प्रत्यक्ष फाइदा नपुऱ्याउने र उनीहरूले पनि स्टेसनका लागि लगानी नगर्ने हो भने रेडियो टिक्दैन । "स्टेसन सञ्चालनका लागि मेरो पनि लगानी परेको छ भनेर हामीले मुष्ठीदानको अभियान सुरु गरेका छौं । दिनको एकमुठी

चामल जोगीलाई छुट्ट्याउने हाम्रो पुरानो चलन जस्तै रेडियोका लागि सहयोग जुटाउन सक्यौं भने हामी वर्षेनी हजारौं रुपैयाँ उठाउन सक्छौं । यसरी नै रेडियो दिगो हुन्छ ।" यमप्रसाद पाण्डेसँग जस्तै रेडियो मदनपोखराका हरेक पदाधिकारीसँग आँट छ ।

जिल्ला विकास समितिका निवर्तमान सभापति झपेन्द्र जीसी रेडियोलाई दिगो बनाउन समुदायबाट भएको उत्साहबाट प्रभावित हुनुहुन्छ । "दुई वर्षअघि हामीले रेडियोका लागि आफ्नै घर बनाउने अभियानमा महायज्ञ आयोजना गर्‍यौं । त्यतिबेला विभिन्न धर्म र जातजातिको बस्ती भएको जिल्लामा धर्मको आड लिएर रकम संकलन गर्दा रेडियोको पहिचानमा असर गर्न सक्छ भन्ने कुरा उठेको थियो । यो रेडियो धर्म मान्ने, धर्म नमान्ने र विभिन्न धर्म मान्नेहरूको रेडियो हो भन्ने कुरा त महायज्ञबाट उठेको रकमबाटै अड्कल काट्न सक्छौं । हामीले त्यसभन्दा अघि आयोजना गरेका ४ वटा महायज्ञबाट उठेको भन्दा धेरै गुणा रकम रेडियोका लागि संकलन भयो ।" उहाँको विचारमा स्टेसनको कार्यक्रम र व्यवस्थापनको मालिक समुदायलाई नै बनाउने हो भने संस्था दिगो बनाउन कत्ति गाऱ्हो छैन ।

करोडौं रुपैयाँ हात परे पनि समुदायको सहभागिता भएन भने स्टेसन दिगो हुँदैन भन्ने अनुभव मदनपोखरेलीले गरिसकेका छन् । त्यसैले पाँच वर्षअघि मदनपोखरा र माडी उपत्यकाका लागि मात्रै खुलेको रेडियो अहिले पाल्पा जिल्लाका २३ वटा गाविसको रेडियो बन्न सफल भएको छ । "यदि यो स्टेसनलाई सञ्चालन गर्न समुदाय लागेन, उनीहरूको मन जित्न सकिएन भने यो रेडियो व्यापारिक रेडियो स्टेसनको मोडेलमा जान्छ । त्यसैले यो हुनबाट रोक्न पनि जनताको मन जित्न कोसिस गरिरहेका छौं ।" तरकारी बेचेर वार्षिक ३ लाख आम्दानी गर्नु हुने सञ्चालक समितिका सदस्य तथा किसान एकप्रसाद भण्डारी आफूलाई त्यो आम्दानीबाट ३ हजार काटेर दिन कुनै अप्ठेरो नभएको बताउनुहुन्छ ।

अबको ५ वर्षमा स्टेसनले आफ्ना आजीवन सदस्यहरूको संख्या २ हजार पुऱ्याउने लक्ष्य लिएको छ । एकजना सदस्यबाट सदस्यता शुल्कस्वरूप लिइने १ हजार रुपैयाँ पनि स्टेसनलाई दिगो बनाउने राम्रो स्रोत हो ।

अहिले स्टेसनलाई दिगो बनाउनका लागि भइरहेका प्रयासहरू सफल भए भने रेडियो चलाउन समुदायबाटै पैसा ओइरिन्छ भने विश्वास छ । स्टेसन संयोजक सोमनाथ अर्यालको आशा छ, "जनताका बीचमा जनताका कुरा गर्ने रेडियोलाई त सहयोग गर्नुपऱ्यो नि !"

## ७. चुनौती र व्यवधान

रेडियो मदनपोखराका लागि यसको नाम नै सबैभन्दा ठूलो चुनौती हो । मदनपोखरा गाउँ विकास समितिको नाममा न्वारन गरिएको यो स्टेसनको तरंग पाल्पा जिल्लाको सदरमुकाम तानसेनलगायत अरु २३ गाविस र पाल्पा जिल्ला वरपरका केही छिमेक जिल्लाहरूसम्म पनि सुनिन्छ । तर सुरु सुरुमा यो रेडियो मदनपोखरेलीको मात्रै होइन भन्ने प्रमाणित गर्न रेडियो मदनपोखराले धेरै प्रयास गर्नुपऱ्यो ।

गाउँ विकास समितिको नाममा स्टेसनको प्रसारण अनुमति लिन सजिलो हुन्छ भनेर प्रस्ताव गर्नु हुने गाविस अध्यक्ष यमप्रसाद पाण्डे र मदनपोखराबाटै निर्वाचित भएर जिल्ला विकास समितिको सभापति हुनुभएका झपेन्द्र जीसीले धेरै पाल्पालीको कुरा सुन्नु परेको थियो । "मदनपोखरा नामले रेडियो सुन्ने श्रोतालाई केही फरक पार्ने त

होइन तर अरु गाविसका मान्छेहरूसँग रकम माग गऱ्यो भने मदनपोखरा गाविसको रेडियोलाई किन सहयोग गर्ने भन्ने कुरा आए ।" नामले स्टेसनबाट प्रसारण हुने कार्यक्रमलाई केही फरक पर्दैन भन्ने कुरा समुदायले बल्ल-बल्ल बुझ्न थालेको यमप्रसाद बताउनुहुन्छ ।

सरकारले सामुदायिक र व्यापारिक वा स्थानीय रेडियोलाई स्पष्ट तरिकाले परिभाषित गरेको छैन । कस्तो स्टेसनलाई सामुदायिक रेडियो भन्ने र अनुमति लिँदाका बखत प्रसारण अनुमतिपत्रमा कार्यक्रमका बारेमा केही पनि उल्लेख नगरिएका कारण स्टेसनहरूले स्थानीय आवश्यकताअनुसार कार्यक्रम सञ्चालन गर्दै आएका छन् । कुन ठाउँमा कतिवटा रेडियो स्टेसनका लागि अनुमति दिने भन्ने कुरा पनि निश्चित छैन । २०६० सालमा सूर्यबहादुर थापाको मन्त्रिपरिषद्ले एकैपटक धेरै रेडियो स्टेसनलाई प्रसारण अनुमति दिएपछि एकै ठाउँमा दुईवटासम्म सामुदायिक रेडियो स्थापना हुने तयारी भइरहेको छ । यो सँगै प्रसारण अनुमति पाएका व्यापारिक रेडियोसँगको प्रतिस्पर्धा त अर्को चुनौती छँदैछ । पाल्पा जिल्लामा मात्रै दुईवटा व्यापारिक स्टेसन थपिएका छन् भने मुक्तिनाथ एफएम, रेडियो मदनपोखरा जस्तै समान उद्देश्य राखेर खोलिएको छ, तर यसको प्रसारण अनुमतिपत्र गाविसको नाममा नभई सहकारीको नाममा छ ।

जनमुखी र जनसेवी भइयो भने सामुदायिक रेडियो समुदायमा टिक्न कुनै अप्ठेरो छैन भन्ने भावनामा सञ्चालित रेडियो मदनपोखराका पदाधिकारीलाई अहिलेको सबैभन्दा ठूलो चुनौती नै पाल्पामा सुरु हुने तयारीमा जुटेका ३ वटा नयाँ स्टेसनसँगको प्रतिस्पर्धा हो । सामुदायिक, सहकारी र व्यापारिक स्टेसनका बीच फरक छुट्ट्याउने काम श्रोताको हो भन्नुहुने सञ्चालक समितिका अध्यक्ष यमप्रसाद पाण्डे एउटै रेडियो सञ्चालन हुन गाऱ्हो भइरहेको अवस्थामा पाल्पामा ४-४ वटा स्टेसन सञ्चालनका लागि अनुमति दिनु अनौठो मान्नुहुन्छ । "अब हामीले काममा प्रतिस्पर्धा गर्नुपर्छ । रेडियोका कार्यक्रमलाई प्रभावकारी बनाउनुपर्छ । नयाँ परिवेशमा बाँच्न सिक्दै जानुपऱ्यो । नयाँ स्टेसन खुले भन्दैमा हामी वर्वाद हुने भन्ने कुरै छैन ।" श्रोताले रेडियो मदनपोखराबाहेक अरु रेडियोमा मेरो लगानी छैन त्यसैले मेरो समर्थन छैन भन्छन् भन्ने कुरामा यमप्रसाद पाण्डे ढुक्क हुनुहुन्छ । यी वृहत चुनौतीहरूबाहेक रेडियो मदनपोखराका प्राविधिक, कार्यक्रम र विविध संस्थागत चुनौतीहरू छन् ।

### *७.१ प्राविधिक चुनौती र व्यवधानः*

रेडियो मदनपोखराका लागि प्राविधिक सीप बाहिरबाट आएका विज्ञहरूले सिकाएका हुन् । प्रविधिगत हिसाबले यो रेडियो निकै पछाडि छ । कार्यक्रम उत्पादन प्रसारणका लागि स्टेसनसँग एक सेटमात्रै प्राविधिक उपकरण छ । भएका सामान पुराना भइसकेका छन् । जगेडा ट्रान्समिटर र स्टुडियोका उपकरण खरिद गर्नु स्टेसनका लागि चुनौती हो । स्टेसनले रेडियो प्रसारणका क्षेत्रमा आएका पछिल्ला आधुनिक उपकरणहरू जडान गरेर धनी र गरिबबीचको खाडल पुर्न बाँकी नै छ । सँगसँगै कार्यक्रम उत्पादन गर्न र स्वयंसेवकहरूका लागि काम गर्न वैकल्पिक स्टुडियोको आवश्यकता स्टेसनलाई छ ।

स्टेसनले हालसालै ३ किलोमिटरको बाटोमा आफैंले २ लाख रुपैयाँ खर्च गरी तार तानेर एक लाइन टेलिफोन पाएको छ । स्टेसनलाई अझै बढी सहभागीमूलक बनाउन र सूचनाहरू तत्कालै श्रोताका माझमा पुऱ्याउनका लागि टेलिफोन सबैभन्दा सस्तो र सजिलो माध्यम हो । स्टेसनका लागि थप प्राविधिक चुनौती भनेको रेडियोका लागि

थप २ वा ३ वटा टेलिफोन लाइन लिनुपर्ने छ । सँगसँगै इमेल इन्टरनेट चलाउनका लागि पनि वैकल्पिक टेलिफोनको आवश्यकता स्टेसनलाई छ । अडियो टावरबाट आफ्नो सञ्चार इतिहासको थालनी गरेको रेडियो मदनपोखराले अब इमेल इन्टरनेट पनि चलाउन थाल्नुपर्छ ।

स्टेसनलाई बढी समुदायमुखी बनाउन खोजिएको छ । तर स्टेसनसँग पर्याप्त फिल्ड रेकर्डरहरू छैनन् । अहिले स्टेसनमा उपलब्ध उपकरणहरू पुराना भइसकेका छन् भने गुणस्तरीय पनि छैनन् । स्टेसनका लागि अहिलेको चुनौती भनेको रेडियोमा कार्यरत सबै रेडियोकर्मीहरूलाई एक-एक रेकर्डर उपलब्ध गराउनु हो । अलि महत्वाकांक्षी योजना भए पनि अहिले रेडियोले लक्षित क्षेत्र भनेर काम गरिरहेका २३ वटै गाविसमा एक-एक रेकर्डर दिएर चलाउन सिकाउने हो भने रेडियो मदनपोखराले अझ धेरै समुदायका स्वरहरू प्रसारण गर्न सक्ने छ ।

स्टेसनमा पर्याप्त कम्प्युटर र कम्प्युटरमा काम गर्ने तालिमप्राप्त दक्ष जनशक्ति स्टेसनसँग भए पनि अहिलेसम्म डिजिटल प्रविधि स्टेसनमा प्रवेश गराइएको छैन । तर अहिले स्टेसनमै भएका केही प्रविधिको प्रयोग गरेर कार्यक्रम उत्पादन गर्ने हो भने पनि रेडियो मदनपोखराको कार्यक्रमहरूको प्राविधिक गुणस्तर राम्रो हुने थियो । रेडियोबाट प्रसारण हुने कार्यक्रम, विज्ञापन र सन्देशहरूको गुणस्तरमा सुधार नल्याउने हो भने अरु स्टेसनसँग प्रतिस्पर्धा गर्न अप्ठेरो हुने छ ।

### ७.२ *कार्यक्रम चुनौती र व्यवधान*

रेडियो मदनपोखरा अहिले दैनिक सवा १२ घन्टा प्रसारणमा छ । रेडियोले हालैमात्र दिउँसोको ३ घन्टा प्रसारण सुरु गरेको हो । अब आउने नयाँ व्यापारिक स्टेसनहरूले दिनभरि नै प्रसारण गर्ने छन् । सुरु-सुरुमा यी स्टेसनहरूले प्रसारण गर्ने कार्यक्रमसँग रेडियो मदनपोखराले प्रतिस्पर्धा गर्नुपर्ने छ । यसका लागि स्टेसनमा कार्यरत जनशक्तिले आफ्नो दक्षता र क्षमता वृद्धि गर्नुपर्छ । कार्यक्रमलाई अझ प्रभावकारी बनाउनुपर्छ । प्रतिस्पर्धासँग नडराई जित्नका लागि प्रयत्नशील रहनुपर्छ । प्रतिस्पर्धासँग लड्न चाहिने हतियार भनेको दक्षता र सीप हो । यसका लागि स्टेसनले नियमित तालिमको आयोजना गर्नु आवश्यक छ । तालिमको योजना गर्दा रेडियोका प्रतिनिधि र सम्पर्क व्यक्तिहरूमा पनि सामुदायिक रेडियोको अवधारणा र कार्यक्रम उत्पादनसम्बन्धी सीप विकास गर्दै लानु जरुरी छ ।

स्टेसनमा तलबी र स्वयंसेवी हिसाबले कार्यरत जनशक्तिलाई आफ्नो स्टेसनप्रति बफादार र दीर्घकालसम्म काम गर्ने वातावरण तयार पार्नु स्टेसनका लागि तत्कालको चुनौती हो । ३ वटा नयाँ स्टेसनका लागि आवश्यक जनशक्ति पाल्पाबाटै पूरा गर्नुपर्ने अवस्था भएकाले जनशक्तिको चोरी हुने सम्भावना त छँदैछ ।

अरु स्टेसनसँग प्रतिस्पर्धामा जानका लागि रेडियो मदनपोखरासँग पर्याप्त गीतसँगीतको संकलन छैन । तर यो अभावलाई स्टेसनले सम्बोधन गर्न सकेको छैन । बजारमा उपलब्ध नयाँ र पुराना गीत संकलन गरेर स्टेसनको संगीत लाइब्रेरी भरिभराउ पार्नु पनि स्टेसनलाई भनेजस्तो सजिलो छैन ।

### ७.३ *संस्थागत चुनौती*

अहिलेको अवस्थामा रेडियो मदनपोखराका लागि संस्थागत चुनौती भनेको रेडियोसम्बन्धी सरकारी नीति र रवैया हो । सरकारले रेडियो स्टेसनलाई स्वीकृति दिँदा व्यापारिक वा सामुदायिक भनेर छुट्याउने गरेको छैन ।

सामुदायिक रेडियोलाई परिभाषित गरेर यसलाई सहयोगी भावनाले नहेरेसम्म हरहिसाबले व्यापारिक स्टेसनसँग प्रतिस्पर्धामा रहनुपर्ने बाध्यता सामुदायिक रेडियो स्टेसनलाई रहिरहन्छ ।

विज्ञापन नीतिको अभावका कारण स्टेसन आफैंले के बजाउने र के नबजाउने भन्ने विषयमा स्वनिर्णय गरिरहेको अवस्था छ । रेडियो मदनपोखराले विज्ञापन प्रसारण गर्दैन, नाफा खोज्दैन भन्ने अहिलेको पहिचानका आधारमा विभिन्न संघ-संस्थाबाट सहयोग पाइरहेको छ । यही स्थितिमा आफ्नो अडान राखिरहनु पनि स्टेसनका लागि चुनौती हो । सरकारलाई दबाब दिएर सामुदायिक रेडियो स्टेसनहरूले भन्सार सुविधामा उपकरण खरिद गर्न पाउने व्यवस्था मिलाउनुपर्छ । त्यसैगरी ट्रान्समिटरमा तिर्नुपर्ने वार्षिक रोयल्टी सरकारबाट मिनाहा गराउनेतर्फ कदम चाल्नुपर्छ । यसका लागि सबै सामुदायिक रेडियोको सामूहिक प्रयास हुनु जरुरी छ ।

राजनीतिक निकायको स्वामित्वमा सञ्चालित रेडियो मदनपोखराका लागि सबैभन्दा ठूलो संस्थागत चुनौती भनेको राजनीतिक प्रतिबद्धता नै हो । निर्वाचित जनप्रतिनिधि नभएको अवस्थामा पुरानै प्रतिनिधिले हेर्ने र त्यस्तै अवस्थामा गाउँले तोकेको व्यक्ति अध्यक्ष हुने व्यवस्था अहिले रेडियोको विधानमा गरिएको छ । रेडियोका हरेक नीति गाउँ परिषद्ले अनुमोदन गर्नुपर्छ । अहिलेसम्म यो स्टेसन समझदारीमा चलेको छ । निर्वाचित जनप्रतिनिधिहरूको अभावमा पनि बिनाहस्तक्षेप रेडियो सञ्चालन भइरहेको छ । यसको कानुनी स्वामित्व गाविसको हातमा भए पनि त्योभन्दा माथि उठेर रेडियोका बारेमा सोच्ने वातावरण बनाइराख्नुपर्ने अवस्था छ । यदि यस्तो सोचिएन भने रेडियो बिग्रन्छ । रेडियो बन्द हुनु मदनपोखरेलीको मात्रै घाटा होइन ।

रेडियो स्टेसन कार्यक्रम, व्यवस्थापन, लगानी र आम्दानीका हिसाबले पारदर्शी हुनुपर्छ । आन्तरिक र बाह्य लेखापरीक्षण गराएर, सबैका लागि यो सार्वजनिक गरिदिनुपर्छ, चाहे ती व्यक्ति स्टेसन व्यवस्थापनसँग प्रत्यक्ष रूपमा संलग्न हुन् वा अप्रत्यक्ष हिसाबले ।

सबै कुरा एकैचोटि हुन नसक्ने हुनाले निराशाजनक कुरा गरे यो रेडियो चल्दैन भन्ने कुरा स्टेसनका सञ्चालक र समुदायले पनि बुझेका छन् । रेडियोको महत्त्वलाई बुझ्दै गएपछि परिवर्तन पनि सँगसँगै आउँदोरहेछ भन्ने अनुभव मदनपोखरेलीसँग छ । रेडियो स्टेसन परिवर्तनशील हुनुपर्छ र नेतृत्वमा रहेकाले नयाँ पिँढीका लागि ठाउँ बनाइदिनुपर्छ । नभए कार्यक्रम निर्माणमा सीमित सीप यत्तिकै सेलाएर जानेछ । ५ वर्ष स्टेसन म्यानेजरका रुपमा काम गरेको र रेडियो स्थापनाका लागि आफूले गरेको मेहनत सम्झँदै गुणाकर अर्याल आजकाल सामुदायिक रेडियो जनताले नै चलाउनुपर्ने रहेछ भन्ने निष्कर्षमा पुग्नुभएको छ । उहाँको अनुभव छ, “समुदायसँग पहुँच छ भने रेडियो सञ्चालन गर्न अप्ठेरो रहेनछ । यसका लागि रेडियो सञ्चालनपूर्व नै त्यस क्षेत्रमा रेडियोको आवश्यकता छ कि छैन भन्ने बुझ्नु जरुरी रहेछ ।”

# सामुदायिक सहभागितामा रेडियोको आफ्नै भवन

गुरुप्रसाद भट्टराई

हाम्रो समाजमा अझै पनि सप्ताह, यज्ञ आदिमा उपासना गरी श्रीमद्‌भागवत सुने पुण्य कमाइन्छ र धर्म हुन्छ भन्ने विश्वास गर्नेहरू धेरै छन् । महायज्ञ गरेर धर्म पनि कमाउने र गाउँको विकासका निम्ति आर्थिक स्रोत जुटाउने मदनपोखरामा हाम्रो सामूहिक अभियान बनिसकेको थियो । हामीले ४० सालदेखि अहिलेसम्म ५ वटा यस्ता यज्ञ गरिसकेका छौं ।

कुरा २०५७ सालको हो । म द्वारकाधामबाट फर्कंदै थिएँ । रेलको डिब्बामा बसेर सोच्दै थिएँ, फर्केपछि पहिलेजस्तै एउटा सामूहिक महायज्ञ आयोजना गर्नु पर्ला । मलाई विचार आयो यसपटकको महायज्ञबाट उठेको रकम किन रेडियोका लागि समपर्ण नगर्ने ? सामुदायिक भावनाबाट खुलेको रेडियो मदनपोखराको आफ्नै भवन बनाउन सामूहिक महायज्ञ सञ्चालन गर्ने निधो गर्दै म गाउँ आइपुगें ।

चारधामबाट फर्केको भोलिपल्टै निवर्तमान गाविस अध्यक्ष यमप्रसाद पाण्डेलाई भेटेर "ए पाण्डेबाबु मैले रेडियोका लागि भवन बनाउन महायज्ञ गर्ने कल्पेर आएको छु । कि गाविसले सहयोग गर्नु पर्‍यो हामी आयोजना गर्छौं नभए तपाईहरू आयोजना गर्नुहोस् हामी सहयोग गर्छौं," भनें । गाउँ विकास समितिको कार्यालयमा सरसल्लाह भयो । महायज्ञबाट उठेको रकम रेडियो मदनपोखराको आफ्नै स्टेसन भवन निर्माण गर्न खर्च गर्ने निधो भयो । त्यसपछि तुरुन्तै महायज्ञ सञ्चालनका लागि ४०१ सदस्यीय मूलसमिति पनि गठन गरियो ।

महायज्ञका लागि वक्ताको खोजी हुन थाल्यो । महिला पुरुष बराबर हौं भन्ने जमानामा हामीले निधो गर्‍यौं यज्ञका लागि महिला वाचक नै खोज्ने । खोजी गर्दै जाँदा हामीले शान्ति सुवेदीलाई फेला पार्‍यौं । उहाँ पनि रेडियो स्टेसनलाई सहयोग गर्न यज्ञ आयोजना गरिएको थाहा पाएर उत्साहित हुनुभयो ।

संकटकालका बेलामा पनि निकै रमाइलो वातावरणमा महायज्ञ सम्पन्न भयो । यज्ञमा आएका भक्तजनहरूलाई साँझ प्रसाद बाँडिन्थ्यो । सबै जातजाति, उत्पीडित, कर्मचारी, महिला-पुरुष सबैको सहभागिता राम्रैसँग भयो । सबैले आ-आफ्नो गच्छेअनुसार सहयोग गरे । हामीले २० रुपैयाँसम्म दिनेलाई रसिद दियौं । महायज्ञको सात दिनमा हामीले सबै खर्च कटाएर झन्डै साढे दुई लाख रुपैयाँ बचायौं । पहिलाको यज्ञबाट बचेको ६३ हजारसमेत गरेर करिब ३ लाख रुपैयाँ रेडियोलाई हस्तान्तरण गर्‍यौं ।

हामी मदनपोखराका बूढाहरूले पारदर्शी तरिकाले यो काम गरेका हौं । रेडियोलाई समुदायले नै हुर्काउने हो र चिरकालसम्म चलाउने हो । हामीले महायज्ञ सञ्चालन गरी रेडियोलाई सहयोग गरेर नयाँ पुस्ताहरूलाई बाटो देखाइदिएका हौं । हामीले गरेपछि रेडियोलाई अप्ठ्यारो परेका बेला पछिका पुस्ताले पनि गर्नुपर्छ ।

# मुष्ठीदान

पहिला-पहिलाका धेरै मान्छेहरू संयुक्त परिवारमा बस्थे । ८-१० जनाको परिवारलाई दैनिक एक छाकमा कम्तीमा पनि ३ माना अन्न पाक्थ्यो । यही अन्नको भागबाट बेला-बेलामा घरमा भिक्षा माग्न आउनेलाई दिन बिहानको एक छाकको एक मुठी छुट्टाएर राखिन्थ्यो । यस्तो चलन नेपालीहरूको पुरानो चलन हो । दिनदिनै एकएक मुठीका दरले जम्मा भएको अन्न जोगी आएर एकमुष्ठ लान्थे । अन्नको डालीबाट दैनिक एक मुठी निकाल्दा कसैको पनि पेट काटिदैनथ्यो । जोगीले पनि आएर आफ्नो भागको अन्न ढुक्कसँग लिएर जान पाउँथे । दैनिक एक मुठीको बचतले १० दिनमा एकजनाका लागि पूरा दिनको छाक तयार हुन्थ्यो । यस्तो पुरानो चलनलाई मुष्ठीदान भनिन्छ । यस्तै दान गर्ने पुरानो चलनलाई पुनरावृत्ति गरेर रेडियोलाई टिकाउनका लागि मुष्ठीदान गरेर रेडियो मदनपोखराका लागि आर्थिक स्रोत जुटाउन थालिएको छ ।

समुदायबाट जम्मा भएको अन्न संकलन गर्न, बिक्री गर्न निकै ठूलो प्रशासनिक झन्झट ब्यहोर्नुपर्ने हुन्छ । रेडियोभन्दा अगाडि पनि विद्यालय सञ्चालन गर्न मुष्ठीदान संकलन गर्दा भोगेको अनुभवलाई पनि समेटेर अन्न दानलाई रकममा परिवर्तन गरिएको छ ।

अहिले मदनपोखरा गाविससमेत रेडियो मदनपोखरा राम्रोसँग सुनिने गाविसहरूमा एक वर्षका लागि दैनिक २ दुई रुपैयाँ, एक रुपैयाँ, पचास पैसा, पच्चीस पैसा दिन्छु भन्ने व्यक्तिहरू सयौं छन् । यो रकम लक्षित गाविसमा भएका रेडियो समिति, उपसमिति, रेडियो प्रतिनिधिहरूले संकलन गरेर रेडियो स्टेसनमा पठाउने गरेका छन् । आफू रहुन्जेल आफूले र आफ्नो शेषपछि शाखा-सन्तान छोरानातिले दिन्छन् भन्ने विश्वास धेरैमा छ ।

मदनपोखरा सामुदायको रेडियो भएका नाताले यसको निरन्तरता समुदायकै लगानीमा छ । मुष्ठीदानले निरन्तरता पाइराख्यो भने हरेक महिना २१ वटा गाविसबाट उठाउन सकिने लाखौं रुपैयाँ रेडियो मदनपोखराका लागि मुख्य आम्दानीको स्रोत बन्ने छ । कार्यक्रम सुनिदिनेबाहेक रेडियोका श्रोता र लगानीमा पनि प्रत्यक्ष सहभागी भइदिए भने यो स्टेसन दिगो हुन्छ भन्ने कुरामा मदनपोखरेली विश्वस्त छन् ।

# सामुदायिक रेडियो मदनपोखरा सांगठनिक स्वरूप



# सामुदायिक रेडियो मदनपोखरा १०६.९

## साप्ताहिक कार्यक्रम एक झलक

### प्रभातकालीन प्रसारण तालिका

**आइतबार**

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | पाका पुस्ता | गाउँ ठाउँका खवर | छिनोफानो | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

**सोमबार**

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | उत्पीडित आवाज | राष्ट्रिय गीत | आलोपालो | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

**मंगलबार**

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | संचो विसंचो | राष्ट्रिय गीत | अपांग सचेतना | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

### वुधबार

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | महिला संचार | राष्ट्रिय गीत | आवाज | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

### विहिबार

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | साहित्य प्रतिभा | राष्ट्रिय गीत | आधुनिक गीत | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

### शुक्रबार

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | आफ्नै पौरख आफ्नै गौरब | राष्ट्रिय गीत | सहअस्तित्व | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

### शनिबार

| ५:३० | ५:३५ | ६:०० | ६:४० | ६:४५ | ७:०० | ७:२० | ७:३० | ७:४५ | ८:०० | ८:४५ | ९:०० | ९.१५-१० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | धार्मिक कार्यक्रम | कायाकैरन | सिर्जनात्मक अभिव्यक्ति, सेरोफेरोमा आज | स्थानीय गतिवि | समाचार | राष्ट्रिय गित | महिला संसार | राष्ट्रिय गीत | संगालो | गन्थन | स्थानीय गतिविधि | साइतको वेला |

# दिवाकालीन प्रसारणा तालिका

**आइतबार**

| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | नेपाल खबर | लोक थुङगा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

**सोमबार**

| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | नेपाल खबर | लोक थुङगा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

**मंगलबार**

| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | नेपाल खबर | लोक थुङगा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

**वुधबार**

| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
|---|---|---|---|---|---|---|---|---|
| आरम्भ | नेपाल खबर | लोक थुङगा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

## बिहिबार

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
| आरम्भ | नेपाल खबर | लोक थुङ्गा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

## शुक्रबार

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
| आरम्भ | नेपाल खबर | लोक थुङ्गा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

## शनिबार

| | | | | | | | | |
|---|---|---|---|---|---|---|---|---|
| ११:५५ | १२:०० | १२:१५ | १:०० | १:३० | २:०० | २:३० | ३:०० | ३:१५ |
| आरम्भ | नेपाल खबर | लोक थुङ्गा | सदावहार आधुनिक गीत | स्थानीय कलाकारका गीत | नयाँ पुस्ताका गीत | अनुरोध चलचित्रका गीत | नेपाल खबर | प्रसारण समाप्त |

# सार्यकालीन प्रसारण तालिका

## आइतबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | कानुङलाम | लोक भाका | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | आधुनिक गीत | नेपाल दर्पण | जीवनको गोरेटोमा | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## सोमबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | लोक भाका | लोक भाका | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | असल शासन | नेपाल दर्पण | अनुरोधका अंजुली | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## मंगलबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | कुरा खस्रा मिठा | नानीको बोली | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | आधुनिक गीत | नेपाल दर्पण | सिर्जना संगित | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## वुधबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | खोज खबर | बाल फरलवारी | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | स्वस्थय जीवनका लागि खानेपानी र सफाई | नेपाल दर्पण | जीवनको गोरेटोमा | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## विहबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | कुरा खस्रा मिठा | बाल फुलवारी | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | दिगो विकास/सुशासन | नेपाल दर्पण | सिर्जना संगीत | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## शुक्रबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | खोज खबर | लोक भाका | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | वादविवाद/हाम्रो वन | नेपाल दर्पण | अनुरोधका अंजुली | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## शनिबार

| ५:०० | ५:०५ | ५:३० | ६:०० | ६:३० | ६:४५ | ७:०० | ७:२० | ८:०० | ८:३० | ९:०० | ९:१५ | ९:३० |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| आरम्भ लोक | परिवेश बोल्छ | लोक जुहारी | बाल फुलवारी | स्थानीय गतिवि | माडिको पाहुर | समाचार | आधुनिक गीत | नेपाल दर्पण | आस्थाका गीत | पत्रिकाको कुरा | स्थानीय गतिविधि | प्रसारण समाप्त |

## १. ऐतिहासिक पृष्ठभूमि

पोखरा उपत्यका राजधानी काठमाडौं सहरबाट जम्मा २०० सय किलोमिटर टाढा पर्छ । समुद्री सतहबाट ९ सय मिटर अग्लो स्थानमा रहेको यो उपत्यकाको सेरोफेरोमा लगभग डेढ लाख जनसंख्या प्राकृतिक वातावरणमा रमाइरहेका छन् । धवलागिरी, अन्नपूर्ण र माछापुच्छ्रे त्यसैगरी फेवा, रुपा अनि बेगनास तालमा पर्ने यी हिमचुलीहरूको छायाँले वर्षेनी हजारौं स्वदेशी तथा विदेशी पर्यटकलाई आकर्षित गर्ने गरेको छ ।

सन् १९६० को अन्त्यतिर सडकले पोखरालाई काठमाडौं र सुनौलीसँग जोडेपछि यो सहर क्षेत्रीय सदरमुकामका रूपमा विकास हुन थाल्यो । छोटो समयमा स्कुल, अस्पताल बने, सरकारी भवनहरू निर्माण भए, आवादी बढ्न थाल्यो र हवाई सुविधा पनि पुग्यो । लगभग २० वर्षअगाडि पोखरा-बाग्लुङ सडक निर्माण भएपछि सुषुप्त व्यापारिक केन्द्रका रूपमा रहेको पोखरा पर्यटकीय सहरमा परिणत भयो । राजधानी सहरसँगको द्रुत सम्पर्क, लाहुरे संस्कृति र पश्चिमाहरूको संगतले पोखरालाई अरु सहरहरूको दाँजोमा धेरै छिटो आधुनिकीकरणतर्फ लगेको हो ।

यसैताका जापान सरकारको सहयोगमा ५ विकास क्षेत्रमा रेडियो नेपालको क्षेत्रीय प्रसारण केन्द्रहरू खुले । पोखरामा पनि रेडियो नेपाल मिडियम वेभको पचासौं मिटर अग्लो एन्टेना ठडियो । सर्टवेभमा सुन्नुपर्ने रेडियो नेपालको सिग्नल त्यसपछि स्पष्ट सुनिन थाल्यो । आँगनमै स्थापना भएको रेडियोले घरआँगनकै कुरा गर्छ भन्ने धेरैलाई लागेको थियो । तर दैनिक २ घन्टा सञ्चालन हुने क्षेत्रीय कार्यक्रममा पनि क्षेत्रीय सूचना, समाचार र आवाजहरू समेटिनुको सट्टा मनोरञ्जनले प्रश्रय पायो ।

२०५० सालपछि बजारमा छाएका पत्रिकाहरूको एउटा प्रमुख बजार भनेको पोखरा उपत्यका पनि थियो । काठमाडौंमा छापिएका हरेक दैनिक पत्रिकाहरू बिहान ९ बजेसम्म पोखरा पुगिसक्थे । विदेशी टेलिभिजन च्यानलहरू सहरका घर-घरमा पुग्न थालेका थिए । तर पोखराकै बारेमा कुरा गर्ने विद्युतीय सञ्चारमाध्यमको प्रवेश हुन २०५७ साल नै कुर्नुपऱ्यो । निजी र सामुदायिक हिसाबले फैलिरहेको एफएम स्टेसनहरूको सञ्जाल पोखरा आइपुग्दा निकै ठूलो भयो । त्यतिखेर पोखरामा लगभग एकै समयमा ५ वटा एफएम स्टेसनले लाइसेन्स पाए- माछापुच्छ्रे, पोखरा, पश्चिमाञ्चल, अन्नपूर्ण र हिमचुली एफएम स्टेसन । पश्चिमाञ्चल एफएमले अनुमति लिएर पनि प्रसारण गर्न सकेन । अरु ४ वटा स्टेसन एकअर्काका प्रतिस्पर्धी बनेर तँछाडमछाड गरिरहेका छन् । तर यो प्रतिस्पर्धामा एउटैमात्र सामुदायिक रेडियो छ, हिमचुली एफएम ।

सामुदायिक रेडियोको अवधारणाअनुरुप पोखरा एफएम बहुउद्देश्यीय सहकारी संस्थाद्वारा सञ्चालित हिमचुली एफएमले मंसिर २०५७ सालमा प्रसारण अनुमति पाएको हो । रेडियो खोल्ने उद्देश्य राखेर सहकारी संस्था दर्ता गरे पनि रेडियो स्टेसन सञ्चालनका लागि आवश्यक कानुनी ज्ञान कसैलाई थिएन । त्यतिबेलाको कुरा सम्झँदै संस्थापक अध्यक्ष लेखबहादुर गुरुङ भन्नुहुन्छ, “आवेदन कसरी दिने हो, अनुमति लिनका लागि पुऱ्याउनुपर्ने प्रक्रिया के हो हामीमध्ये कसैलाई थाहा थिएन ।” रेडियो स्टेसनको अनुमति प्रक्रिया पुऱ्याउनका लागि काठमाडौंका एकजना सञ्चारविज्ञको सहयोग लिइएको थियो । तर संस्थापकमध्येका एक शेरबहादुर गुरुङको गुनासो छ “हाम्रो अनभिज्ञताको फाइदा उठाइयो ।” त्यसै कारण एफएम प्रसारण गर्न अनुमति पाउने हिमचुली पहिलो स्टेसन भए पनि प्रसारणमा चाहिँ माछापुच्छ्रे एफएमले उछिन्यो ।” यो कुराले पोखरामा सञ्चालित सबै एफएम स्टेसनहरूमा कुनै न कुनै रूपमा पहिलो हुने प्रतिस्पर्धा चलिरहेको भान हुन्छ ।

सहकारी नियमअनुसार संस्था खोल्नका लागि २५ जना सदस्यहरू आवश्यक पर्छ । सुरुमा लेखबहादुर गुरुङ र उत्तम रेग्मी बसेर कस्तो प्रकृतिको रेडियो स्टेसन खोल्ने, के कसरी गर्ने भन्ने सामान्य खाका तयार पारिएको थियो । भावनात्मक सम्बन्ध भएका साथीभाइहरूसँग सैद्धान्तिक सहमति भएपछि हिमचुली एफएमको अवधारणा आएको हो । यस्तो स्टेसनमा को-को सहयात्री हुन सक्छन् भनेर व्यक्तिहरूको नामावली तयार पार्न थालियो । र, ती व्यक्तिहरूसँग कुराकानी थालियो । १० हजारदेखि ५० हजार रुपैयाँका शेयर किन्न सक्ने २५ जना पोखरेली भेला भएपछि पोखरा एफएम बहुउद्देश्य सहकारी संस्था लिमिटेड दर्ता भयो । समूहमा डाक्टर, इन्जिनियर, शिक्षक, व्यापारी, पत्रकार र समाजसेवी सबै समाजका सबै पक्षलाई समेट्ने कोसिस गरिएको थियो । "हामी सबैसँग उत्साह र जाँगर त थियो तर रेडियोसम्बन्धी ज्ञान थिएन," यो लेखबहादुर गुरुङको स्वीकारोक्ति हो ।

आवेदन दिएको एक वर्षपछि मात्रै पोखरा एफएम बहुउद्देश्य सहकारी संस्था लिमिटेडले प्रसारण अनुमति पाएको हो । तर अर्कै नाममा । पोखरा एफएमको नाममा अर्को व्यापारिक संस्थालाई लाइसेन्स वितरण भइसकेको हुनाले पोखरा एफएम बहुउद्देश्य सहकारी संस्थालाई सञ्चार मन्त्रालयले कल साइन परिवर्तन गर्न लगायो । नामै परिवर्तन भएपछि हिमचुलीले पाएको प्रसारण फ्रिक्वेन्सी १०७ मेगाहर्ज खारेज गरेर ९२.२ दिइयो । यहींबाट जन्म भयो हिमचुली एफएमको ।

लाइसेन्स लिने प्रक्रिया, प्राविधिक पाटो, रेडियो स्टेसन सञ्चालनको ज्ञान कसैलाई थिएन । स्टेसन खोल्ने आँट र जाँगर भएपछि सहयोग गर्ने हजार पाइन्छन् भन्ने सोचेर लेखबहादुर गुरुङ, जीवन गुरुङ, उत्तम रेग्मी, पोषनाथ शर्मा र कुशुमकेशव पराजुलीको टोली काठमाडौंतिर लागेको थियो ।

हिमचुलीले प्रसारण अनुमतिबमोजिम एकजना वरिष्ठ प्राविधिकको सल्लाहमा ५०० वाटको ट्रान्समिटर मगाइयो । तर यहाँ पनि लापरबाही नै भयो । दुःख गरेर झिकाएको ट्रान्समिटरको क्षमता त २५० वाट पो परेछ ।

कार्यक्रम प्रमुख कुशुमकेशव पराजुलीलगायत सञ्चालकहरू हिमचुलीको तरंग कुन-कुन ठाउँमा पुगेको छ भनेर हातमा रेडियो सेट लिएर पोखरा डुल्न थाले । "परीक्षण प्रसारण गर्दा हिमचुलीको तरंग हामीले सोचेजति ठाउँमा नपुगेपछि फर्केर आएर प्राविधिकलाई ट्रान्समिटर हेर्न लगाएपछि पो थाहा भयो ५ सय वाट हुनुपर्नेमा २५० वाटको ट्रान्समिटर रहेछ ।" ट्रान्समिटरका कारण हिमचुलीको प्रसारण समय ६ महिना पर धकेलिएको थियो । त्यसमाथि सुरुमै दिएको फ्रिक्वेन्सी एफएम १०७ मन्त्रालयले परिवर्तन गरिदिएपछि प्रसारण सुरु हुन अर्को ५ महिना लाग्यो ।

संस्थापकमध्येका एक शेरबहादुर गुरुङको अनुभव यस्तो छ, "हामीले स्टेसन स्थापनाको दौरानमा सिकेको सबैभन्दा ठूलो कुरा भनेको अरुको खुट्टामा उभिनु हुँदो रहेनछ । आफैं सिकेर अगाडि बढ्नुपर्नेमा सम्पूर्ण कामको जिम्मा अरुलाई लगायौं । पाइला-पाइलामा हाम्रो अनभिज्ञताको फाइदा लुटिएको छ । अरुको भर पर्दा कामको अनुगमन हुँदो रहेनछ । ट्रान्समिटर नवीकरण समयमा नगरेकाले हामीले जरिवानास्वरूप ५० हजार रुपैयाँसमेत तिर्‍यौं । काम गर्दै जाँदा पो थाहा भयो सामुदायिक रेडियो चलाउन त निकै गाह्रो हुँदो रहेछ ।"

हिमचुलीले प्रसारण अनुमति पाएपछि स्टुडियो निर्माण गर्न थालिएको थियो । स्टुडियो निर्माण सकेसम्म कम खर्चमा तयार गर्ने भनेर घरघरबाट पराल ओसारिएको थियो । स्टेसनको टावरसमेत पोखरा इन्जिनियरिङ कलेजको वर्कसपमा तयार भएको थियो ।

हिमचुली एफएमले २०५७ साल चैत २९ गतेदेखि औपचारिक प्रसारण सुरु गरेको हो । पहिलो दिनको परीक्षण प्रसारणका लागि रेडियो नेपालको क्षेत्रीय प्रसारणमा कार्यरत दीपक सिलवाल र पूर्णचन्द्र घिमिरेलाई निम्त्याइएको थियो । दैनिक तीन घन्टाका दरले परीक्षण प्रसारणमा करिब ३ महिना गीत बजाएपछि हिमचुलीले २०५८ साल असार १३ गतेबाट औपचारिक प्रसारण आरम्भ गरेको हो । सुरुमा ११ घन्टाबाट प्रसारण थालिको हिमचुली अहिले बिहान साढे पाँच बजेदेखि राति १० बजेसम्म गरी दैनिक साढे सोह्र घन्टा प्रसारणमा छ ।

## २. अभिप्रेरणा, लक्ष्य र उद्देश्य

### २.१ *अभिप्रेरणा*

पोखरामा त्यतिखेर निजी स्तरबाट रेडियो स्टेसन खुलिसकेका थिएनन् । काठमाडौंबाट जाने पत्रिका, सरकारी स्वामित्वका रेडियो नेपाल र नेपाल टेलिभिजन, स्थानीय रूपमा प्रकाशित सीमित पत्रिकाबाहेक विदेशी टेलिभिजन च्यानलहरूले नै सूचना र मनोरञ्जनको आवश्यकता पूरा गरिरहेका थिए । समाचारका लागि त सरकारी स्वामित्वका रेडियो नेपाल र नेपाल टेलिभिजनमै भर पर्नुपर्थ्यो । तर पोखराको स्थानीय सूचना र समाचार यी माध्यमको प्राथमिकतामा पर्दैनथे । रेडियो नेपालको २ घन्टे क्षेत्रीय प्रसारणले सांगीतिक कार्यक्रममात्रै प्रसारण गर्थ्यो । यस्तो अवस्थामा पोखराका केही बुद्धिजीवीहरूलाई लागेको थियो, देशका अरु ठाउँमा खुलेका रेडियो स्टेसन जस्तै यहाँ पनि हाम्रो आवाज सुनिदिने रेडियो हुनुपर्छ । त्यसपछि सामुदायिक रेडियोले मात्रै त्यस्तो आवश्यकता पूरा गर्न सक्छ भन्ने सहमति बनेको थियो ।

गण्डकी अञ्चल लोक संस्कृतिका हिसाबले निकै धनी क्षेत्र हो । पोखरामा विभिन्न जातजातिको बस्ती छ । यस्तो समुदायमा रेडियोबाट चेतनामूलक कार्यक्रम दिन सक्यो भने सामाजिक परिवर्तन ल्याउन सकिन्छ त्यसैले एउटा सामूहिक रेडियो चाहिन्छ भन्ने भावनाबाट हिमचुलीको जन्म भएको हो ।

### २.२ *लक्ष्य*

संस्थाका विभिन्न व्यक्तिहरूसँग भएको कुराकानीका आधारमा निम्न लक्ष्यका साथ हिमचुली एफएम सञ्चालन गरिएको देखिन्छ ।

- ☐ समुदायमा शिक्षा, सूचना र सञ्चारको आवश्यकता पूरा गराउने र उनीहरूको अभिव्यक्तिको माध्यम बन्ने,
- ☐ सामुदायिक विकास निर्माणका लागि चाहिने सूचना र प्रेरणाको स्रोत बन्ने र
- ☐ बहुलवादी समाजको विकास गर्ने ।

### २.३ *उद्देश्य*

माथि उल्लेखित लक्ष्य पूरा गर्न स्टेसनले विभिन्न उद्देश्य लिएको छ ।

- ☐ स्थानीय कला, लोक संस्कृतिको संरक्षण र प्रचार-प्रसार गर्ने,
- ☐ समाजमा दैनिक हुने विभिन्न गतिविधि र घटनाहरूलाई समाचारका रूपमा प्रसारण गर्ने र सुसूचित हुन सघाउने,

- सामूहिक कामको सुरुवात गर्ने,
- समाजमा रहेको गरिबी, बेरोजगारी, अशिक्षा र सामाजिक भेदभावविरुद्ध चेतना जगाउने,
- समुन्नत, शान्तिपूर्ण समाजको स्थापनामा टेवा पुऱ्याउने,
- स्वास्थ्य, वातावरण, कानुन, बालबालिका, महिला, उत्पीडित र अपांगहरूको अधिकार सुनिश्चित गर्न कार्यक्रम निर्माण गर्ने,
- भाषा साहित्यको विकास गर्ने र
- आध्यात्मिक चिन्तनको थालनी गर्न सहयोग गर्ने ।

## ३. संस्थागत संरचना, कार्यक्रम र जनशक्ति

### ३.१ *संस्थागत संरचना*

सहकारी नियमअनुसार सहकारी संस्था दर्ता गर्न कम्तीमा २५ सदस्य हुनुपर्छ । यही नियमअनुसार दर्ता भएको पोखरा एफएम बहुउद्देश्य सहकारी संस्थाद्वारा सञ्चालित हिमचुली एफएममा २५ जना शेयरधनी छन् । यो नै हिमचुलीको साधारणसभा हो । साधारणसभा वर्षमा एकपटक बस्ने गर्छ । साधारणसभाले वर्षभरिको आयव्यय, कर, राजस्व र स्टेसन सञ्चालनसम्बन्धी नीति-नियम बनाउने र संस्थाका भावी रणनीति तयार गर्ने गर्छ । साधारणसभा संस्थाको सबैभन्दा शक्तिशाली निकाय हो । स्टेसन म्यानेजर रेडियोको कार्यकारी प्रमुख रहने व्यवस्था गरिएको छ । वर्तमान अवस्थामा हिमचुली एफएमको संस्थागत संरचना यस्तो छः

**साधारणसभा**

**सञ्चालक समिति**

**स्टेसन म्यानेजर**

| | | | | |
|---|---|---|---|---|
| | कार्यक्रम संयोजक | बजार व्यवस्थापक | लेखा/प्रशासन | समाचार संयोजक |
| | कार्यक्रम सञ्चालक | सहायक | सहायक | रिपोर्टरहरू |
| प्राविधिक | | | | पाले/पियन स्थानीय संवाददाता |

साधारणसभाले स्टेसन सञ्चालनका लागि ७ सदस्यीय सञ्चालक समिति गठन गरेको छ । सञ्चालक समितिको बैठक महिनामा एकपटक बस्ने गरेको छ । बैठकले कर्मचारीका समस्या समाधान गर्ने र आगामी महिनाको रणनीतिक योजना तयार गर्ने गर्छ ।

### ३.२ *कार्यक्रम*

हिमचुली एफएमले बिहान साढे पाँच बजेदेखि राति १० बजेसम्म गरी दैनिक साढे सोह्र घन्टा प्रसारण गर्ने गरेको छ । कार्यक्रमलाई बिहानी प्रसारण, दिउँसोको प्रसारण र बेलुका गरी ३ भागमा विभाजन गरिएको छ ।

हिमचुलीमा बिहान प्रसारण हुने अधिकांश कार्यक्रम सूचनामूलक हुने गर्छन् । दिउँसोमा मनोरञ्जनात्मक कार्यक्रम प्रसारण गरिन्छ भने बेलुकाका कार्यक्रमहरू सूचनामूलक-मनोरञ्जनात्मक हुने गर्छन् । बिहानी प्रसारणमा अझैसम्म हिन्दी अथवा अंग्रेजी गीत प्रसारण गरिएको छैन । हिमचुली एफएमले विभिन्न आधुनिक, लोक, पुराना, पप गीतमा आधारित सांगीतिक कार्यक्रममा बाहेक अन्तर्वार्तामा आधारित कार्यक्रमहरू पनि प्रसारण गर्ने गरेको छ ।

हिमचुली एफएममा बिहानदेखि बेलुकासम्म प्रसारण हुने कार्यक्रममध्ये उल्लेख गर्नै पर्ने कार्यक्रमहरूका बारेमा तल चर्चा गरिएको छ ।

रेडियो स्टेसन स्थापना भएदेखि नै सञ्चालनमा रहेको एउटा कार्यक्रम "पोखरेली उडान" हो । यो कार्यक्रममा पोखरा क्षेत्रका कलाकारको मात्रै गीत प्रसारण गरिन्छ । पोखरा र गण्डकी क्षेत्रका गायक कलाकारहरूलाई परिचित गराउने यो कार्यक्रम हिमचुली एफएमको प्रचलित दैनिक कार्यक्रम हो ।

हिमचुली एफएमको अर्को आकर्षण भनेको स्थानीय भाषाभाषी र जनजातिका कार्यक्रम हुन् । हरेक बिहान सवा सात बजेदेखि ८ बजेसम्म ४५ मिनेटको समय स्थानीय भाषाभाषी, जनजाति र दलित उत्पीडितहरूका लागि छुट्याइएको छ । र, कार्यक्रमको नाम दिइएको छ, "जनजाति मञ्च" । अहिले कार्यक्रम जनजाति मञ्च गुरुङ, मगर, नेवारहरूले सञ्चालन गर्ने गरेका छन् । दलित उत्पीडितहरूको कार्यक्रम पनि यही समयमा नै सञ्चालन हुँदै आएको छ ।

"मनको व्यथा" विदेसिएका नेपालीका परिवारप्रति लक्षित कार्यक्रम हो । यो विदेशबाट फर्केका, विदेश जान लागेका व्यक्तिका साथै म्यानपावर एजेन्सीहरूलाई लक्षित गरेर तयार पारिएको कार्यक्रम हो । यो कार्यक्रममा श्रम अधिकारीहरू, विदेश गएर फर्केका, विदेश जान लागेकाहरूसँग कुराकानी गर्ने गरिएको छ ।

"नारी गतिविधि" साताभरि पत्रपत्रिकामा छापिएका महिलासँग सम्बन्धित समाचारहरूको कार्यक्रम हो । नारी आवाजमा विभिन्न क्षेत्रमा लागेका महिलाहरूको अन्तर्वार्ता, बालबालिका र युवतीका विभिन्न समस्याहरूका बारेमा छलफल गरिन्छ । गाउँका महिलाहरूको सोचाइमा परिवर्तन ल्याउनु नै यो कार्यक्रमको प्रमुख उद्देश्य हो । कार्यक्रम सञ्चालिका मुना कुँवरको कथन छ "कुटो कोदालो बोक्ने, गोठ र भान्सामा मात्रै सीमित हुने होइन महिलाहरू बाहिरी काम पनि गर्न सक्छन् भन्ने बुझाउनु नै यो कार्यक्रमको लक्ष्य हो ।" २ वर्षदेखि नियमित रूपमा प्रसारण भइरहेको कार्यक्रमको प्रभावको उदाहरण दिँदै मुना कुँवर भन्नुहुन्छ, "जुन परिवर्तन मैले ममा पाएकी छु त्यो परिवर्तन अरु महिलामा पनि अवश्य आएको हुनुपर्छ ।" यो कार्यक्रमको उद्देश्य पनि त्यही हो । म यो स्टेसनमा काम नगरेको भए मेरो ज्ञान, मेरो परिवार र समाजमा मात्रै सीमित हुन्थ्यो, तर यहाँ काम गर्न थालेपछि ज्ञानको भण्डार फैलिएको छ र यो फाइदा दोहोरो छ । मैले पनि सिकेकी छु र अरु महिलाले पनि कार्यक्रमबाट फाइदा पाएका छन् । तर संकुचित समाजमा महिलासम्बन्धी कार्यक्रम सञ्चालन गर्न त्यत्ति सजिलो भने छैन । महिलासँग सम्बन्धित कार्यक्रम सञ्चालन गर्नु नै यति ठूलो समस्या हुँदो रहेछ भने वास्तवमै महिलाले कस्ता समस्या भोगिरहेका छन् भन्ने कुरा कल्पना गर्न पनि गाऱ्हो छ, मुनाको अनुभव छ ।

हिमचुली एफएमबाट दैनिक १० वटा विभिन्न समाचार बुलेटिनहरू प्रसारण हुँदै आएका छन् । स्टेसनका आफ्नै समाचार बुलेटिनहरू बिहानमा पौने छ बजे र नौ बजे, दिउँसो २ बजे र पौने पाँच बजे अनि राति सवा नौ बजे प्रसारण हुन्छन् । यी समाचार बुलेटिनहरू उत्पादन गर्न समाचार विभागमा पूर्णकालीन ९ जना

सञ्चारकर्मी कार्यरत छन् । रेडियो सगरमाथाले तयार गरेको पत्रपत्रिकाको सँगालो पनि हिमचुलीबाट बिहान सवा छ बजे प्रसारण हुन्छ । यसबाहेक स्टेसनबाट रेडियो नेपालको बिहान र साँझको सात बजेको समाचार बुलेटिन पनि प्रसारण हुन्छ । दिउँसो १२ र ३ बजेचाहिँ काठमाडौंमा कम्युनिकेसन कर्नरले उत्पादन गर्ने समाचार पनि प्रसारण हुँदै गरेको छ । यसरी आफैंले उत्पादन गर्ने ५ बुलेटिन र स्टेसन बाहिरका ५ गरी जम्मा जम्मी १० वटा समाचार बुलेटिन हिमचुलीबाट प्रसारण हुँदै आएको छ । हिमचुली एमएमले राति पौने नौ बजे बीबीसी नेपाली सेवाको कार्यक्रम पनि प्रसारण गर्ने गरेको छ ।

### *३.३ जनशक्ति*

हिमचुली एफएमका लागि जनशक्तिको स्रोत भनेकै कास्कीको छिमेकी जिल्लाबाट उच्च अध्ययनका लागि झरेका २०-२२ वर्षे युवाहरू हुन् । स्टेसनमा संलग्न रेडियोकर्मीहरूको अनुहार केलाउँदै जाने हो भने ९० प्रतिशत युवा नै छन् । स्टेसनसँग रहेको ४५ जनाको जनशक्तिमध्ये कार्यक्रम शाखामा १५ जना र समाचार शाखामामा ७ जना पूर्णकालीन रूपमा काम गरिरहेका छन् । बाँकी सबै स्वयंसेवकका रूपमा काम गरिरहेका छन् । स्वयंसेवकहरूले धेरैजसो साप्ताहिक कार्यक्रम सञ्चालन गर्ने गरेका छन् ।

हिमचुली एफएमबाट प्रसारण हुने सबै कार्यक्रम प्रत्यक्ष भएका कारण स्टेसनले कुनै पनि कार्यक्रम पूर्वउत्पादन गरेर प्रसारण गर्ने गरेको छैन । कार्यक्रम उत्पादन गर्नका लागि फिल्ड उपकरण र उत्पादन स्टुडियोको अभावमा पहिले नै रेकर्ड गरेर कार्यक्रमहरू उत्पादन हुने गरेका छैनन् । त्यसैले गीत संगीत, लेख र स्टुडियो अन्तर्वार्तामा आधारित भएर  हिमचुलीले कार्यक्रम प्रसारण गर्ने गरेको छ । रेकर्डेड कार्यक्रम नभएका कारण नै धाराप्रवाह बोल्न सक्ने क्षमतालाई  नै जनशक्ति चयन गर्ने आधार बनाइएको छ ।

हिमचुलीमा कार्यरत ८-१० जना रेडियोकर्मीले काठमाडौंस्थित रेडियो सगरमाथा र वातावरण पत्रकार समूहको सामुदायिक रेडियो सहयोग केन्द्रको सहयोगमा तालिम पाएका छन् । यस्ता तालिमहरूमा भाग लिन अवसर पाउने प्रस्तोताहरूले तालिम लिएपछि अनिवार्य रूपमा स्टेसनका अरुलाई तालिम दिनुपर्ने व्यवस्था गरिएको छ । यसबाहेक स्टेसन आफैंले पनि बेला-बेलामा प्रस्तोताको तालिम आयोजना गर्ने गरेको छ ।

स्टेसन म्यानेजर दिलीप राई भन्नुहुन्छ, “पोखरामा अहिले व्यावसायिक हिसाबले रेडियोसम्बन्धी तालिम दिने केन्द्रहरू खुलेका छन् । तर यस्ता तालिम केन्द्रमा दिइने तालिम प्रस्तुतिमा मात्रै सीमित हुन्छ । यस्ता तालिम केन्द्रबाट उत्पादित जनशक्ति हिमचुलीका लागि उपयुक्त हुँदैनन् ।”

## ४. श्रोता

पोखरा सांस्कृतिक विविधताको धनी थलो हो । यहाँ ब्राम्हण, क्षेत्री, मगर, गुरुङ, नेवार, थकालीहरूको बाहुल्यता छ । यो उपत्यकामा पहिलेदेखि बसोवास गर्ने समुदाय अझै पनि कृषि पेशामै निर्भर छन् । तर गुरुङ, मगर, क्षेत्रीहरूको प्रमुख पेशा भनेको सैनिकमा भर्ती हुने र लाहुरे बन्ने हो । थकालीहरू होटल व्यवसायमा व्यस्त छन् भने नेवारहरू बन्द व्यापारमा लागेका छन् । पोखरा सहर हिमालपारिबाट आएका तिब्बतीयन शरणार्थीदेखि तराईवासीसम्मको बसोबास स्थल हो । हिमचुली एफएमका प्राथमिक श्रोता भनेका पोखरा उपत्यकावासी नै हुन् ।

तर कास्की जिल्लाबाहेक पर्वत, स्याङ्जा, तनहुँ र बाग्लुङमा पनि हिमचुली एफएम सुन्न सकिन्छ । यसका तरंगहरू मकवानपुर, नवलपरासी, भरतपुरसम्म पुग्ने र श्रोताले नियमित कार्यक्रम सुनेर चिठ्ठी पठाउने गरेको अभिलेख स्टेसनमा पाइन्छ ।

भौतिक रूपमा हिमचुली एफएम पोखरा सहरबाटै प्रसारण हुने गरेको छ । स्टेसनले सैद्धान्तिक रूपमा आफ्ना लक्षित श्रोता सहरी क्षेत्रका भएको स्वीकारे पनि अधिकांश कार्यक्रम ग्रामीण श्रोतालाई लक्षित गरेर तयार पार्ने गरिएको छ । “हामी साँगीतिक कार्यक्रममा अरु रेडियोसँग प्रतिस्पर्धा गर्न सक्दैनौं । हाम्रा कार्यक्रम सञ्चालकहरू अधिकांश गाउँघरका नै छन् त्यसैले हाम्रा श्रोता गाउँमा धेरै छन् र सहरमा कम ।” स्टेसन म्यानेजर दिलीप राईको कथन छ । हिमचुली एफएमका कार्यक्रमहरू सहरी र ग्रामीण भेगका श्रोताहरूलाई लक्षित गरेर तयार गरे पनि अधिकांश फोन र चिठ्ठीपत्रहरू गाउँतिरबाट नै आउने गरेको कार्यक्रम प्रस्तोताहरू स्वीकार्छन् । हिमचुलीमा दैनिक २ सयभन्दा बढी चिठ्ठी र त्यसैको हाराहारीमा श्रोताको फोन आउने गरेको दाबी स्टेसनको छ ।

स्टेसनको प्रसारण पहुँच, कार्यक्रमका बारेमा प्रतिक्रिया लिनका लागि नियमित रूपमा स्थलगत सर्वेक्षण स्टेसनले गर्ने गरेको छ । प्रसारणमा संलग्न व्यक्तिहरू कास्की जिल्लाका विभिन्न ठाउँमा गएर श्रोताहरूसँग प्रत्यक्ष भेटघाट गर्ने गरेका छन् । यस्तो सर्वेक्षणले प्रस्तोताहरूको अनुगमन गर्न पनि स्टेसनलाई सजिलो भएको कार्यक्रम संयोजक कमल पराजुली बताउनुहुन्छ ।

हिमचुलीबाट प्रसारण हुने कार्यक्रमका बारेमा नियमित प्रतिक्रिया लिने संयन्त्र तयार गर्न र स्थानीय समाचारको स्रोतका लागि हिमचुली रेडियो श्रोता क्लब गठन गर्न पनि थालिएको छ । अहिलेसम्म कास्की र तनहुँमा गरी हिमचुलीका आधा दर्जन श्रोता क्लब गठन भइसकेका छन् ।

स्टेसनका पदाधिकारीहरूले आफ्नो स्टेसनको परिचय “उमेर नाघेका गम्भीर किसिमका श्रोता भएको रेडियो” भनेर दिने गर्नुभएको छ । स्टेसन म्यानेजर दिलीप राई गत हिउँदको अनुभव यसरी सुनाउनुहुन्छ, “श्रोताको मापदण्ड छैन जस्तो लाग्छ । हालै भएको मिडिया कप फुटबल प्रतियोगितामा अन्नपूर्ण एफएमसँग भएको झगडामा हाम्रा प्रस्तोता कुटिए । खेलाडीलाई कुटेको निहुँमा प्याराफिटमा श्रोता-श्रोताबीच कुटाकुट हुन थाल्यो । त्यतिबेला नै हामीलाई थाहा भयो हामीलाई सहयोग गर्ने र दु:ख पर्दा अगाडि बढ्ने श्रोताको कमी छैन भनेर ।”

## ५. सामुदायिक सहभागिता

सामुदायिक रेडियोमा सहभागितालाई दुई किसिमले हेर्ने गरिन्छ- कार्यक्रम र व्यवस्थापनमा सहभागिता । कार्यक्रम उत्पादन र प्रसारणमा करिब दुई दर्जन स्वयंसेवक कार्यरत भए पनि स्टेसनले उहाँहरूलाई सहभागिताको सिद्धान्तभन्दा आर्थिक स्रोतको अभावमा नि:शुल्क काममा लगाएको देखिन्छ । स्टेसनको भौतिक र आर्थिक अवस्थाका कारण गुणस्तरीय जनशक्ति राख्न पनि सकेको छैन र समुदायलाई सहभागी गराउन पनि सकेको छैन । कार्यक्रममा सहभागी हुन चाहने व्यक्तिले सञ्चालक समितिमा आवेदन दिएपछि प्रस्ताव पेश गर्ने व्यक्तिको क्षमता र कामको मूल्यांकन गरिसकेपछि मात्रै कार्यक्रम सञ्चालन गर्न दिइने गरिएको छ । कार्यक्रमको छनौट गर्दा प्रायोजक लिएर आउने व्यक्तिहरू प्राथमिकतामा पर्ने हुनाले स्टेसनको नीति नै सहभागिताका लागि अड्चन बनेको छ ।

संस्था दर्ता गर्दा समुदायका विभिन्न व्यक्तिहरूलाई समेट्न खोजिएको थियो । स्टेसनको विकाससँगै शेयर थप्दै जाने र समुदायका हरेक क्षेत्रका व्यक्तिहरूलाई स्टेसनको व्यवस्थापनमा सहभागी गराउँदै लगेको भएमात्रै हिमचुलीले सामुदायिक रेडियोको पहिचान पाउन सक्थ्यो । तर यसो हुन सकेको छैन । स्टेसनका सञ्चालक सदस्यहरू सक्रिय हुनुको सट्टा निस्क्रिय हुँदैछन् । त्यसैगरी स्टेसनलाई नियमितजसो परिरहने संकटका बेला अगाडि सर्ने शेयरधनीहरूको संख्या २-४ जनामा सीमित छ ।

स्टेसनले हालै एउटा राम्रो निर्णय गरेको छ- साधारण शेयर थप गर्दै जाने र स्टेसनका लागि विकल्पहरू तयार पार्दै जाने । अहिले व्यक्तिगतबाहेक संस्थागत सदस्यता पनि खुला गरिएको छ । हालै माछापुच्छ्रे सहकारी संस्था हिमचुलीसँग आवद्ध भइसकेको छ भने शेयर संख्या २८ पुगेको छ । तर स्टेसनका लागि एउटा अप्ठ्यारो त छँदैछ- जातिगत संघ-संस्थाहरूको मात्रै अधिक सक्रियताले हिमचुलीको पहिचान सामुदायिक रेडियो भन्दा पनि निश्चित जातजातिका लागि खुलेको रेडियो स्टेसन भनेर परिचित हुन थाल्नु ।

स्टेसनले सामुदायिक सहभागिता बढाउनका लागि सामाजिक सूचना, व्यक्ति हराएका वा भेट्टिएका सूचना निःशुल्क प्रसारण गर्ने गरेको छ । त्यसैगरी बेला-बेलामा पर्ने रगतको संकट र दैवी विपत्तिका बेला सेवामूलक सन्देशहरू निःशुल्क रूपमा प्रसारण गर्ने गरेको छ ।

केही समयअघि स्टेसनले कास्की जिल्लाकै एकजना मुटु रोगी खिमा भुजेलको उपचारका लागि आर्थिक सहयोग गर्न आह्वान गरेर ८० हजार रुपैयाँ जुटाइदिएको थियो ।

## ६. स्टेसनको निरन्तरता

पछिल्लो एक वर्षमा स्टेसन आफैंले घरभाडा, बिजुली, टेलिफोन र तलबलाई चाहिने रकम उठाइरहेको छ । मर्मत-सम्हारका लागि चिन्ता गर्नुपर्दैन । विज्ञापन, कार्यक्रम प्रायोजन र समय बेचेबापत स्टेसनले मासिक ६० हजार उठाइरहेको छ । मासिक एक लाख रुपैयाँमध्ये बाँकी रकम लगानीकर्ताले नै हाल्नुपर्छ । यो रकमबाहेक करिब सवा दुई लाख रुपैयाँ राजस्व सरकारलाई बुझाउनुपर्छ ।

सामुदायिक भएर पनि सामुदायिक पहिचान नहुनु नै हिमचुलीको निरन्तरताका लागि संकट हो । बिहानदेखि बेलुकासम्मका कार्यक्रम सुन्दा लाग्छ व्यापारिक रेडियो स्टेसन सुनिरहेको छु । स्टेसनले कार्यक्रमका हिसाबले र व्यवस्थापनमा सहभागिताका हिसाबले “यो मेरो रेडियो स्टेसन हो” भन्ने आधार तयार गरेको छैन । हिमचुली एफएम के आधारमा सामुदायिक रेडियो हो भन्ने कुरा स्टेसनमा कार्यरत अधिकांश रेडियोकर्मीहरूलाई पनि थाहा छैन ।

पर्यटकीय शहर पोखरा व्यापारिक र सामाजिक हिसाबले धेरै सम्भावना भएको ठाउँ हो । कार्यक्रममा समुदायको चासोका विषयवस्तुहरू समेट्नुपर्छ । समुदायका धेरैभन्दा धेरै व्यक्तिलाई स्टेसनले समेट्नुपर्छ अनि मात्रै हिमचुली एफएम अरु व्यापारिक रेडियो स्टेसनसँग प्रतिस्पर्धा गर्नुपर्दै । स्टेसन स्थापना गरेको ३ वर्षपछि संस्थापक अध्यक्ष लेखबहादुर गुरुङको अनुभव छ, “यहाँ व्यक्ति-व्यक्ति भएरमात्र रेडियो स्टेसन सञ्चालन गर्न सकिँदो रहेनछ । यसो गर्दा सामाजिकभन्दा पनि व्यक्तिगत स्वार्थ बढी हुँदो रहेछ । स्टेसनको स्थायित्व र निरन्तरताका लागि समुदायको सहभागिता अनिवार्य हुनुपर्दो रहेछ भन्ने कुरा त बल्ल बुझ्न थालिएको छ ।” वास्तविक रूपमै सामुदायिक भावनाले सञ्चालन हुने हो भने हिमचुली एफएमका लागि प्रशस्त सम्भावना छन् ।

हिमचुली एफएमको निरन्तरतासँग जोडिएको अर्को प्रश्न हो अहिले भइरहेका बाँकी ३ र निकट भविष्यमै आउनै लागेको इमेज च्यानल एफएमको केन्द्रीय कार्यक्रम । एउटै पोखरीमा माछा मार्न गाऱ्हो हुन्छ । निश्चित ठाउँका लागि कतिवटा रेडियो स्टेसन भन्ने सञ्चार मन्त्रालयको नीति प्रस्ट नभएका कारण हिमचुली एफएममात्रै होइन पोखराका अरु व्यापारिक उद्देश्यले खुलेका स्टेसनलाई पनि ८-१० रुपैयाँ प्रतिमिनेटमा झरेको प्रतिस्पर्धी बजार धान्न धौ धौ छ । यो प्रतिस्पर्धाबाट बच्नका लागि हिमचुलीले दीर्घकालीन रणनीति, लक्ष्य, उद्देश्य र स्टेसनको मिसन सम्पूर्ण पोखरेली समुदायको दिमागमा नपुऱ्याई सुखै छैन ।

सहकारी व्यवस्थापनका आधारमा स्थापना भएका आधारमा मात्रै कुनै पनि रेडियो स्टेसनलाई सामुदायिक भन्न मिल्दैन । समुदायसँग प्रत्यक्ष सहभागी भएर उनीहरूका आवाज प्रसारण गर्ने र स्टेसनका हरेक नीति निर्णय उनीहरूको सहभागितामा लिने भएपछि मात्रै एउटा स्टेसनले समुदायको माया पाउन सक्छ । त्यसपछि निरन्तरतामा अवरोध आउने भन्ने नै हुँदैन । हिमचुली एफएमले सम्पूर्ण कार्यक्रमहरूको उत्पादन शैली परिवर्तन नगर्ने हो र समुदायका आवाजलाई पहुँच नदिने हो भने स्टेसनले निरन्तरता पाउनुको सट्टा प्रतिस्पर्धामै अल्मलिरहनु पर्ने हुन्छ ।

स्थानीय व्यापारीहरू हिमचुली एफएम सामुदायिक रेडियो हो त्यसैले विज्ञापन दिन पर्दैन भनेर टार्न खोज्छन् । स्टेसनले अहिले प्रायोजित कार्यक्रम, विज्ञापनबाट हुने आम्दानी र शेयरहोल्डरहरूको लगानीबाट खर्च धानिरहेको छ । आजको भोलि फाइदा पाइने आशामा लगानी गरेका अधिकांश शेयरधनीहरू ब्याज पाइनेसमेत कुनै संकेत नदेखेपछि आजकाल निस्क्रिय भएर बसेका छन् ।

लेखबहादुर गुरुङको निष्कर्ष छ "यो रेडियो भनेको त गजबको संसार रहेछ खोलेपछि बन्द गर्नै गाऱ्हो ।"

## ७. चुनौती र व्यवधान

हिमचुली एफएमका अगाडि चुनौती नै चुनौती छन् । स्टेसनका लागि सबैभन्दा ठूलो चुनौती भनेको नै हिमचुलीको पहिचान हो । कुनै निश्चित लक्ष्य र उद्देश्यबिना रकम बालुवामा पानी खन्याएसरह खन्याउँदै जाने हो भने स्टेसनले तेस्रो वर्ष त पार गर्ला तर तर चौथो वर्षदेखि चल्न सक्दैन । समुदायको सहभागिता र सहयोगबिना स्टेसनको भविष्य दिगो छैन भन्ने कुरा संस्थापकहरूलाई बल्ल महसुस हुन थालेको छ । स्टेसनका अगाडिका चुनौतीहरूलाई प्राविधिक, कार्यक्रम र संस्थागत गरी तीन वर्गमा राखेर हेर्न सकिन्छ ।

### *७.१ प्राविधिक चुनौती र व्यवधान*

- हिमचुली एफएमको भवन पोखरास्थित नयाँ बसपार्कको बीचमा छ । बिहान झिसमिसेदेखि नै बज्ने बसका प्रसर हर्न र घ्यार्रघुर्रर आवाजले काम गर्ने वातावरण नै छैन ।
- आर्थिक स्रोतको अभावका कारण जगेडा प्राविधिक सामानहरू उपलब्ध छैनन् । कार्यक्रम उत्पादन गर्नको लागि वैकल्पिक स्टुडियो छैन । स्थलगत अन्तर्वार्ता र सामग्रीहरू तयार पार्नका लागि फिल्ड रेकर्डर एउटा पनि छैनन् ।
- स्टेसन स्थापना गर्दा खरिद गरिएका एक सेट स्टुडियोका प्राविधिक सामानहरू पुराना भइसकेका छन् । एउटा सामान बिग्रिए पनि स्टेसन बन्द गर्नुपर्ने अवस्था आउन सक्छ ।

- वैकल्पिक ट्रान्समिटरको व्यवस्था गरिएको छैन । दैनिक १७ घन्टा प्रसारण हुने स्टेसनको ट्रान्समिटर जतिबेला पनि बिग्रन सक्छ ।
- वर्षेनी १५ प्रतिशतका दरले बढ्दै जाने घरभाडा स्टेसनले थेग्नै नसक्ने अवस्थामा छ । स्टेसनको आफ्नै भवन बनाउनु अहिलेको सबैभन्दा सजिलो विकल्प देखिए पनि आर्थिक स्रोतको अभाव त यथावत् नै छ ।

### ७.२ *कार्यक्रममा चुनौती*

- जसरी यो स्टेसन भवन बसपार्क नजिकै रहेको छ । त्यसरी नै स्टेसनमा काम गर्न आउने व्यक्तिहरूका लागि यो एफएम एउटा बसपार्क जस्तै भएको छ । आउने केही सयमको अनुभव बटुल्ने अनि आफ्नो भविष्यका लागि अन्तै जाने । यहाँको सबैभन्दा ठूलो चुनौती भनेको काम गर्न आउने जनशक्तिलाई लामो समयसम्म टिकाउन सक्नु ।
- तालिमप्राप्त जनशक्तिको अभाव पोखराका हरेक स्टेसनहरूलाई छ । हिमचुलीका लागि आफैं तालिमको व्यवस्था गरेर दक्ष जनशक्ति उत्पादन गर्न सक्ने अवस्था छैन । पोखराका स्थानीय तालिम केन्द्रहरूले उत्पादन गरेको जनशक्ति पनि गुणस्तरीय छैन ।
- रेडियोमा काम गरेर गुजारा चल्ने सक्ने अवस्था छैन । रेडियोमा बोल्ने रहर भएकाहरूलाई आफ्नो क्षमता परीक्षण गर्ने, सिक्ने ठाउँ भएको छ हिमचुली एफएम । अधिकांश व्यक्तिहरू अरुले रेडियोमा कार्यक्रम चलाएको सुनेको भरमा कार्यक्रम सञ्चालन गर्न इच्छुक भएको प्रस्ताव लिएर आउँछन् ।
- साँगीतिक कार्यक्रमकै भरमा चलेको यो रेडियो स्टेसनमा पर्याप्त गीतहरू छैनन् । भएका गीतहरू पनि लाइब्रेरीको उचित व्यवस्थापन हुन नसक्दा चोरी भएका छन् ।
- भौतिक अवस्था र सामानको अभावका कारण स्टेसन आफैंले कुनै कार्यक्रम प्रसारण पूर्व उत्पादन गर्न सक्दैन । कार्यक्रम प्रत्यक्ष चलाउनुपर्ने बाध्यताले कार्यक्रम उत्पादनको पाटो यहाँका रेडियोकर्मीले अझै बुझ्न सकेका छैनन् । उनीहरूलाई ज्ञान छ त केबल माइकअगाडि बसेर बोल्ने । हिमचुलीको अर्को चुनौती भनेको समुदायमुखी प्रसारण पूर्वकार्यक्रम उत्पादन गर्नु हो ।

### ७.३ *संस्थागत चुनौती*

वार्षिक २२४००० रुपैयाँ ट्रान्समिटरको तिर्नुपर्छ । नयाँ शेयर थप्ने योजना, अब ५० हजारको सट्टा १० हजार रुपैयाँ गर्ने र धेरैभन्दा धेरैलाई समेट्ने योजना । लाहुरेहरू आजको भोलि प्रतिफल खोज्ने भएकाले लगानी गर्न इच्छुक छैनन् ।

आफ्नै भवन बनाउने लक्ष्य । यसले मासिक घरभाडामा लाग्ने रकम पनि जोगाउन सकिने र एउटा स्थायित्व दिने । आफ्नै भवनको खाँचो छ । खर्च कसरी धान्ने भन्ने नै मूल समस्या हो । जहाँ पातलो उहीँ फाट्छ भनेजस्तो भएको छ हिमचुलीको हालत । सामान हराउने, लापरबाही हुने गरेको छ । दायित्वबोध न त समुदायलाई भएको छ न त यहाँ काम गर्नेहरूलाई । एकतले किन नहोस्, एकै रोपनीमा किन नहोस् घर त नबनाई सुखै छैन ।

घर बनाउन समुदायबाटै रकम उठाउने लक्ष्य छ तर त्योभन्दा अगाडि श्रोताको मन जित्नु आवश्यक छ । कार्यक्रम र सहभागिता दुवै हिसाबले हिमचुलीले श्रोताको मन जित्न बाँकी छ ।

लगानीको वितरण, अहिलेसम्म एकै जनाको शोखका कारण चलेको रेडियो स्टेसन । वर्षैपिच्छे ट्रान्समिटरको सवा दुई लाख रुपैयाँ राजस्व कसरी तिर्ने भन्ने समस्या हुन्छ । सदस्यता संख्या बढाउने । हाल २७ जना पुगिसक्यो । यसपालिदेखि संस्थागत सदस्यता पनि खुला गरिएको छ । नाफामूलक नभए पनि स्टेसन सञ्चालन गर्न र लगानीको व्याज उठाउनका लागि पनि आम्दानी दरिलो बजाउन जरुरी छ । स्टेसन अब तपाई कर्मचारीहरू मिलेर चलाउनुस्, हामीलाई नाफा पनि दिनु पर्दैन र लगानी गर्न पनि सकेसम्म नभन्नुस् भन्ने कुरा आएको छ ।

मार्केटिङ कमजोर छ । बजारमा प्रतिस्पर्धा छ विज्ञापनको रेट ८ रुपैयाँ प्रतिमिनेटसम्म पुगेको थियो । हिमचुलीलाई किन विज्ञापन दिने भन्ने प्रश्न गर्दा न व्यवसायीहरूसँग उत्तर छ त न स्टेसनसँग नै सामुदायिक रेडियो भन्नेबाहेक ।

लगानीकर्ताको व्याज पनि फिर्ता गर्न गाऱ्हो छ । १५ हजार मासिक भाडा तिर्नुपर्छ । बजारमा विज्ञापन दिँदैनन् घूस ख्वाउन पर्ने अवस्था छ विज्ञापन बजाउँदा । “चार हजारको कार्यक्रमका लागि प्रायोजन ल्याएर एक हजार बच्छ भने कसरी तलब ख्वाउने ?”

क्याम्पस पढ्ने विद्यार्थीहरूलाई पकेट खर्च र सीप दिएर कतिन्जेल चल्छ ?

तलब प्रमुखको सामान्य अधिकृत स्तरको र त्यसमुनिका पदहरूमा न्यूनतम तलब खाएर काम गरिरहेका छन् । उत्प्रेरणा के ?

स्थानीय बजारमा गएर पूर्णप्रतिस्पर्धाको आधारमा कार्यक्रम चलाउन सक्ने अवस्था छैन । माया गर्नेहरू केहीले मात्रै आफैं स्टेसनमा आएर दिने गरेका छन् ।

एउटा जातको एउटा वर्गमा मात्रै सीमित हुन खोजेको हो कि भन्ने आरोप अरु स्टेसनले लगाउँछन् । गुरुङहरूमात्रै ।  जातीय संस्थाहरू मगर, गुरुङ समाजबाट सहयोग पाइरहेको ।

स्थायी अर्थस्रोतको अभाव छ ।

# मैले अर्को पनि गल्ती गरें

**लेखबहादुर गुरुङ**

मैले जीवनका लगभग २०-२५ वर्ष राष्ट्रिय अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूमा काम गरें । शोख पूरा गर्ने हिसाबले पत्रकारिता गरें । पोखरामा साप्ताहिक पत्रिका चलाएँ । काठमाडौंबाट प्रकाशन हुने एउटा दैनिक पत्रिकामा लगानी गरेको रकम डुबेपछि अब पत्रिकामा कदापि लगानी गर्दिन भनेर कान समातेर बसेको थिएँ । तर पोखरामा एउटा रेडियो स्टेसन खोल्नुपर्छ भन्ने कुराहरू साथीहरूबाट आउन थाल्यो ।

रेडियो स्टेसन त खोल्ने तर कस्तो ? आफूलाई केही पनि थाहा थिएन । आवेदनका लागि सञ्चार मन्त्रालयमा जाँदा त्यतिखेरका सञ्चारमन्त्रीले समेत व्यापारिक स्टेसन बनाउनुस् लेखबहादुरजी भनेर भन्नुभएको थियो । धेरै साथीभाइले धेरै सल्लाह दिए । पोखराका अरु पनि व्यापारीहरूले एफएमका लागि निवेदन दिएका हुनाले सहकारी मोडलमा गइयो भने समुदायका विभिन्न व्यक्तिहरूलाई समेट्न सकिन्छ भन्ने कुरा आयो । यसैमा सहमति भएपछि सहकारी दर्ता गर्न चाहिने २५ जनाको नामावली तयार गर्न थालियो । रेडियो स्टेसनका लागि को-को सहयोगी हुन्छन् भन्ने नामावली तयार गर्दा शिक्षक, कलाकर्मी, इन्जिनियर, व्यापारी समाजसेवी, पत्रकार, राजनीतिज्ञ रोजियो । अनि सहकारी दर्ता गऱ्यौं ।

तर कुनै पनि सदस्यलाई रेडियोको बारेमा केही पनि थाहा थिएन । हामीले रेडियो स्टेसन खोल्नका लागि महिनाको ४-४ हजारको दरले ६ महिना लगाएर रकम जम्मा गरेर प्रसारण अनुमति लिनका लागि खर्च गऱ्यौं । ५ लाख रुपैयाँ, त्यो पनि घूसस्वरूप । स्टेसन स्थापना गर्न ३० लाख खर्च भयो । सामुदायिक रेडियोका लागि अनुमति लिँदा किन घूस ख्वाउनुपर्छ र ? भन्ने प्रश्न आउन सक्छ । तर हामीले न त सही मान्छेको सहयोग पायौं न त सल्लाह नै । हामी सुरुदेखि नै गलत व्यक्तिहरूको सल्लाहमा फस्यौं । सामुदायिक रेडियो सहयोग केन्द्र छ भन्ने कुरा त हामीलाई थाहै थिएन । खुट्टा चिप्लिएर जानुपर्ने ठाउँभन्दा बाहिर गइएछ ।

संस्थाको संरचना तयार पार्दा पनि अर्को गल्ती भयो । विदेशी कार्यालयमा बटुलेको अनुभव उपयोग गरेर हिमचुलीलाई पोखराको श्रेष्ठ स्टेसन बनाउँछु भन्ने लागेको थियो । तर, सोचेजस्तो हुन सकेन । शेयर सदस्यहरूमध्ये पत्रकारलाई कार्यक्रम प्रमुख बनायौं । त्यसैगरी बजार व्यवस्थापनको काम र स्टेसन प्रमुखको दायित्व अरु सदस्यलाई सुम्पियो । तर तलब थेग्न सकिएन । साथीहरूले तलब खान बैंकबाट लिएको ऋणसमेत मैले मेरो सम्पत्ति बेचेर तिर्नुपऱ्यो । यो भार थेग्न नसकेपछि पुरानो संरचना भत्काएर अहिले स्टेसनको जिम्मा नयाँ मान्छेलाई दिएका छौं । अहिले शेयरधनीले तलब लिएर स्टेसनको दैनिक काममा सहभागी हुन नपाउने निर्णय भएको छ ।

स्टेसनको विकाससँगै सहकारीका सदस्य बढाएर स्टेसनलाई अझ सहभागीमूलक बनाउँदै जानुपर्ने हो । अझ भन्नुपर्दा स्टेसनको सामुदायिकीकरण हुनुपर्ने हो । तर अहिले पुराना शेयरधनीहरू पनि निस्क्रिय जस्तै भएका छन् । यो रेडियो भन्ने चिज त गजबको रहेछ जति बुझ्यो त्यति गहिरो ।

# दृष्टिविहीनहरूले सञ्चालन गर्ने कार्यक्रम

# "दृष्टिचेतना"

श्रीकान्त सापकोटा

नमस्कार म श्रीकान्त सापकोटा । मेरो घर कास्की जिल्लाको थुमाकोटमा पर्छ । तर मेरो अहिलेको बसाईं पोखरामा छ । म अहिले उमेरले २० वर्ष भएँ । मेरो बुबाले अर्की आमा भित्र्याएपछि मेरी आमा पनि हैँलामा परिन् र म पनि । गाउँमा पढ्ने लेख्ने अवसर पनि नपाउने र यसै बसे पनि केही गर्न नसक्ने भएकाले म अवसरको खोजीमा पोखरा झरेँ । मेहनत गरियो, पढियो तर केही गरौं भन्ने मेरो भित्री चाहना बुझ्ने सजिलै भेटिएनन् । मेरो आवाज रेडियोबाट सुनेकै भरमा म कस्तो छु भन्ने तपाईले थाहा पाउन सक्नुहुन्न । तर मैले तपाईलाई चिन्ने माध्यम नै तपाईको आवाज हो । हामी आम्नेसाम्ने भयौं भने तपाईले मलाई देख्नुहुन्छ होला तर मैले देख्ने भनेको मेरो भित्री आँखाले मात्रै हो । यही आवाजले तपाई र हामीलाई नजिक ल्याएको छ । एकअर्काको मनको भावना बुझ्ने बनाएको छ ।

यही आवाजको माध्यम हो, रेडियो । तीन वर्षअघि पोखरामा एकैचोटि चारवटा एफएम स्टेसन खुले । त्यसपछि हामीलाई पनि लाग्यो हामीजस्ता दृष्टिविहीनहरूको आवाज रेडियोले सुन्नेछ र त्यो आवाज तपाईसम्म पुऱ्याउने छौं । यही अठोट बोकेर साथी रवि दवाडी र म स्टेसनहरू चहार्न थाल्यौं । माछापुच्छ्रे, अन्नपूर्ण र पोखरा एफएमले हाम्रो आवाज नसुनेपछि हामी हिमचुलीमा आइपुग्यौं । स्टेसनका अध्यक्ष लेखबहादुर गुरुङले हाम्रो प्रस्ताव सुनेपछि नमुना कार्यक्रम तयार गर्न लगाउनुभयो । २ दिन लगाएर तयार गरेको नमुना कार्यक्रम स्टेसनका सबै साथीहरूले मन पराएपछि नै सुरु भएको हो कार्यक्रम "दृष्टिचेतना" । दृष्टिविहीन आफैंले चलाएको यो पहिलो रेडियो कार्यक्रम हो ।

सुरुमा १५ मिनेट, आधा घन्टा हुँदै २०५९ वैशाखदेखि यो कार्यक्रम साप्ताहिक रुपमा एक घन्टा प्रसारण हुने गरेको छ । २०६० साउन महिनादेखि यो कार्यक्रम म र शोभा पौडेल मिलेर सञ्चालन गरिरहेका छौं । सुरु सुरुमा कार्यक्रममा समाचार र विभिन्न व्यक्तिहरूसँग कुराकानी समेटिने भए पनि अहिले यो कार्यक्रमको दायरा फरक भएको छ । अहिले कार्यक्रम अपांगहरूका कानुनी समस्या र समाधान खोज्न सघाउने, उनीहरूका लागि अवसर खोजिदिने थलो बनेको छ । यो कार्यक्रममा अपांगप्रति गरिने व्यवहार परिवर्तन गर्न विभिन्न व्यक्तिहरूसँगको कुराकानी पनि हामीले समेट्ने गरेका छौं । कार्यक्रम "दृष्टिचेतना" ले दृष्टिविहीनलगायत अरु अपांगहरूका हकअधिकारका कुरा, अपांगसम्बन्धी काम गर्ने गैरसरकारी संस्थाहरूका बारेमा जानकारी, स्वास्थ्य सल्लाह र ऊर्जा प्रदान गर्छ ।

ब्रेललिपि पढ्न निकै ढिलो हुने भएकाले हामीलाई आफूले सुनेका कुरा नै भन्नुपर्ने बाध्यता छ । सुरु-सुरुमा त हामी समाचारहरू क्यासेटमा रेकर्ड गरेपछि दोहोऱ्याइ-तेहऱ्याई सुन्थ्यौं अनि मात्रै प्रसारणमा जाने

आँट आउँथ्यो । तर अहिले स्टुडियोमा छिरेपछि एक घन्टा बितेको पत्तो नै हुँदैन । लेखेको कुरा कागजमा नहेरी भाषा मिलाएर बोल्ने क्षमता विकास गर्न मलाई ३ वर्ष लाग्यो ।

यो कार्यक्रमले दृष्टिविहीनहरूलाई हौसला गर्न सक्छौ भन्ने आँट दिएको छ । र, दृष्टिचेतनाको सफलता भनेकै यही हो । यो कार्यक्रम प्रसारण हुन थालेपछि पोखराकै अर्को स्टेसन अन्नपूर्ण एफएममा पनि दृष्टिविहीनहरूले केही समयका लागि कार्यक्रम सञ्चालन गरेका थिए । तर त्यो दिगो हुन सकेन । मैले सुनेको छु, हाल रेडियो सगरमाथा, मेट्रो एफएम र नेपाल वन टेलिभिजन च्यानलमा दृष्टिविहीनहरूले कार्यक्रम सञ्चालन गरिरहेका छन् ।

तीन वर्षको मेरो अनुभवमा यो कार्यक्रम सुनेर अभिभावकहरूमा अपांग छोराछारीप्रति गर्ने व्यवहार परिवर्तन हुन थालेको छ । अपांगहरूका हकअधिकार र कानुनी उपचारका उपायहरूका बारेमा जागरण ल्याएको छ । कार्यक्रममा आउने पत्र, टेलिफोन र प्रत्यक्ष भेटघाटका अवसरमा पाउने प्रतिक्रियालाई आधार मान्ने हो भने आफ्नो वर्गका मान्छेको स्तर र चेतना उकासिएको छ । सामाजिक व्यवहारमा परिवर्तन आएको र दृष्टिविहीनहरूको परिचय नै परिवर्तन भएको अनुभव हामीले गरेका छौं । तर हामी यत्तिमै सन्तुष्ट भने छैनौं । ठूलो परिवर्तनका लागि अझ धेरै गर्न बाँकी छ ।

# हिमचुली एफ.एम. ९२.२ मेगाहर्ज

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ५:३० | आध्यात्मिक उपासना | आध्यात्मिक उपासना | आध्यात्मिक उपासना | आध्यात्मिक उपासना | आध्यात्मिक उपासना | आध्यात्मिक उपासना | आध्यात्मिक उपासना |
| ५:४५-६:१५ | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन |
| ६:१५-६:३५ | हाम्रो खाल्डो सगरमाथा | हाम्रो खाल्डो सगरमाथा | हाम्रो खाल्डो सगरमाथा | हाम्रो खाल्डो सगरमाथा | हाम्रो खाल्डो सगरमाथा | हाम्रो खाल्डो सगरमाथा | हाम्रो खाल्डो सगरमाथा |
| ६:३५-७:०० | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान | स्वदेश गान |
| ७:००-७:१५ | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार |
| ७:१५-८:०० | गुरुङ भाष र संस्कृति | हिमचुली गेष्ट | मगर भाषा र संस्कृति | नेवारी कार्यक्रम | सहअस्तित्व सगरमाथा | आचार-विचार | आवाज |
| ८:००-९:०० | भञ्ज्याङका सुसेली | साहित्य यात्रा | भञ्ज्याङका सुसेली | भञ्ज्याङका सुसेली | भञ्ज्याङका सुसेली | भञ्ज्याङका सुसेली | दृष्टि चेतना |
| ९:००-९:१५ | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन |
| ९:१५-१०:०० | पोखरेली उडान | पोखरेली उडान | पोखरेली उडान | पोखरेली उडान | पोखरेली उडान | पोखरेली उडान | पोखरेली उडान |
| १०:००-११:०० | संगीत आभाशफेमस | संगीत आभाशफेमस | संगीत आभाशफेमस | संगीत आभाशफेमस | संगीत आभाशफेमस | संगीत आभाशफेमस | पप एस्प्रेस |
| ११:००-१२:०० | आहा नुडल्स प्रायोजन | हिमचुली फोन टाइम | हिमचुली फोन टाइम | हिमचुली फोन टाइम | हिमचुली फोन टाइम | हिमचुली फोन टाइम | जिनियस एकेडमी |
| १२:००-१२:१५ | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन |
| १२:१५-१:०० | म्यूजिकल बीट्स | म्यूजिकल बीट्स | सरगम | सरगम | सरगम | म्यूजिकल बीट्स | बाल आवाज |
| १:००-२:०० | वेस्टर्न ट्रयाक्स | वेस्टर्न ट्रयाक्स | वेस्टर्न ट्रयाक्स | वेस्टर्न ट्रयाक्स | वेस्टर्न ट्रयाक्स | वेस्टर्न ट्रयाक्स | वेस्टर्न ट्रयाक्स |

| | | | | | | | |
|---|---|---|---|---|---|---|---|
| २:००-२:१५ | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | वेस्टर्न ट्रयाक्स |
| २:१५-३:०० | तपाईको रोजाई | तपाईको रोजाई | तपाईको रोजाई | तपाईको रोजाई | तपाईको रोजाई | तपाईको रोजाई | मिक्स कलेक्शन |
| ३:००-४:०० | झरना र झंकार | संगीत रहर | म्युजिक एट थ्रि | म्युजिक एट थ्रि | म्युजिक एट थ्रि | म्युजिक एट थ्रि | तरङ्ग |
| ४:००-४:४५ | पप कलेक्सन | पप कलेक्सन | पप कलेक्सन | पप कलेक्सन | पप कलेक्सन | पप कलेक्सन | पप कलेक्सन |
| ४:४५-५:०० | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन |
| ५:००-५:३० | तपाइको चाहना | सीने महल | पुष्पाञ्जली | जनजाती मञ्च | हाम्रो स्वास्थ्य | छिनोफानो | मिक्स पप |
| ५:३०-६:०० | नारी आवाज | पहिचान | पुष्पाञ्जली | दर्पण | कृषि | बाल चेतना | स्वास्थ्य |
| ६:००-७:०० | गाउँ बेसी | गाउँ बेसी | गाउँ बेसी | गोधुली साँफ | गोधुली साँफ | चौतारी पेटीमा | आफ्नै भाखा |
| ७:००-७:१५ | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार | केन्द्रिय समाचार |
| ७:१५-७:३० | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत | राष्ट्रिय गीत |
| ७:३०-८:०० | सेरोफेरो | असल शासन | तपाइको समस्या | युवा खुल्दुली | प्रतिभा | बेनाम | तरेली |
| ८:००-८:३५ | कभी कभी | कभी कभी | कभी कभी | सांगीतीक स्पन्दन | सांगीतीक स्पन्दन | सांगीतीक स्पन्दन | सांगीतीक स्पन्दन |
| ८:३५-९:१५ | वीवीसी नेपाली सेवा | वीवीसी नेपाली सेवा | वीवीसी नेपाली सेवा | वीवीसी नेपाली सेवा | वीवीसी नेपाली सेवा | वीवीसी नेपाली सेवा | वीवीसी नेपाली सेवा |
| ९:१५-९:३० | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन | हिमचुली बुलेटिन |
| ९:३०-१०:०० | गाउँ खाने कथा | कुसुम | कुसुम | कुसुम | गजल ए सायरी | गजल ए सायरी | मनका कोशेली |

## १. ऐतिहासिक पृष्ठभूमि

नेपालमा सामुदायिक रेडियोको विकासका क्रममा काठमाडौंमा रेडियो सगरमाथाले सफलताको उदाहरण प्रस्तुत गरिसकेको थियो । समुदायका लागि समुदायबाट सञ्चालित रेडियो सगरमाथा समुदायका आवाज घन्काइरहेको थियो । यही क्रममा आफ्नो एउटा मिसन सफल भएपछि देशका विभिन्न भागमा सामुदायिक रेडियो अभियानलाई सहयोग पुऱ्याउने उद्देश्य राखेर नेपाल वातावरण पत्रकार समूहले २०५६ तिर आफ्नो सचिवालयमा सामुदायिक रेडियो सहयोग केन्द्र स्थापना गऱ्यो । यो केन्द्रले देशका विभिन्न भागमा सामुदायिक रेडियो स्थापनाका लागि प्रेरित गर्ने, सूचना तथा सञ्चार मन्त्रालयमा निवेदन दिन आवश्यक प्रस्ताव तयार गरिदिने, विशेषज्ञता र प्राविधिक सहयोग उपलब्ध गराउने कार्य सुरु गरिसकेको थियो । यही सहयोगकै क्रममा मणिग्राम, रुपन्देहीमा रेडियो लुम्बिनी र मदनपोखरा, पाल्पामा रेडियो मदनपोखराको प्रसारण सुरु भइसकेको थियो ।

देशकै ठूलो उपत्यका दाङ आमसञ्चारका माध्यमबाट अछुतो थिएन । दाङमा एउटा दैनिक, एउटा अर्धसाप्ताहिक र १० वटा साप्ताहिक पत्रिका प्रकाशित भइरहेका थिए । तैपनि दङ्गालीहरूले सुन्ने नेपाली रेडियो भने पर राजधानीको सिंहदरबारबाट प्रसारित राज्यद्वारा प्रसारित रेडियो नेपालमात्रै थियो । छिमेकी राष्ट्र भारतको उत्तर प्रदेश तथा बिहारमा सञ्चालित केही मिडियम वेभका हिन्दी तथा अन्य भारतीय भाषामा सञ्चालित रेडियोहरू दाङवासीका लागि वैकल्पिक रेडियो थिए । सर्टवेभमा सञ्चालित बीबीसी नेपाली सेवा, अल इन्डिया रेडियोको नेपाली सेवा, रेडियो चाइना तथा रेडियो मस्कोका नेपाली सेवा पनि दङ्गालीहरूले सुन्न सक्ने वैकल्पिक रेडियोहरू थिए ।

पत्रपत्रिकाको आर्थिक अवस्था कमजोर भएका कारण यिनको वितरण संख्या उल्लेख्य थिएन भने दाङ उपत्यकावासी गाउँले र विकट पहाडवासीहरूसमक्ष यी पत्रिका पुग्दैनथे । पत्रिकाको पहुँच भएका स्थानहरूमा पनि कमजोर आर्थिक अवस्था भएका व्यक्तिहरू पत्रिका पढ्नबाट वञ्चित नै थिए ।

राजधानी काठमाडौंबाट प्रसारित राज्यद्वारा सञ्चालित रेडियो नेपालले कालिमाटीको गोलभेंडाको भाउ प्रसार गर्थ्यो । काठमाडौंको मौसमको कुरा गर्थ्यो । काठमाडौंमा घाम झुल्किने र अस्ताउने समय सुनाउँथ्यो । दाङवासीहरू आफ्ना समस्या, अनुभव, विकास निर्माणका कुरा सुन्न पाउँदैनथे । पञ्चायतकालमा पञ्चायती व्यवस्थाले नेपाली माटोमा आफ्नो औचित्य पुष्टि गर्न पञ्चायतको जन्म दाङ देउखुरीको परम्परागत पञ्च राख्ने चलनबाट भएको हो भनेर प्रचार गर्ने क्रममा रेडियो नेपालबाट दाङको नाम सुनेका थिए भने पहिले राष्ट्रिय पञ्चायतमा अनि प्रजातन्त्रको पुनर्स्थापनापछि संसद्मा दाङका प्रतिनिधिले बोलेका केही अंश रेडियो नेपालबाट सुन्न पाउँथे । यसका लागि संसद् नै बसेको हुनुपर्थ्यो । राष्ट्रिय प्रसारण भएका कारण अघिपछि रेडियो नेपालले दाङका कुरा गर्न सम्भव पनि थिएन ।

बीबीसी नेपाली सेवालगायतका विदेशी रेडियोका अन्तर्राष्ट्रिय स्तरका आफ्नै एजेन्डा हुने भएका कारण दाङका कुरा उठाउने कुरै भएन । यो स्थितिमा समुदायले समुदायकै लागि सञ्चालन गर्ने र समुदायकै लागि समर्पित रेडियोको आवश्यकता दाङमा थियो । तर प्रविधिको ज्ञानका अभावमा दाङवासी यो सेवा सञ्चालन गर्ने सोचाइ बनाउन सकिरहेका थिएनन् ।

दाङमा रेडियोको कुरा गर्नुपर्दा स्थानीय युवा पत्रकार दधिराम सुवेदीको नाउँ आफैं जोडिएर आउँछ । दधिराम सुवेदी स्थानीय तहमा बसेर पत्रकारिता गर्ने क्रममा रेडियो नेपालबाट प्रसारित घटना र विचारमा दाङ प्रतिनिधिका रूपमा काम गर्नुहुन्थ्यो । मोफसलमा बसेर राजधानीमा मुकाम भएका सञ्चारमाध्यमलाई समाचार पठाउने स्थानीय पत्रकारहरूले भोगेको पीडा दधिराम सुवेदीका लागि पनि समान थियो- आफ्ना क्षेत्रका समाचारले स्थानै नपाउने, पाए पनि नाममात्रको । "घटना र विचारमा दाङको समाचार प्रसार भैदिए हुन्थ्यो भन्ने लाग्थ्यो तर सबैतिरका लागि भाग पुऱ्याउँदा प्राय: समय नै नपाइने । यसबाट मन दुख्थ्यो ।" त्यतिखेर मोफसलका अरु पत्रकारलाई जस्तै दधिराम सुवेदीसँग मन दुख्नेबाहेक अर्को विकल्प पनि थिएन ।

"२०५४ सालमा रेडियो सगरमाथाको प्रसारण काठमाडौंमा सुरु भएपछि बेलाबेलामा काठमाडौं जाँदा रेडियो सगरमाथा सुन्थें । यस्तै रेडियो दाङमा पनि बजे हुन्थ्यो भन्ने लाग्थ्यो तर कसरी के गरेर बज्ने भन्ने थाहा थिएन मनमा कुरा राख्दै फर्किन्थें," दधिराम सुवेदी रेडियो स्वर्गद्वारी सञ्चालनको बीउ विचारतिर फर्कनुपर्दा यसरी सम्झनुहुन्छ ।

काठमाडौंमा बसेर पत्रकारिता गरिरहनुभएका पत्रकार भगीरथ योगीसँग सरसल्लाह भयो । नेपाल वातावरण पत्रकार समूहमा सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक रघु मैनालीसँग भेटघाट भयो । उहाँहरूले रेडियो स्थापनाका लागि प्रेरणा थप्नुभयो र सहकार्यका लागि वचन दिनुभयो ।

दाङ उपत्यका दुई भागमा विभाजित छ । दक्षिणपट्टि देउखुरी र उत्तरपट्टि दाङ । दाङभित्र दुईवटा नगरपालिका अटाएका छन् । पूर्वपट्टि त्रिभुवननगर नगरपालिका र पश्चिमपट्टि तुल्सीपुर । रेडियो स्वर्गद्वारी त्रिभुवननगर नगरपालिकामा स्थापना गर्ने निर्णय भयो । त्यसका लागि स्वर्गद्वारी सञ्चार केन्द्र नामको गैरसरकारी संस्था गठन भयो । यही केन्द्रको स्वामित्वमा रेडियो स्वर्गद्वारी जन्मने पक्का भयो । घोराही दाङ जिल्लाको सदरमुकाम हो । सदरमुकाम घोराहीमै रेडियो स्वर्गद्वारी स्थापना गर्ने निर्णय भयो । कानुनी प्रक्रिया अघि बढ्यो । रेडियो स्वर्गद्वारी स्थापनाका लागि २०५७ असोज ५ गते सूचना तथा सञ्चार मन्त्रालयमा प्रस्तावसहित निवेदन दर्ता भयो ।

दाङवासीहरूमध्ये ठूलो संख्यामा रैथाने आदिवासी थारू जाति रहेका छन् भने उत्तरपट्टिका छिमेकी जिल्लाहरू: प्यूठान, रुकुम, सल्यान, रोल्पा आदिबाट बसाइँ सराइका क्रममा झरेका बाहुन, क्षेत्री, ठकुरी, मगर आदि धेरै पहिलेदेखि नै बसोबास गर्दै आएका छन् । रेडियो स्वर्गद्वारीले प्यूठानको चर्चित तीर्थस्थल स्वर्गद्वारीका नामबाट जुराइयो ।

जतिखेर दाङमा रेडियो स्वर्गद्वारी स्थापना गर्ने प्रयास दधिराम सुवेदीहरू गर्दैथिए, त्यति नै खेर ५ वर्षअघिदेखि राज्यविरुद्ध सशस्त्र लड्दै आएको नेकपा माओवादी दाङमा आक्रमण गर्ने तयारीमा जुटेको थियो । दाङ वास्तवमै माओवादीहरूको उद्गमस्थल र राजधानीका रूपमा चिनिँदै आएको थियो । माओवादीको प्रभावक्षेत्र दाङमा रेडियो स्थापना गर्दा के कस्ता बिघ्नबाधा आउन सक्लान् भन्ने अनुमानमात्रै थियो यसका संस्थापकहरूलाई ।

तर प्रसारण इजाजत पाएपछि जतिबेला रेडियो स्वर्गद्वारीले उपकरणसहितको इन्जिनियरहरूको टोली काठमाडौंबाट दाङ जान हिंड्यो, त्यही बेला माओवादीको सशस्त्र छापामार समूहले घोराहीमा आक्रमण गऱ्यो । त्यो दिन थियो २०५८ मंसिर ८ गतेको राति । त्यसपछि दाङ हिंडिसकेको टोली उपकरणसहित काठमाडौं फर्कियो । राजनीतिक स्थिति यस्तो थियो ।

# तेस्रो वर्ष पुगेको थाहै भएन

*दधिराम सुवेदी*
*स्टेसन म्यानेजर/अध्यक्ष*
*रेडियो स्वर्गद्वारी*

दाङ उपत्यकामा निजी क्षेत्रबाट सञ्चालित रेडियो "रेडियो स्वर्गद्वारी" को आवाज गुञ्जन थालेको २ वर्ष बितिसकेको छ । राजधानी काठमाडौंले उपभोग गर्दै आएको भौतिक सुविधा अत्याधुनिक र वैज्ञानिक प्रविधिसँग अपरिचित दाङ उपत्यका र आसपासको क्षेत्रमा बसोवास गर्ने सर्वसाधारण अहिले आफ्नो मालिक भएर राजधानीमा सीमित रेडियो प्रविधि सञ्चालन गर्न पाएकोमा खुसी छन् । सरकारी रेडियो "रेडियो नेपाल" को मात्र आवाज सुन्न विवश दाङ उपत्यकावासीले आज एफएम व्यान्डकै भए पनि आफ्नै भाषा, संस्कृति, आफ्ना मनका कुरा, आफ्नै वरिपरिका सरोकारका घटना सुन्न पाएका छन् ।

दाङ उपत्यकावासीका लागि यो अवसर सहज रूपमा प्राप्त भएको होइन । यसका लागि नेपाल वातावरण पत्रकार समूह/सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक रघु मैनाली र हाल बीबीसी नेपाली सेवामा कार्यरत पत्रकार साथी भगीरथ योगीको अविस्मरणीय योगदान रहेको छ । मोफसलमा रहेर छापा पत्रकारिता गर्ने व्यावसायिक पत्रकारको हैसियतमा र एउटै जिल्लाको बासिन्दा भएकाले उहाँहरूमध्ये भगीरथ योगीजीसँग मेरो निकै अघिदेखि चिनजान थियो । उहाँ काठमाडौंमा बसेर विभिन्न सञ्चारमाध्यममा रहेर पत्रकारिता गर्नुहुन्थ्यो । काठमाडौं आउँदा-जाँदा भेटघाट भई नै रहन्थ्यो । २०५६।५७ सालतिर कै कुरा हो, उहाँ दक्षिण एसियाकै पहिलो सामुदायिक रेडियो "रेडियो सगरमाथा" मा पत्रकारका रूपमा काम गर्नु हुन्थ्यो । त्यसबेला कुरैकुरामा दाङ उपत्यकामा पनि एउटा सामुदायिक रेडियो सञ्चालन गर्न पाए दाङवासीको सामाजिक चेतनाको स्तर उकासिन सक्थ्यो भन्ने हामी दुईबीच छलफल चलेको थियो । हाम्रो यो परिकल्पना सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक रघु मैनालीको सल्लाह, सुझाव, प्रोत्साहन पाएर साकार हुन सकेको थियो । उहाँले रेडियो सञ्चालनका लागि सरकारी स्वीकृति लिन पूरा गर्नुपर्ने औपचारिक कागजी प्रक्रियाबाहेक पनि विभिन्न क्षेत्रबाट प्राविधिक र आर्थिक सहयोगसमेत जुटाइदिएर तिरिनसक्नु गुण लगाउनु भएको छ ।

यसैगरी तत्कालीन जलस्रोत मन्त्री वलदेव शर्मा मजगैंयाले पनि दाङमा रेडियो सञ्चालन गर्न अनुमति दिलाउन आफ्नो राजनीतिक प्रभावलाई हतियारका रूपमा प्रयोग गर्नुपरेको थियो । उहाँले आफ्ना समकालीन सञ्चारमन्त्री जयप्रकाशप्रसाद गुप्तासँग निकैपटक भनसुन गर्नुपरेको थियो । त्यसबेलाका सञ्चारमन्त्री जयप्रकाश गुप्ता हाम्रो मागअनुसार दाङमा १०० वाटको रेडियो सञ्चालन गर्ने अनुमति दिन इच्छुक हुनुहुन्थ्यो । तर अर्कोतिर उहाँले सुनसरी जिल्लाको भेंडेटारका लागि कान्तिपुर एफएम प्रालिलाई १० किलोवाटको रेडियो प्रसारण गर्न पाउने अनुमति दिइसक्नुभएको थियो । सरकारी ओहोदाको आडमा सबैतिरका दबाब, आग्रहलाई तत्कालीन सञ्चारमन्त्री

गुप्ताले लत्याए पनि उहाँपछि सञ्चारमन्त्री हुन पुग्नुभएका शिवराज जोशीको सदाशयताले रेडियो स्वर्गद्वारी सञ्चालन गर्न सकिएको हो ।

आग्रह-पूर्वाग्रह नीतिगत प्रक्रिया आदि झैं-झमेला पार गरेर रेडियो स्वर्गद्वारी तेस्रो वर्ष प्रवेश गर्न सफल भएको छ । तर यसका अगाडि अफैं नीतिगत समस्या, आर्थिक समस्या, प्राविधिक समस्यालगायत नजानिँदो किसिमका राजनीतिक र सामाजिक समस्या तेर्सिएका छन् । गैरनाफामुखी भएको जान्दाजान्दै पनि नाफाका लागि खुलेका व्यापारिक रेडियोकै हारमा राखेर सरकारले सामुदायिक रेडियोहरूको इजाजतपत्र नवीकरण शुल्क तोकिदिनाले सामुदायिक रेडियो सञ्चालकहरूले निकै ठूलो आर्थिक संकट झेल्न परेको छ । कार्यक्रम उत्पादन खर्च, स्टेसन सञ्चालन खर्च, कर्मचारीलाई तलब, अन्य प्रशासनिक खर्च धान्न यस्ता सामुदायिक रेडियोको कुनै नियमित आर्थिक स्रोत हुँदैन । दान दातव्यमा नै भर पर्नुपर्ने स्थिति कायमै छ । जसले गर्दा रेडियो स्टेसनहरूको निरन्तरता अविच्छिन्नता वा स्थायित्वमाथि प्रश्न उठ्ने विडम्बनापूर्ण अवस्था हट्न सकेको छैन । यो नै नेपालमा हाल सञ्चालन भइरहेका सामुदायिक रेडियोको मुख्य समस्या हो ।

यसबाहेक स्थानीय तहमा राजनीतिक, वैचारिक सन्तुलन कायम राख्ने कार्य अर्को जटिल समस्या हो । प्रत्येक राजनीतिक दल आफ्नै इच्छा र स्वार्थअनुरूप रेडियो चलोस् भन्ने चाहन्छन् । त्यस्तै विविधतापूर्ण जातिगत, सांस्कृतिक स्वार्थ आदि बीच सन्तुलन कायम राख्ने चुनौती पनि विद्यमान छन् । यस्तै समस्याहरूबीच पनि रेडियो स्वर्गद्वारीले हाल दैनिक १० घण्टा कायर्मक्रम प्रसारण गर्ने गरेको छ । बिहान ६ देखि १० बजेसम्म र अपराह्न ३ देखि बेलुकी ९ बजेसम्म समाचार, सन्देश एवं सूचनासम्बन्धी र १ घण्टा गीतसंगीत दिइने गरिएको छ भने अपराह्न ३ देखि साँझ ५ बजेसम्म, ८ देखि ९ बजेसम्म गीतसंगीत र ५ देखि ८ बजेसम्म विभिन्न किसिमका कार्यक्रम दिइने गरिन्छ ।

२०५८ साल पुसदेखि दैनिकरूपमा लाग्ने गरेको कर्फ्यु रेडियोका लागि अब सामान्य भइसकेको छ । रेडियो स्वर्गद्वारी संकटकालमा स्थापना भयो, संकटकालमै हुर्कियो र संकटकालमै लोकप्रिय भयो पनि । त्यसैले रेडियो स्वर्गद्वारी नेपाल प्रेस इन्स्टिच्युटको “गोपालदास पत्रकारिता पुरस्कार” बाट सम्मानित पनि भयो ।

रेडियो स्वर्गद्वारी सञ्चालन भएपछि दाङमा सूचना, सन्देश र सही समाचार दिने आधिकारिक निकायका रूपमा परिचित भइसकेको छ । युगौंदेखि पिल्सिएका विधवा महिलाको हित संरक्षणका लागि सञ्चालित “अभियान” लाई रेडियो स्वर्गद्वारीले एउटा अभियानका रूपमा लिएको छ भने दाङका आदिवासी थारू समुदायको पहुँच रेडियो प्रविधिमा पनि होस् भनेर थारू भाषामा सञ्चालन हुने “कविला” दैनिक कार्यक्रमले थारू जातिका अत्यन्त उत्साह थपेको छ । सुरुमा १०० वाटको एउटा ट्रान्समिटरबाट सुरु गरेको रेडियो स्वर्गद्वारीसँग अहिले ५०० वाटको एउटा ट्रान्समिटर, २ वटा स्टुडियो र अन्य उपकरण प्रायः २-२ वटा भएका छन् । अब रेडियो स्वर्गद्वारी उपकरणका हिसाबले केही बलियो भएको छ ।

रेडियो स्वर्गद्वारी ५०० वाट पुगेपछि दाङका ४ छिमेकी जिल्ला सल्यानका २५ गाविस, रोल्पाका १५ गाविस, प्यूठानका १० गाविस र बाँकेका ८ गाविससम्म सुन्न सकिने भएको छ । जनसंख्याको दृष्टिकोणबाट ११ लाखसम्म श्रोता पुगेको छ । रेडियोबाट नेपाली अतिरिक्त थारू, खाम, अवधी भाषामा पनि कार्यक्रम प्रसारण हुने गरेको छ ।

रेडियो स्वर्गद्वारीले प्रसारण गर्ने कार्यक्रममा यहाँका श्रोताको अत्यन्त उत्साह रहेको छ । दैनिक करिब ५ सय चिठीहरू आउने गर्छन् रेडियोका लागि कार्यरत करिब ५२ जना सञ्चारकर्मीमध्ये २० जना स्वयंसेवक र १५ जना अल्पकालीन सञ्चारकर्मी छन् भने १७ जना पूर्णकालीन रहेका छन् । त्यसैगरी २० प्रतिशत महिलाका साथै थारू, मगर, क्षेत्री र दलित जातिका सञ्चारकर्मी पनि कार्यरत छन् ।

## १. दाङमा घन्कियो सर्वथा नौलो आवाज

२०५७ असोजमा निवेदन दिएपछि रेडियो स्वर्गद्वारीले इजाजतका लागि ६ महिना पर्खनुपऱ्यो । त्यतिखेर जयप्रकाशप्रसाद गुप्ता सूचना तथा सञ्चारमन्त्री थिए । उनको नाम घूस लिएरमात्रै लाइसेन्स दिने मन्त्रीका नाममा चर्चित भइसकेको थियो । उनी रहुन्जेल चलेको चर्चाअनुसार नै अन्य पहुँच नभएका संस्थाले जस्तै रेडियो स्वर्गद्वारीले पनि लाइसेन्स पाउन सकेन । तर मन्त्रिमण्डलमा आएको परिवर्तनका कारण शिवराज जोशी सूचना तथा सञ्चारमन्त्री बनेलगत्तै रेडियो स्वर्गद्वारीले प्रसारण इजाजत पायो । यसका लागि नेपाल वातावरण पत्रकार समूह/सामुदायिक रेडियो सहयोग केन्द्रले सरकारसमक्ष पेश गर्नुपर्ने निवेदनदेखि आर्थिक, व्यावसायिक र प्राविधिक प्रस्ताव तयार गरिदिने कार्य गऱ्यो । साथै व्यावसायिक र प्राविधिक सहयोग उपलब्ध गरायो । रेडियो सगरमाथाले एकजना उत्पादक र एकजना प्राविधिकलाई बखुण्डोल, ललितपुरस्थित आफ्नै स्टुडियोमा २ महिनासम्म नि:शुल्क तालिम दियो । यो तालिमपछि रेडियो स्वर्गद्वारीले सम्भावित कार्यक्रम उत्पादकहरूलाई खिप्ने काम भयो ।

२०५८ को मंसिरमै परीक्षण प्रसारण गर्ने सोचाइ भए पनि माओवादीद्वारा गरिएको दाङ आक्रमणपछि रेडियो स्वर्गद्वारीको परीक्षण प्रसारण पुससम्म धकेलियो । एन्टेना जोडिसकेको थिएन तर स्टुडियो निर्माण गरेको घरको छतमै एन्टेना अड्याएर परीक्षण प्रसारण गरियो ।

अन्तत: २०५८ पुस ९ गते दाङ उपत्यकामा सर्वथा नौलो र भिन्दै आवाज गुन्जियो- "यो राप्ती अञ्चलको दाङ जिल्लाको घोराहीबाट प्रसारण हुन लागको रेडियो स्वर्गद्वारी हो । यो रेडियो एफएम ब्यान्डमा १०२ दशमलव ८ मेगाहर्जमा सुन्न सकिन्छ । श्रोताहरू अहिले तपाईहरूले सुनिरहेको रेडियोमा एफएम लेखेको हुन्छ । त्यो एफएम लेखेको ब्यान्डमा राखेर रेडियोको मिटर घुमाउनुभयो भने १०२ र १०३ को छेउछाउमा यो रेडियो सुन्न सकिन्छ । कहाँकहाँ सुनिएको छ, त्यो कृपया फोन नम्बर ५६०१६४ मा खबर गरिदिनुहुन अनुरोध गर्दछौं ।"

त्यतिखेर जम्मा १५ जना दङगाली सञ्चारकर्मी रेडियो स्वर्गद्वारी सञ्चालन गर्न जुटेका थिए । नियमित तलबी सञ्चारकर्मीको संख्या भने केबल ८ थियो । रेडियो प्रसारणको पहिलो अनुभव स्टेसन म्यानेजर दधिराम सुवेदी यसरी व्यक्त गर्नुहुन्छ- "पहिलोपल्ट रेडियो बज्दा एक वर्षको थकान बिसाइयो जस्तो लाग्यो । एक वर्षभरिको दौडधूप र खटाइको एउटा चरण पूरा भयो जस्तो लाग्यो । पहिलो दिनको प्रसारणमा आवाज आयो कि आएन भनेर जाँच्न नारायणगोपालको स्वरमा एउटा गीत बजाइयो । बिहानको समय थियो । ९:३० देखि १० बजेसम्म लगातार गीत बजायौं । यो आधा घण्टाको बीचमा डेढ सय फोन स्टुडियोमा प्राप्त भए । हामीले सुन्यौं भनेर मान्छेले फोन गरे । हामीले विज्ञापन पनि गरेका थिएनौं । त्यसपछि स्वामी भागवतानन्द गिरीको आशीर्वचन प्रसार गरियो ।"

*(मध्यपश्चिमाञ्चल र सुदूर पश्चिमाञ्चलमा पर्ने जिल्लाहरू: दाङ, प्यूठान, रोल्पा, रुकुम, डोल्पा, मुगु, हुम्ला, कालिकोट, जुम्ला, जाजरकोट, सल्यान, बाँके, बर्दिया, दैलेख, बाजुरा, अछाम, डोटी, कैलाली, कञ्चनपुर, डडेलधुरा, बैतडी, दार्चुला र बझाङ)*

रेडियो स्वर्गद्वारी खुल्नुअघि मध्यपश्चिमाञ्चल र सुदूर पश्चिमाञ्चलमा स्वतन्त्र रेडियो नै थिएन । यसअर्थमा रेडियो स्वर्गद्वारी मध्यपश्चिमाञ्चल र सुदूर पश्चिमाञ्चलमै पहिलो स्वतन्त्र प्रसारण सेवा हुन पुग्यो ।

पहिलो दिनको प्रसारण रेडियो स्वर्गद्वारीले त्यही आधा घण्टामै बिसायो । अनि एन्टेना जोड्ने काम भयो । तीन दिनजति दैनिक २ घण्टामात्रै प्रसार भयो । त्यसपछि बिहान ६:३० देखि ९ सम्म र बेलुका ४ बजेदेखि ७ बजेसम्म गरी दैनिक साढे ५ घण्टा प्रसार हुन थाल्यो । फागुन ९ देखि यसले नियमित प्रसारण थाल्यो । अहिले रेडियो स्वर्गद्वारी दैनिक १० घण्टा प्रसार हुने गरेको छ ।

"रेडियो बज्न थालेपछि केहीले राम्रो भो भने तर केहीले चाहिँ यो २/४ दिनलाई त हो नि त्यसपछि बन्द भैहाल्छ नि पनि भने, तर रेडियो बन्द हुन दिएका छैनौं," स्टेसन म्यानेजर दधिराम सुवेदी भन्नुहुन्छ ।

## २. अभिप्रेरणा, लक्ष्य र उद्धेश्य

### २.१ *अभिप्रेरणा*

रेडियो सञ्चालनको अभिप्रेरणा के हो त ? भन्ने कुरा गर्दा रेडियो स्वर्गद्वारीका संस्थापक अध्यक्ष तथा स्टेसन म्यानेजर दधिराम सुवेदीको भनाइ यस्तो छ, "दाङको सौडियार गाविसअन्तर्गत चोर गाउँमा मेरो आफ्नो केही जग्गा थियो । धान भराउन म त्यहाँ जान्थें । कहिलेकहीं त्यही सुत्नुपर्थ्यो । त्यहाँ म देख्थें दिनरात आदिवासी थारूहरू काम गर्थे । उनीहरूमा सामाजिक चेतना थिएन । आफ्ना अधिकारका कुरा केही पनि थाहा पाउँदैनथे । सरसफाइ थिएन । झ्याउँझ्याउँ बच्चा कराउँथे । स्कुल पठाउने चलन थिएन । मलाई यिनका लागि के गर्न सकिन्छ होला भन्ने लाग्थ्यो । तर त्यतिकै त्यो सोचाइ दबेर बस्थ्यो । अर्कोचाहिँ मलाई रेडियो नेपालबाट मेरो जिल्ला दाङका कुरा आउन् भनेर लाग्थ्यो । तर त्यस्तो हुँदैनथ्यो । मलाई आफ्नै ठाउँमा रेडियो भैदिए कस्तो हुन्थ्यो जस्तो लाग्थ्यो । तर यो कुरा पनि मनमै दबेर बसेको थियो । काठमाडौंमा रेडियो सगरमाथा बजेको सुनेपछि र भगीरथ योगी अनि रघु मैनालीलाई भेटेपछि मेरा ती मनमै दबेका दुइटै इच्छा बढी जागेर आए र रेडियो स्वर्गद्वारी जन्मने आधार बने ।"

वास्तवमा सुरुमा रेडियो स्वर्गद्वारी स्थापनाको अभिप्रेरणा स्थानीय थारू जातिको अवस्था सुधार र स्थानीय पन भएअनुरूप नै अहिले यसले स्थानीय समाचार, कार्यक्रम, स्थानीय प्रतिभाको खोजी, संस्कृति र भाषाको उत्थान तथा स्थानीय समस्याको उजागर गर्ने र समाधान खोज्ने काम गरिरहेको छ। स्थानीय तहमा रहेको सुषुप्त चेतनालाई जगाउने कार्य गरिरहेको छ । स्थानीय जनताको बोलीको प्रतिनिधित्व गरिरहेको छ ।

### २.२ *लक्ष्य*

रेडियो स्वर्गद्वारीले आफ्नोबारेमा अहिलेसम्म कुनै आधिकारिक ब्रोसर वा पत्र तयार गरेको छैन । यसले आफ्नो लक्ष्य र उद्देश्य यो हो भनेर प्रकाशितसमेत गरेको छैन । तर यसका सञ्चालकहरू आफ्नै खालका लक्ष्यबाट प्रेरित रहेका छन् । रेडियो स्वर्गद्वारीका संस्थापक स्टेसन म्यानेजर र अध्यक्ष दधिराम सुवेदीका अनुसार यो रेडियोका लक्ष्य यसप्रकार छन्:

क) प्रजातन्त्रप्रति स्थानीय तहमा जनआस्था जगाउनु,
ख) मानवअधिकारको प्रसार-प्रचार गर्नु र यसप्रति सम्मान गर्ने वातावरण सिर्जना गर्नु,
ग) स्थानीय जनतामा आफ्नो अधिकार र कर्तव्यप्रति सचेत गराउनु,
घ) दाङको गौरव जनस्तरमा बाँड्नु र संस्कृति, भाषा र शैलीलाई बढावा दिनु र
ङ) समुन्नत मुलुक बन्न एउटा भए पनि इँटा थप्न प्रयत्नशील रहनु ।

२.३ *उद्देश्य*

रेडियो स्वर्गद्वारीले अपनाएका उद्देश्यहरू यस्ता छन्:
क) रेडियो प्रसारण प्रविधिसँग स्थानीय जनतालाई घुलमिल गराउने,
ख) अत्याधुनिक सञ्चारमाध्यम रेडियोको प्रयोग गरी जनतालाई तत्कालै सुसूचित गराउने,
ग) द्वन्द्व न्यूनीकरणमा सहयोग पुऱ्याउने,
घ) रेडियोलाई सबै वर्गका व्यक्तिहरूको साझा मञ्चका रूपमा विकास गर्ने,
ङ) स्थानीय तहमा सबैखालका नागरिक चेतना वृद्धि गराउने,
च) सरकार, स्थानीय निकाय र स्थानीय जनताबीच पुलको काम गर्ने,
छ) पिछडिएको थारू जातिको उत्थानमा सक्दो सहयोग गर्ने,
ज) स्थानीय भाषा, संस्कृति, कला, प्रतिभा, स्थानीयपन र गौरवको संरक्षण र प्रचार-प्रसार गर्ने,
झ) समाजलाई सकारात्मक परिवर्तनको दिशातिर अगाडि बढाउँदै स्थानीय विकास निर्माणका लागि अभिप्रेरणा जगाउने,
ञ) महिला अधिकार, लैंगिक समता, बालअधिकार, पिछडिएका वर्ग र जातिको उत्थान र अधिकार तथा सामाजिक न्यायका लागि वकालत गर्ने,
ञ) समाजलाई सदाचारी बनाई भ्रष्टाचारलगायतका विकृतिविरुद्धमा जनमत तयार गर्ने,
ट) स्वस्थ मनोरन्जन, सही सूचना र विश्लेषण प्रसार गरी जनताको सुन्न पाउने र जान्न पाउने मौलिक अधिकारलाई सहयोग पुऱ्याउने र
ठ) बहुदलीय प्रजातन्त्र र बहुलवादलाई बढावा दिने ।

## ३. संस्थागत संरचना

रेडियो स्वर्गद्वारी, स्वर्गद्वारी सञ्चार केन्द्रद्वारा सञ्चालित छ । केन्द्र एउटा गैरसरकारी संस्था हो । यो केन्द्रमा ४० जना सदस्य रहेका छन् । ९ सदस्यीय कार्यसमिति छान्नका लागि हरेक ५ वर्षमा निर्वाचन हुने गर्दछ । साधारणसभा संस्थाको सबैभन्दा शक्तिशाली निकाय हो भने संस्थाको कार्यकारी समितिले रेडियोको नीति तथा योजना तय गर्दछ । प्रबन्ध निर्देशक स्टेसन म्यानेजर रेडियोको कार्यकारी प्रमुख रहने व्यवस्था छ ।

*३.१ कार्यक्रम*

रेडियो स्वर्गद्वारी अहिले दैनिक १० घण्टा प्रसार भइरहेको छ । यसले आफ्नो १० घण्टे प्रसारणमा बिहान ६ देखि १० बजेसम्म र अपराह्न ३ देखि बेलुकी ९ बजेसम्म समाचार, सन्देश एवं सूचनासम्बन्धी कार्यक्रमहरू प्रसार गर्ने गरेको छ । अपराह्न ३ देखि साँझ ५ बजेसम्म र बेलुका ८ देखि ९ बजेसम्म गीत-संगीत प्रसार गर्ने गरेको छ । यसले साँझ ५ देखि ८ बजेसम्म भने विभिन्न सामाजिक कार्यक्रम प्रसार गर्ने गरेको छ । हास्यव्यंग्यात्मक कार्यक्रम च्वास्सचुस्स, थारू भाषाको दैनिक कार्यक्रम कविला निकै लोकप्रिय कार्यक्रम हुन् । रेडियो स्वर्गद्वारीले अहिले दैनिक ५ वटा समाचार बुलेटिन प्रसार गरिरहेको छ । यी बुलेटिनहरू बिहान ७:३० र ९:५५, दिउँसो ३:०० तथा बेलुकी ६:०० र ८:५५ बजे प्रसार हुने गर्दछन् । रेडियो स्वर्गद्वारीका समाचार सम्पादक विपुल पोखरेलको अनुभवमा रेडियो स्वर्गद्वारीले समाचार प्रसार गरेपछि त्यसको प्रभाव पर्ने गरेको छ । यसको उदाहरण दिँदै उहाँ भन्नुहुन्छः "केही दिनअगाडिको घटना हो । वनसम्बन्धी एउटा समाचार हामीले प्रसारण गऱ्यौं र त्यहाँ काठ चोरी भएको, अवैधानिक काम भएको भन्ने समाचार प्रसारण भयो । र, त्यसमा स्वयं वन कार्यालयका डीएफओको पनि संलग्नता छ भन्ने कुरा हाम्रो स्रोतले भेट्टायो । त्यो समाचार हामीले प्रसारण गऱ्यौ । त्यसको भोलिपल्टै त्यसमा संलग्न भनिएका डीएफओले आफ्ना वन प्राविधिकहरूलाई २४ घण्टे पुर्जी काटेर आफू चोखिने प्रयास गरे ।"

साथै रेडियो स्वर्गद्वारीले बालबालिकालाई समेटेर कार्यक्रम सञ्चालन गर्ने गरेको छ । साहित्य, सुशासन, आध्यात्मिक, स्वास्थ्य, वातावरण, कृषि, संस्कृति र पर्यटन, दलित आदि जस्ता विषयमा समेत यसले कार्यक्रम उत्पादन प्रसारण गर्ने गरेको छ । कार्यक्रम च्वास्सचुस्सका सञ्चालक अमर सुवेदीका अनुसार यो र्यक्रमले उठाएका समस्याबाट जनता सुसूचित भएका छन् र त्यस्ता समस्याको समाधान गर्ने प्रयास स्थानीय निकायहरूले गर्ने गरेका छन् । जस्तैः बिग्रेको बसपार्कबारे कार्यक्रममा आवाज उठाएपछि बसपार्कका खाल्डाखुल्डी पुरिए । भत्केको बाटोबारे कार्यक्रमबाट जानकारी दिएपछि बाटो बन्यो । कार्यक्रमको प्रभावकारिताबारे अर्को उदाहरण दिँदै सञ्चालक अमर सुवेदी भन्नुहुन्छ, "दाङस्थित नापी शाखामा एक कर्मचारीले ५०० रुपैयाँ घूस लिएको थाहा पायौं । त्यसपछि हामीले कार्यक्रमबाट भन्यौं, ए भाइ ! यो के गरेको ! ५०० रुपैयाँ पनि घूस लिने । काम पनि नगरिदिने ? यो के गरेको ? अर्को दिन त त्यो कर्मचारीले पैसा पनि फर्काइदिएछ । काम पनि तुरुन्तै गरिदिएछ ।"

थारू भाषामा सञ्चालित दैनिक कार्यक्रम कविलाको प्रभाव थारू समुदायमा निकै सशक्त छ । दाङको वसन्तपुर निवासी ३० वर्षीय किसान विजय चौधरी दैनिक ४ घण्टा रेडियो स्वर्गद्वारी सुन्ने गर्नुहुन्छ । उहाँ भन्नुहुन्छ, "यो रेडियोले हाम्रा आफ्ना कुरा भन्छ । म समाचार, सूचना र गीतका लागि रेडियो सुन्छु । यो रेडियोले ज्ञान, सूचना र मनोरन्जन दिन्छ । हाम्रो चेतनाको स्तर बढाउन पनि यसले सघाएको छ । हाम्रा साना केटाकेटीलाई विद्यालयमा भर्ना गर्न यसले हौसला दिएको छ ।

रेडियो स्वर्गद्वारीका स्टेसन म्यानेजर दधिराम सुवेदीका अनुसार, कविला कार्यक्रमले थारू जातिमा हौसला थपेको छ । आफ्नो अधिकार र कर्तव्यबारे उनीहरू सजग भएका छन् ।

रेडियो सगरमाथाले तयार गरेको बिहान ६:१५ बजेको पत्रपत्रिकाको सँगालो रेडियो स्वर्गद्वारीले सोझै प्रसार गर्दछ । यसबाट भोलिपल्टमात्रै राष्ट्रियस्तरका अखबार पुग्ने दाङमा बिहान सबेरै ओछ्यानमै ताजा खबर सुनेर तरुताजा बन्ने बानी बसेको छ । स्टेसन म्यानेजर दधिराम सुवेदीका अनुसार, पत्रपत्रिकाको सँगालोको प्रशंसा र सान्दर्भिकतालाई लिएर दैनिक दशौंपटक फोन आउने गरेका छन् । गैरसरकारी संस्था महासंघ जिल्ला शाखा दाङका सभापति नवराज लामिछानेका अनुसार, रेडियो स्वर्गद्वारीले सामुदायिक सचेतना, ज्ञानबर्द्धक सामग्री र देश

विदेशका ताजा समाचार प्रसार गर्ने भएकाले समुदायलाई ठूलो गुन लागेको छ । उहाँको विचारमा यसले मान्छेको सोचाइमा सकारात्मक परिवर्तन ल्याएको छ ।

नेपाल महिला संघकी केन्द्रीय सदस्य अनिता देवकोटाका अनुसार, रेडियो स्वर्गद्वारी स्थानीय सञ्चार सम्प्रेषणको प्रभावकारी माध्यम बनिसकेको छ । यसले लैंगिक विभेदका विरुद्ध मानिसहरूमा सकारात्मक सोच र व्यवहारको विकास गर्न थालेको छ । देवकोटाले राजनीतिक र अन्य सामाजिक विषयहरूमा समेत कार्यक्रमहरू प्रसार गर्नुपर्ने सुझाव दिनुभएको छ ।

रेडियो स्वर्गद्वारीका स्टेसन म्यानेजर दधिराम सुवेदी कार्यक्रमहरूको विश्वसनीयताबारे जोड दिँदै भन्नुहुन्छ, "हामीले प्रसार गरेको सामग्रीलाई श्रोताहरू लालमोहरका रूपमा लिन्छन् । यसैले हाम्रो दायित्व पनि अझै बढेको छ ।"

यसले नेपाली र थारूका अतिरिक्त खाम र अबधी भाषामा समेत कार्यक्रम प्रसार गरिरहेको छ ।

### ३.२ *जनशक्ति*

रेडियो स्वर्गद्वारीमा अहिले ५७ जना रेडियोकर्मीहरू रहेका छन् । यीमध्ये २० जना पूर्णकालीन कर्मचारी छन् भने बाँकी स्वयंसेवक छन् । यी सञ्चारकर्मीहरूमा जातीय र लैंगिक सन्तुलन मिलाउन खोजेको देखिन्छ । तर लैंगिक हिसाबले पुरुष सञ्चारकर्मीको तुलनामा महिलाको संख्या भने थोरै रहेको छ । कार्यक्रम उत्पादक र सञ्चालकहरूमा जातीय विविधतासमेत दिन खोजेको पाइन्छ । थारू, दलित र जनजातिको समेत प्रतिनिधित्व हुने गरी कार्यक्रम समूह निर्माण गरिएको छ ।

तर उपयुक्त तालिमको अभावमा यो जनशक्ति अर्धदक्ष अवस्थामा रहेको छ । केहीसँग कार्यक्रमबारे ठीकै अनुभव भए पनि धेरैसँग कार्यक्रम उत्पादन र सञ्चालनसम्बन्धी ज्ञान र अनुभवको अभाव छ । स्टेसन म्यानेजर दधिराम सुवेदी भन्नुहुन्छ, "सुरुमा त हामीले कोरा जनशक्तिबाट प्रसारण थालेका हौं । त्यो हेरी त अहिले धेरै जान्ने भएका छौं तर राजधानीभन्दा धेरै टाढा रहेर स्टेसन सञ्चालन गर्नुपर्दा उपयुक्त तालिम पाउन नै गाऱ्हो छ । त्यसमाथि राजधानीबाट आएका विशेषज्ञहरूबीच पनि मतैक्यता नहुँदा झनै अन्योलमा पारिदिन्छ ।" तैपनि उहाँ क्रमैसँग क्षमता विकास गर्दै लैजाने आफ्नो योजना रहेको बताउनुहुन्छ । रेडियो सगरमाथा र सामुदायिक रेडियो सहयोग केन्द्र (नेपाल वातावरण पत्रकार समूह) ले सुरुदेखि नै रेडियो स्वर्गद्वारीको जनशक्तिलाई तालिम दिँदै आएका छन् । तर उपयुक्त सन्दर्भ व्यक्ति र सामग्रीमा पहुँचको अभाव आदि कारणले जनशक्ति चुस्त हुन नसकेको धारणा काम गर्ने सञ्चारकर्मीहरूमा रहेको पाइन्छ ।

पूर्णकालीन सञ्चारकर्मीहरूमा भन्दा स्वयंसेवकहरूमा रेडियोसम्बन्धी अनुभवको कमी रहेको पाइयो । स्वयंसेवकहरू आ-आफ्ना क्षेत्रमा कार्यरत रहेका र फुर्सद पाएको समयमा कार्यक्रम सञ्चालन गर्ने भएकाले उनीहरूमा विषयगत ज्ञान राम्रो भए पनि उत्पादन तथा प्रसारण कलामा तुलनात्मक अभाव पाइयो ।

सञ्चारकर्मीहरूले नियुक्तिपत्र पाउनुपर्छ भन्ने कुरा काठमाडौंमा अनिवार्य बनेको भए पनि दाङमा मौखिक सम्झौताकै भरमा काम चलेको छ । कागजको नियुक्तिभन्दा पनि मुखको बचनका भरमा सञ्चारकर्मीहरूले काम गरिरहेका छन् । नियमित रूपमा कर्मचारी बैठक बस्ने गर्दैन न त कसैको कार्यक्षेत्र तोकेर दिइएको छ । कर्मचारी

नियुक्तिसमेत कुनै लिखित प्रक्रियामा आधारित भएर गर्ने परम्पराबाट रेडियो स्वर्गद्वारी मुक्त छ । न त कुनै लिखित सम्पादकीय नीति नै तय भइसकेको छ । तैपनि सबैले आ-आफ्नो काम नियमित रूपमा गरेकै छन् । कुनै सञ्चालक नआएर कार्यक्रम रोकिएको वा कुनै सञ्चालकले आफ्नो दायरा नाघेको घटना पनि अहिलेसम्म घटेको छैन । दधिराम सुवेदीका शब्दमा यो कागजको घुमाउरो भाषामा बरालिएको भन्दा पनि विश्वासको मजबुत डोरीमा बाँधिएको उदाहरण हो । यो सामुदायिक रेडियोमा समुदायको एकापसको विश्वासको उत्तम उदाहरण हो । सुविधाको हिसाबले हेर्ने हो भने पनि यो जनशक्ति अति नै न्यून सुविधामा काम गरिरहेको छ । यी अप्ठ्यारा हुँदाहुँदै पनि कार्यरत जनशक्तिमा हौसला भने ओइलाएको पाइँदैन बरु मौलाएकै देखिन्छ ।

## ४. श्रोता

रेडियो स्वर्गद्वारीका श्रोतालाई भौगोलिक, जातिगत, धार्मिक, सांस्कृतिक, भाषागत, पेशागत र उमेर समूहका आधारमा छुट्याएर हेर्न सकिन्छ । भौगोलिक हिसाबले हेर्ने हो भने यसका श्रोता दाङवासी र दाङका ४ छिमेकी जिल्ला सल्यान, रोल्पा, प्यूठान र बाँकेका बासिन्दा हुन् । दाङका अतिरिक्त सल्यानका २५ गाविस, रोल्पाका १५ गाविस, प्यूठानका १० गाविस र बाँकेका ८ गाविसका बासिन्दालाई रेडियो स्वर्गद्वारीले सेवा पुर्‍याइरहेको छ । जनसंख्याको दृष्टिकोणबाट कुरा गर्दा करिब ११ लाख श्रोता यसले कमाएको छ ।

भाषिक हिसाबले हेर्दा रेडियो स्वर्गद्वारीका श्रोता नेपाली, थारू, खाम र अबधी भाषीहरू हुन् । जातिका हिसाबले पनि रेडियो स्वर्गद्वारीका श्रोतामा विविधता पाइन्छ । पहाडी जिल्लाहरूमा मगरको बाहुल्य छ भने उत्तरी दाङमा छ्यासमिस बसोबास रहेको छ । तर दक्षिणी दाङमा भने थारूको बाहुल्य छ । बाहुन, क्षेत्री छरीबरी रहेका पाइन्छन् । दाङको मात्रै कुरा गर्ने हो भने २०५८ को जनगणनाअनुसार, २,३४,१३३ महिला र २,२८,७६३ पुरुष रहेका छन् । यो जनसंख्याको करिब ३३ प्रतिशत त थारूहरू रहेका छन् । यसरी रेडियो स्वर्गद्वारीका श्रोताहरूमा सामुदायिक, भाषिक, धार्मिक, सांस्कृतिक र भौगोलिक विविधता व्यापक रूपमा रहेको छ । त्यसैले आफ्ना कार्यक्रमहरूमा भाषिक, सांस्कृतिक र सामुदायिक विविधतालाई समेट्न सक्नु रेडियो स्वर्गद्वारीका लागि चुनौती र अवसर दुवै हो ।

उमेरका हिसाबले हेर्दा यसका श्रोता आम रेडियोका जस्तै बालबालिका, किशोर, युवा, प्रौढ र वृद्ध रहेका छन् । लिंगगत रूपमा विभाजन गर्दा महिला र पुरुष दुवै रेडियोका श्रोता हुन् । पेशागत हिसाबले कुरा गर्ने हो भने रेडियो स्वर्गद्वारीका श्रोता किसान, विद्यार्थी, गृहिणी र कर्मचारी र व्यापारी मूलरूपमा रहेका छन् । उद्योग धन्दा, कलकारखाना, बन्दव्यापार, सरकारी कार्यालयहरूको संख्या पर्याप्त छैन । दाङको मात्र कुरा गर्ने हो भने २०-२२ वटा अधिकृत बिक्रेता पसलहरू नै दाङको बन्दव्यापारका सूचक हुन् । मुख्य खेती धान हो र अधिकांश श्रोता यस अर्थमा किसान नै हुन् ।

रेडियो स्वर्गद्वारीले आफ्ना कार्यक्रमबाट यी सबै वर्ग, पेशा र समूहलाई समेट्न खोजेको छ । स्टेसन म्यानेजर दधिराम सुवेदी भन्नुहुन्छ, साधन-स्रोतको अभावमा पनि सकेसम्म सबैलाई समेट्न खोजेका छौं ।

रेडियो स्वर्गद्वारीलाई श्रोताबाट आउने प्रतिक्रिया पनि ठूलो मात्रामा छ । दैनिक ५०० भन्दा बढी पत्र श्रोताबाट आउँछन् र यस्ता पत्र सबै क्षेत्र, वर्गबाट आउँछ । तर उमेर समूहका हिसाबले हेर्दाचाहिँ किशोर र युवा

सबैभन्दा सक्रिय श्रोता बनेका छन् । पत्र लेख्ने र फोन गर्ने ठूलो संख्या यिनैको छ । पत्रहरू बढी आफ्नो साहित्यिक कृति पठाउन र गीत सुन्न अनुरोध गर्दै आउने गरेको अनुभव दधिराम सुवेदीसँग छ ।

## ५. सामुदायिक सहभागिता

रेडियो स्वर्गद्वारीले सामुदायिक सहभागितालाई कार्यक्रममा समेट्ने प्रयास गरेको छ। यसका लागि समाजका विभिन्न क्षेत्रलाई कार्यक्रममा स्थान दिने नीति यसले लिएको छ । स्टेसन म्यानेजर दधिराम सुवेदीका अनुसार, थारू, दलित, मगर, अवधी भाषी समुदाय, बालबालिका, महिला आदि वर्गलाई कार्यक्रमका माध्यमबाट समेट्ने गरिएको छ । यसका अतिरिक्त स्थानीय नगरपालिका, जिल्ला विकास समिति, विभिन्न सरकारी र गैरसरकारी स्थानीय संघ-संस्थाको समेत कार्यक्रम उत्पादन र प्रसारणमा संलग्नता रहेको छ ।

यसबाहेक समुदायका विभिन्न व्यक्तिहरूले स्टेसन धाएर र फ्याक्स, फोनमार्फत आफ्ना गतिविधिबारे जानकारी दिने गरेको पाइयो । सम्पादक विपुल पोखरेलका अनुसार, दैनिक ६० देखि ८० वटासम्म फ्याक्स प्राप्त हुने गर्दछन् । यीमध्ये कुनै भावी कार्यक्रमबारे निम्तो हुने गर्छन् त कुनै भइसकेका कार्यक्रमका खबरहरू । यस्तै फोनबाट आफ्नो पनि समाचारमा नाम राखिदिन आग्रह गर्नेहरूको संख्या पनि ठूलै हुँदो रहेछ । समाचार कक्षमा काम गर्ने सञ्चारकर्मीहरूको बाध्यता के छ भने एउटा कार्यक्रममा ३०/४० जनासम्मले बोलेको समाचार रहेछ भने ती सबै आफ्नो नाम दिन दबाब दिन्छन् । सानो समुदाय भएकाले सबैसँग व्यक्तिगत हुने चिनजानका कारण पनि सबै यस्तो दबाब आउने गरेको र टार्न गाऱ्हो हुने गरेको स्टेसन म्यानेजर दधिराम सुवेदीको कथन छ ।

पत्रमार्फत हुने सहभागिता पनि ठूलो रहेको छ । दैनिक ५०० भन्दा बढी आउने पत्र व्यवस्थापन गर्न स्टेसनले सकेको छैन । सबै पत्र खोलेर हेर्न नभ्याइने भएकाले कैयौं पत्र खोल्नसमेत नसकिएको स्टेसन म्यानेजर दधिराम सुवेदी बताउनुहुन्छ । स्टेसन परिसरको एउटा कुनामा दैनिक एक डोकोभन्दा बढी पत्र डढाउने गरिन्छ (प्राप्त पत्रहरू स्टेसनका सम्पत्ति हुन् भन्ने थाहा भए पनि पत्र राख्नेसमेत ठाउँ नभएकाले डढाउनुपरेको हो," स्टेसन म्यानेजर सुवेदी लाचारी व्यक्त गर्नुहुन्छ । रेडियो स्वर्गद्वारीले आफ्नो व्यवस्थापनमा समेत समुदायका विभिन्न व्यक्तिहरूलाई सहभागी गराएको छ । रेडियो स्वर्गद्वारीको साधारणसभामा जनजातिका तर्फबाट ४, दलितका तर्फबाट १ जनाको सहभागिता छ । कार्यसमितिमा भने ३ जना महिला समाहित हुनुहुन्छ । तर साधारणसभाको संख्या उल्लेख्य ठूलो भने छैन । धेरै व्यक्तिलाई व्यवस्थापनमा राख्दा विभिन्न खाले समस्याहरूको सामना गर्नुपर्ने सम्भावना भएकाले समुदायका बढीभन्दा बढी सदस्यलाई व्यवस्थापनमा संलग्न गराउन नसकिएको दधिराम सुवेदी बताउनुहुन्छ । ४० जना साधारण सदस्यहरू नै रेडियो स्वर्गद्वारीको व्यवस्थापनका असली हकदार हुन् । कार्यरत सञ्चारकर्मीहरूमा सामुदयिक सहभागितालाई केलाउँदा दलित, थारू, मगर, यादव समुदायका ९ व्यक्तिहरू कार्यक्रम निर्माण र सञ्चालनमा संलग्न छन् ।  समग्र सञ्चारकर्मीहरूमध्ये ९ जना महिला रहेका छन् ।

स्टेसन म्यानेजर दधिराम सुवेदीसँग सामुदायिक सहभागितासम्बन्धी एउटा तीतो अनुभवसमेत छ । रेडियो स्वर्गद्वारी स्थापना गर्ने क्रममा समुदायका विभिन्न व्यक्तिहरूलाई संलग्न गराएर एउटा सल्लाहकार समिति

बनाइयो तर त्यो समितिमा भएका मान्छेहरू कहिल्यै पनि चासो देखाएनन् । "रेडियो प्रसारण हुन थालेपछि हामीले पनि उनीहरूलाई बिर्सियौं," सुवेदी भन्नुहुन्छ ।

## ६. स्टेसनको निरन्तरता

रेडियो स्वर्गद्वारी सञ्चालन गर्ने तयारी गर्दा यसका सञ्चालकहरूमा यो निरन्तर चल्न सक्ला कि नसक्ला भन्ने द्विविधा थियो । रेडियो स्वर्गद्वारीलाई सुरुदेखि नै सहयोग गर्दै आएको सामुदायिक रेडियो सहयोग केन्द्रका संयोजक रघु मैनालीलाई पनि एउटा चिन्ताले सताएको थियो- रेडियो स्वर्गद्वारी सुरु भएपछि यसको निरन्तरता कसरी होला ? उद्योग, व्यापारको पर्याप्त आधार नभएको दाङमा रेडियोको निरन्तरता वास्तवमै यसका सञ्चालकहरूका अगाडि ठूलो चुनौती खडा भएको थियो । "सुरुमा त मलाई डर थियो, चलाउन नसकिने हो कि ?" स्टेसन म्यानेजर दधिराम सुवेदी भन्नुहुन्छ ।

तर आज स्थिति त्यस्तो छैन । रेडियो स्वर्गद्वारी अहिले सुचारु रूपले सञ्चालन भइरहेको छ । यसको मासिक खर्च सरदर १ लाख ७ हजार रुपैयाँ लाग्ने गरेको छ । मासिक आम्दानी भने १ लाख ५ हजारदेखि १ लाख २० हजारजति रहेको छ । यसरी हेर्दा आम्दानीले राम्ररी उत्पादन र प्रसारण खर्च धान्न सकेको छ । यस अर्थमा रेडियो स्वर्गद्वारी आत्मनिर्भरताको नजिक छ भन्न सकिन्छ ।

स्थानीय सानो बजारले रेडियो स्वर्गद्वारीलाई आत्मनिर्भरताको बाटोमा ठूलै सहयोग गरेको छ । स्थानीय बजारबाट मात्रै महिनाको सरदर ७५ हजार रुपैयाँ उठ्ने गर्छ । स्थानीय तहमा रहेका संघ-संस्था, सरकारी कार्यालयबाट समेत रेडियोलाई कार्यक्रम उत्पादन/प्रसारणमा सहयोग पुगेको छ ।

समग्र आम्दानीको ५० प्रतिशत विज्ञापनबाट उठ्ने गरेको छ भने कार्यक्रमबाट ५० प्रतिशतजति आम्दानी उठ्ने गरेको छ । सरकारी कार्यालयबाट वार्षिक ५ लाख रुपैयाँ जतिको सहयोग प्राप्त हुन्छ । मासिक रूपमा ढालेर हेर्ने हो भने ४५ हजारभन्दा बढी । दाङमा तुल्सीपुर र त्रिभुवननगरका शहरी क्षेत्रमा मासिक ५ लाखजति आम्दानी गर्न सक्ने करिब २५ वटा जति डिलरहरू छन् । यस्तै मासिक १ लाख रुपैयाँ आम्दानी गर्ने व्यापारिक संस्थाहरूको संख्या ५० जति छ । यिनबाट रेडियोलाई मासिक ५० हजार रुपैयाँ जति आम्दानी हुने गर्छ । दाङको मात्रै कुरा गर्दा एउटा जिल्ला विकास समिति, २ वटा नगरपालिका, स्वास्थ्य, कृषि, महेन्द्र संस्कृत विश्वविद्यालयलगायतका ५० वटा जति सरकारी र अर्धसरकारी कार्यालय रहेका छन् । युनिसेफले समेत रेडियोलाई आर्थिक सहयोग गरिरहेको छ ।

तर यो सहयोग र आम्दानीमा रेडियो स्वर्गद्वारीको व्यवस्थापन सन्तुष्ट छैन । कार्यरत सञ्चारकर्मीहरूको तलब सार्है न्यून छ, उपकरणहरूको जगेडा छैन, पर्याप्त फिल्ड रेकर्डर छैनन्, प्रसारण समय अझै थप्नुपर्ने माग श्रोताहरूबाट आइरहेको छ । यी सबै पूरा गर्न वर्तमान आम्दानीले भ्याउँदै भ्याउँदैन, हाम्रो चिन्ताको विषय यही हो, रेडियो स्वर्गद्वारीका स्टेसन म्यानेजर दधिराम सुवेदी भन्नुहुन्छ ।

रेडियो स्वर्गद्वारीले काठमाडौंबाट रेडियो सगरमाथाबाट समेत कार्यक्रम र आर्थिक सहयोग पाउँदै आएको छ । यस्तै एन्टेना उत्पादनगृह र प्रो-पब्लिकबाट समेत स्वर्गद्वारीले यस्तो सहयोग नियमित पाउँदै आएको छ ।

अहिले तुल्सीपुरमा अर्को रेडियो स्टेसन खुल्दैछ । पहिले एउटै रेडियो स्टेसन नभएको दाङ अब दुईवटा रेडियोको मालिक बनेको छ । भोलि अरु पनि खुल्न सक्ने सम्भावना छँदैछ । यो एक ढंगले खुसीको कुरो हो ।

तर यो खुसीसँगै एउटा चिन्ता पनि रेडियो स्वर्गद्वारीका सञ्चालकहरूमा पलाएको छ । कतै अन्य रेडियो स्टेसन खुलेपछि हामीले प्राप्त गरेको सहयोग भाग लागेर बाँडिने त हैन ? बजारको विस्तार नहुनु तर रेडियोको संख्या थपिनुले, यो चिन्ता रेडियो स्वर्गद्वारीका अगाडिमात्रै हैन, नवस्थापित रेडियो सञ्चालकहरूका अगाडि पनि निरन्तरताका लागि प्रश्नवाचक चिन्ह भएरै खडा भएको छ ।

## ७. चुनौती र व्यवधान

सबै खालका सुविधा र अवसर केन्द्रीकृत भएको हाम्रो सामाजिक र राजनीतिक संरचनामाझ मोफसलमा बसेर रेडियो सञ्चालन गर्नु आफैंमा एउटा चुनौतीपूर्ण काम हो । उपकरणमा सानो समस्या आयो भने पनि मर्मतका लागि दौडाएर राजधानीका प्राविधिककहाँ पुऱ्याउनुपर्छ । "एउटा सानो पेच-किला खुस्के पनि राजधानी पुऱ्याउनुपर्छ," स्टेसन म्यानेजर दधिराम सुवेदीको दु:खेसो हो यो । वास्तवमा मोफसलमा रेडियो सञ्चालन गर्दा आइपर्ने चुनौती थरीथरीका छन् । प्राविधिक, व्यावसायिक, आपसी प्रतिस्पर्धा, राजनीतिक, आन्तरिक सशस्त्र द्वन्द्व, सुरक्षा निकाय, स्थानीय प्रशासन, गुणस्तर निर्धारण र व्यवस्थापन यी सबै रेडियो स्वर्गद्वारी सञ्चालनका क्रममा चुनौती बनेर खडा भएका छन् ।

### *७.१ प्राविधिक चुनौती र व्यवधान*

रेडियो स्वर्गद्वारी सुरु गर्न लाग्दा नै पहिलो व्यवधान खडा भयो । २०५८ साल मंसिर ८ गते राति नेकपा माओवादीको सशस्त्र समूहले घोराहीमा आक्रमण गरी सेनाको व्यारेक लुटेपछि काठमाडौंबाट जडानका लागि प्रविधि र प्राविधिकसहित रघु मैनालीको नेतृत्वमा हिंड्न लागेको टोली काठमाडौंमै रोकियो । २०५९ को हिउँदमा ट्रान्समिटर पड्क्यो र १० दिन प्रसारण रोकियो । नेपाल वातावरण पत्रकार समूह/रेडियो सगरमाथाको सहयोगमा वैकल्पिक ट्रान्समिटरको व्यवस्था गरियो र फेरि प्रसारण सुरु भयो । मिक्स्चर जलेर २ दिन जति फेरि प्रसारण रोकियो ।

प्रविधिमा सामान्य गड्बढी भयो भने पनि काठमाडौंमै लगेर बनाउनुपर्ने काठमाडौं बाहिरका स्टेसनहरूको बाध्यता नै हो । कार्यक्रम उत्पादन र प्रसारण एनालग प्रणालीबाटै भैरहेको छ । कार्यक्रम उत्पादनका लागि स्टुडियोको पर्याप्त व्यवस्था अझै हुन सकेको छैन । स्टुडियोका उपकरणहरू एउटा सामुदायिक रेडियोले खरिद गर्न सक्ने न्यूनतम मूल्यका छन् भने सहयोगबाट प्राप्त उपकरणहरू पनि सामान्य गुणस्तरका सस्ता खालका छन् । साथै स्टुडियो ध्वनि व्यवस्थापनका हिसाबले पूर्णवैज्ञानिक ढंगको स्टुडियो बनाउन सकेको छैन । जसले गर्दा कार्यक्रम उत्पादन र प्रसारणको प्राविधिक गुणस्तरमा स्टेसनले एक हदसम्म सम्झौता गर्नुपरेको छ ।

### *७.२ कार्यक्रममा चुनौती*

कार्यक्रमका हिसाबले समेत रेडियो स्वर्गद्वारीले चुनौती व्यहोर्नुपरिहरेको छ । गाउँघरमा रहेका कोरा व्यक्तिहरूलाई सामान्य तालिम दिएर प्रसारण सुरु गरेको रेडियो स्वर्गद्वारीका लागि दक्ष जनशक्तिको अभाव छँदैछ । कार्यरत जनशक्तिले सकेजति कार्य गरिरहेको छ । तर पनि उपयुक्त तालिम र अवसरका अभावमा यो प्रयास

व्यावसायिक दक्षताभन्दा पनि भावनामा बढी आधारित छ । उपयुक्त रेकर्डका साधन छैनन्, जसले गर्दा जनताको आवाज रेकर्ड गरेर बटुल्न गाऱ्हो भइरहेको छ ।  भएका अधिकांश रेकर्डर पनि पूर्णव्यावसायिक खालका नभई अर्धव्यावसायिक खालका छन्, जसको प्राविधिक गुणस्तर कमजोर रहने गरेको छ । यसले कार्यक्रमको गुणस्तर खस्काएको छ । माओवादी प्रभावका कारण गाउँ-गाउँमा गएर जनताको आवाज लिन सक्ने स्थिति पनि नभएको कार्यक्रम उत्पादकहरूको अनुभव छ । अर्कोतिर यातायात सुविधाको अभाव त छँदैछ ।

कार्यक्रममा प्रशासन र माओवादी विद्रोहीहरूको दबाब सोझै पर्ने गरेको छ । घरी माओवादीको, घरी सुरक्षाफौजको खप्की र दबाब खप्नुपरेको गुनासो स्टेसन म्यानेजर दधिराम सुवेदीको छ । स्टेसन सुरु भएको केही दिनमै नेकपा माओवादीको धम्कीपूर्ण पत्रले रेडियो स्वर्गद्वारीका सञ्चालकहरूलाई झस्काएको थियो । सो धम्कीपत्रमा सरकारी सूचनाहरू नदिन र माओवादीले सञ्चालन गरेका कार्यक्रमहरूको समाचार र सूचना दिन दबाब दिइएको थियो । सरकारी सूचना दिँदा माओवादी चिढिने, माओवादीका सूचना र गतिविधि प्रसारण गर्दा स्थानीय प्रशासन र सुरक्षाफौज चिढिने । एकातिर राज्यले नेकपा माओवादीलाई आतंककारी घोषणा गरी उनीहरूका सकारात्मक अर्थ आउने सामग्री प्रसार गर्न नपाइने उर्दी जारी गरेको अवस्था र अर्कोतिर नेकपा माओवादीले आफ्नो राजधानी घोषणा गरेको ठाउँ दाङमै रेडियो रहनु ।  यसरी हेर्दा रेडियो स्वर्गद्वारीले दुईवटा सरकारबाटै बच्नुपर्ने चुनौती भोगेको प्रष्टै देखिन्छ । सरकार रिसाए रेडियो बन्द गरिदिने डर, माओवादी रिसाए सैनिक व्यारेक सुरक्षित हुन नसकेको ठाउँमा रेडियो र यसका सञ्चालक सुरक्षित हुन सक्ने कुरै भएन । "कुनै पक्षका पनि नकारात्मक हुने खालका सामग्री दिनै सकिँदैन, तुरुन्तै प्रतिक्रियाको सामना गर्नुपर्छ", स्टेसन म्यानेजर दधिराम सुवेदी भन्नुहुन्छ ।

दाङमा रेडियो स्वर्गद्वारी कर्फ्युभित्रै जन्म्यो र कर्फ्युभित्रै हुर्किरहेको छ । अहिले पनि बेलुका ८ बजेदेखि बिहान ४ बजेसम्म दाङ दैनिक कर्फ्यु खपिरहेको छ र यसको प्रत्यक्ष असर स्वर्गद्वारीले भोग्नुपरिरहेको छ । अहिले रेडियो स्वर्गद्वारी दैनिक १० घण्टा प्रसार हुने गर्छ । कर्फ्युको समयभित्र पनि रेडियो प्रसार हुन्छ । यसले गर्दा हरेक राति ४ जना कर्मचारी स्टेसनमै बस्नुपर्छ । उनीहरूको खानपिनको खर्च स्टेसनले नै व्यहोनुपर्छ । बस्ने व्यवस्था पनि मिलाउनु नै पऱ्यो । राति प्रशासनले फोन लाइन काटिदिने गर्छ । जसले गर्दा राति कहीं केही घटना भयो भने समाचार संकलन र पुष्टि गराउन सकिँदैन । अर्कोतिर काठमाडौंमा हुने राजनीतिक घटना जान्न सबै लालायित हुन्छन् । यी घटनाबारे जानकारी लिन ट्रंकल गर्नुपर्छ । यसका लागि पनि महिनाको २० हजार रुपैयाँ खर्च हुने गुनासो स्टेसन म्यानेजर दधिराम सुवेदीको छ ।

अर्को चुनौती कार्यक्रमको आवश्यकता पहिचान गर्न गाऱ्हो पर्नु हो । कस्तो खालको कार्यक्रमको आवश्यकता छ भनेर अनुसन्धान गर्न स्टेसनले सकेको छैन ।  श्रोताका पत्र सम्पत्ति हुन् तर तिनको व्यवस्थापन गर्न पनि रेडियो स्वर्गद्वारीले सकेको छैन ।

### *७.३ संस्थागत चुनौती*

रेडियो स्वर्गद्वारीको अर्को चुनौती भनेको संस्थागत विकास हो । अहिले कार्यक्रमबाहेक अन्य शाखाको विकास स्टेसनले गर्न सकेको छैन । स्टेसनमा प्रशासन शाखाको अस्तित्व छैन भन्दा हुन्छ । लेखा, प्रशासकीय र बजार व्यवस्थापनका कार्य स्टेसन म्यानेजर स्वयंले गरेको देखिन्छ । स्टेसनमा स्वागत कक्ष छैन । फोन उठाउनेसमेत

निश्चित कर्मचारी छैन । बजार व्यवस्थापनसम्बन्धी शाखा कार्यरत छैन । सामान्यतया कार्यक्रम उत्पादक र सञ्चालकहरू उत्पादनको काममा व्यस्त हुने गर्छन् भने म्यानेजर उत्पादनदेखि प्रशासनिक, लेखा, बजार व्यवस्थापन, विज्ञापन संकलनजस्ता अन्य सबै कार्यमा संलग्न हुने गरेका छन् । पहिलो त यससम्बन्धी दक्ष मान्छे नै नपाइने पाइहाले पनि पैसा तिर्न नसकिने भएकाले सबै काम आफैंले गर्नुपरेको तर्क दधिराम सुवेदी गर्नुहुन्छ । कार्यक्रम र समाचारदेखि सबै काममा प्रत्यक्ष संलग्न हुनु स्टेसन म्यानेजर दधिराम सुवेदीको दिनचर्या बनेको छ ।

कार्यक्रम र समाचारको गुणस्तर वृद्धिका लागि नियमित बैठक हुनु जरुरी हुन्छ । तर रेडियो स्वर्गद्वारीमा नियमित सम्पादकीय बैठक हुने गरेको छैन । एकएकसँग हुने भेटघाटमै भन्नुपर्ने कुरा भनिन्छ, व्यक्तिगत हिसाबले हुने भेटघाटमै कामका समेत कुरा हुने गर्छन् । कार्यक्रमका बारे खुलेर एकअर्काबीच कमीकमजोरी औंल्याउने गरी उत्पादकहरूको बैठक बस्दैन । सुझावहरू दिँदा उत्पादकहरूले निजी रूपमा लिने डरका कारण व्यक्तिगत सुझाव दिन अर्को उत्पादक उत्प्रेरित नहुनु स्वाभाविकै हो । कार्यक्रमहरूको रणनीति तय हुँदैन । बढीजसो व्यक्तिगत प्रयासले कार्यक्रम सञ्चालन भइरहेका हुन्छन् ।

तर समग्रमा भन्नुपर्दा रेडियो स्वर्गद्वारीले छोटो समयमा दाङवासीका मनमा डेरा जमाउन सफल भएको छ । ठाउँ, परिवेश र थरीथरीका चुनौती र व्यवधान व्यहोर्दै अगाडि बढिरहेको छ । दाङ र वरपर रेडियोको असली स्वाद चखाउने पहिले रेडियो नै रेडियो स्वर्गद्वारी हो । यो स्थानीय जनताको जीवनमा एउटा आवश्यकता बनिसकेको छ । तर सिक्नु र गर्नुपर्ने कार्य धेरै छन् । सञ्चालकहरूले त्यो बुझ्न सके यसको भविष्य सुनिश्चित छ ।

# रेडियो स्वर्गद्वारीको
# साप्ताहिक प्रसारण तालिका

## विहान

| समय | आईतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ५:५५ - ६:०० | स्टेशन परिचय | स्टेशन परिचय | स्टेशन परिचय | स्टेशन परिचय | स्टेशन परिचय | स्टेशन परिचय | स्टेशन परिचय |
| ६:००-६:१५ | प्रवचन | प्रवचन | प्रवचन | प्रवचन | प्रवचन | प्रवचन | प्रवचन |
| ६:१५-६:३० | अखवार कार्यक्रम | अखवार कार्यक्रम | अखवार कार्यक्रम | अखवार कार्यक्रम | अखवार कार्यक्रम | अखवार कार्यक्रम | अखवार कार्यक्रम |
| ६:३०-७:०० | भक्ति साधना | भक्ति साधना | भक्ति साधना | भक्ति साधना | भक्ति साधना | भक्ति साधना | भक्ति साधना |
| ७:००-७:१५ | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार |
| ७:२०-७:३०५ | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर |
| ७:३०-७:३५ | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज |
| ७:३५-८:०० | च्वास्स चुस्स | स्वास्थ्इ तथा सरसफाई | महिला संसार | संस्कृति र पर्यटन | वन र वातावरण | रेडियो पत्रिका इन्द्रैणी | साहित्य सृजना |
| ८:००-९:०० | तपाइको आवाज | आहा म्यूजिक | साथीसँ मनका कुरा | अपाङ्ग जागरण/जनस्वास्थ्य<br>सखि-सहेलर (अवधि भाषा)<br>डाभुम्का (खाम भाषा) | मोवाईल सह-अस्तित्व | संगित लहर | भाका बोल्छ |
| ९:००-९:५५<br>९:५५-१०:०० | राप्तीको फाँठ<br>स्वार्गद्वारी बुलेटीन | गिताञ्जली<br>स्वर्गद्वारी बुलेटीन | तपाइको चाहना<br>हाम्रो शुभकामना | सिनोयात्रा | तपाइको चाहना<br>हाम्रो शुभकामना | साताका दश थुङ्गा | चौतारी |

## साँझको

| समय | आइतवार | सोमवार | मंगलवार | बुधवार | विहिवार | शुक्रवार | शनिवार |
|---|---|---|---|---|---|---|---|
| ३:००-४:०० | संगीत बहार | युवा पुस्ता | संगम सौगात | गीत गुञ्जन | रोजाइका गीत | तपाईको शन्देस | जीवन संगीत |
| ४:००-५:०० | संगीत सरोवर | लोक शुसेली | लोक शुसेली | लोक शुसेली | लोक शुसेली | लोक शुसेली | हटलाइन |
| ५:००-५:१५ | कोपिला | कोपिला | कोपिला | कोपिला | कोपिला | कोपिला | गोरेटो |
| ५:१५-५:४० | शुभसन्ध्या गीत संगीत | शुभसन्ध्या गीत संगीत | शुभसन्ध्या गीत संगीत | शुभसन्ध्या गीत संगीत | शुभसन्ध्या गीत संगीत | शुभसन्ध्या गीत संगीत | ईंङलिस वाइ रेडियो |
| ५:४०-६:०० | कविला | कविला | कविला | कविला | कविला | कविला | कविला |
| ६:००-६:१५ | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर | खोजखबर |
| ७:३०-७:३५ | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज | दाङमा आज |
| ६:१५-७:०० | शान्ति अभियान<br>हाम्रो नगर | आजक कुरा | कृषि/सचेतना/<br>तुलसीपुर नपा | आजक कुरा | अर्थ बजार/सरोकार | आजक कुरा | शैक्षिक जागरण<br>दाङको सेरोफेरो |
| ७:००-७:२० | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार | रेडियो नेपाल समाचार |
| ७:२०-७:५० | छिनोफानो | असल शासन | चिरफार | पुराना कुरा<br>हमार सैडाना (थारु) | शाहारा/हमार सैडान<br>(थारु) | विश्वचक्र/हमार सैडान<br>(थारु) | दलित आवाज<br>रेडियो सहभागिता |
| ८:००-८:१५ | जीवनयात्रा | स्पन्दन | स्पन्दन | कलइन | स्पन्दन | स्पन्दन | स्पन्दन |
| ८:५५-९:०० | स्वर्गद्वारी बुलेटिन | स्वर्गद्वारी बुलेटिन | स्वर्गद्वारी बुलेटिन | स्वर्गद्वारी बुलेटिन | स्वर्गद्वारी बुलेटिन | स्वर्गद्वारी बुलेटिन | स्वर्गद्वारी बुलेटिन |

